आस्वाद, श्रवण र घ्राण हुँ । अतएव समस्त इन्द्रियहरूको इन्द्रिय म हुँ ॥ ३६ ॥ पृथिवी, वायु, आकाश, जल, तेज, महत्तत्त्व, पञ्चमहाभूत, जीव, प्रकृति, सत्त्व, रज, तम तथा ब्रह्म–यी सबै पनि एकमात्र म हुँ ॥ ३७ ॥ तत्त्वहरूको गणना, लक्षणद्वारा तिनको ज्ञान तथा उनको निश्चय पनि म नै हुँ । ईश्वर जीव गुण-गुणी एवं सर्वात्मा र सर्वरूप म बाहेक अरु कुनै पनि पदार्थ कहीं छैन ॥ ३८ ॥ केही कालमा परमाणुहरू त म गन्न सक्छु तर करोडौं ब्रह्माण्डको रचना गर्ने म आफ्ना विभूतिहरू गन्न सक्तिन ॥ ३९ ॥ जुनसुकै प्राणीमा तेज, श्री, कीर्ति, ऐश्वर्य, लज्जा, त्याग, सौन्दर्य, सौभाग्य, पुरुषार्थ, तितिक्षा र ज्ञानादि श्रेष्ठ गुण देखिन्छन्, ती सबै मेरा नै अंश जान ॥ ४० ॥ यी सबै विभूतिहरू मैले तिमीलाई संक्षेपमा भनेको हुँ, तापनि यी मनोविकार नै हुन्, किनकि ती वाणीले भन्न सकिन्छ ॥४१॥ तिमी वाणी, मन, प्राण र इन्द्रियहरूलाई जित । आफ्नू बुद्धिलाई आफ्नै आत्माद्वारा जित र यस्तो गर्नाले फेरि कहिल्यै तिमी आवागमनको चक्रमा पर्दैनौ ॥ ४२ ॥ जुन विचारवान प्राणी बुद्धिद्वारा वाणी र मनको पूर्णतया संयम गर्दैन, त्यसको व्रत, तप र ज्ञान

आपो ज्योतिरहं महान् ॥ विकारः पुरुषोऽव्यक्तं रजः सत्त्वं तमः परम् ॥ ३७ ॥ अहमेतत्प्रसंख्यानं ज्ञानं तत्त्वविनिश्चयः ॥ मयेश्वरेण जीवेन गुणेन गुणिना विना ॥ सर्वात्मनाऽपि सर्वेण न भावो विद्यते क्वचित् ॥ ३८ ॥ संख्यानं परमाणूनां कालेन क्रियते मया ॥ न तथा मे विभूतीनां सृजतोऽण्डानि कोटिशः ॥ ३९ ॥ तेजः श्रीः कीर्तिरैश्वर्यं ह्रीस्त्यागः सौभगं भगः ॥ वीर्यं तितिक्षा विज्ञानं यत्र यत्र स मेंऽशकः ॥ ४० ॥ एतास्ते कीर्तयः सर्वाः संक्षेपेण विभूतयः ॥ मनोविकारा एवैते यथा वाचाऽभिधीयते ॥ ४१ ॥ वाचं यच्छ मनो यच्छ प्राणान्यच्छेन्द्रियाणि च ॥ आत्मानमात्मना यच्छ न भूयः कल्पसेऽध्वने ॥४२॥ यो वै वाङ्मनसी सम्यगसंयच्छन्धिया यतिः ॥ तस्य व्रतं तपो ज्ञानं स्रवत्यामघटाम्बुवत्॥४३॥तस्मान्मनोवचःप्राणान्नियच्छेन्मत्परायणः ॥ मद्भक्तियुक्तया बुद्ध्या ततः परिसमाप्यते॥४४॥इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे षोडशोऽध्यायः॥१६॥

उद्धव उवाच ॥ यस्त्वयाऽभिहितः पूर्वं धर्मस्त्वद्भक्तिलक्षः ॥ वर्णाश्रमाचारवतां सर्वेषां द्विपदामपि ॥ १ ॥ यथाऽनुष्ठीयमानेन त्वयि भक्तिर्नृणां भवेत् ॥ स्वधर्मेणारविन्दाक्ष तत्समाख्यातुमर्हसि ॥ २ ॥ पुरा किल महाबाहो धर्मं परमकं प्रभो ॥ यत्तेन हंसरूपेण ब्रह्मणेऽभ्यात्थ माधव ॥ ३ ॥ स इदानीं सुमहता कालेनामित्रकर्शन ॥ न प्रायो भविता मर्त्यलोके प्रागनुशासितः ॥ ४ ॥ वक्ता कर्ताऽविता नान्यो धर्मस्याच्युत

काँचो गाग्रोमा भरेको जल झैं क्षणिक हुने गर्दछ ॥४३॥ अतएव मेरो भक्तियुक्त बुद्धिमा वाणी, मन र प्राणीको संयम गरोस् । यस्तो गरिसकेपछि फेरि उसले अरु भन्नु केही शेष रहन्न अर्थात् त्यो कृतकृत्य हुन्छ ॥४४॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'वासुदेव' भाषाटीकायां षोडशोऽध्यायः ॥ १६ ॥

(वर्णाश्रम,धर्मको वर्णन )–उद्धव भन्दछन्–हे कमल-नयन ! आफ्नू भक्तिस्वरूप जुन धर्म हजुरले वर्णाश्रम-धर्मको आचरण गर्ने र अरु पनि सबैको निम्ति भन्नुभयो, त्यसको अनुष्ठान गर्नाले हजुरमा जसरी मनुष्यको भक्ति हुन सक्तछ, त्यो भन्नोस् ? ॥१-२॥हे माधव ! पूर्वकालमा हजुरले हंसरूपले ब्रह्मालाई जुन धर्मको उपदेश दिनुभएको थियो । हे शत्रुदमन ! धेरै काल भइसकेकोले हजुरको त्यो अनुशासनस्वरूप धर्म अब मर्त्यलोकमा प्रायः हराइसक्यो ॥३-४॥ अच्युत ! पृथ्वीतलमा र ब्रह्माको सभामा जहाँ कि सबै वेदमूर्तिमान भई विराजमान

छन्, हजुरको त्यस धर्मको वक्ता, निर्माता र रक्षक अरु कोही छैन। हे मधुसूदन ! त्यस धर्मका वक्ता, कर्ता र रक्षक हजुर जब पृथ्वीबाट जानु हुनेछ, अनि यो नष्ट प्राय धर्मको उपदेश अरु कसले दिनेछ ? ॥ ५ ॥ अतः हे सर्वधर्मज्ञ प्रभो ! हजुरको भक्तिस्वरूप त्यस धर्मको जसको-निम्ति जस्तो विधान छ त्यो भन्नुहवस् ॥ ७ ॥ शुकदेवजी भन्दछन्— हे राजन् ! आफ्ना प्रधान सेवक उद्धवले यसरी सोधेपछि श्रीहरि प्रसन्न भएर लोक-कल्याणार्थ सनातन धर्मको निरूपण गर्न लागे ॥ ८ ॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! तिम्रो यो प्रश्न अतिशय धर्म संगत छ। वर्णाश्रमाचारपरायण व्यक्तिका लागि त्यो आत्यन्तिक श्रेयः स्वरूप तथा मोक्ष प्राप्त गराउने छ। अतः तिमी त्यो मसित सुन ॥९॥ कल्पको आदिमा जुन

ते भुवि ॥ सभायामपि वैरिञ्च्यां यत्र मूर्तिधराः कलाः ॥५॥ कर्त्राऽवित्रा प्रवक्त्रा च भवता मधुसूदन ॥ त्यक्ते महीतले देव विनष्टं कः प्रवक्ष्यति ॥ ६ ॥ तत्त्वं नः सर्वधर्मज्ञ धर्मस्त्वद्भक्तिलक्षणः ॥ यथा यस्य विधीयेत तथा वर्णय मे प्रभो ॥ ७ ॥ श्रीशुक उवाच ॥ इत्थं स्वभृत्यमुख्येन पृष्टः स भगवान्हरिः ॥ प्रीतः क्षेमाय मर्त्यानां धर्मानाह सनातनान् ॥ श्रीभगवानुवाच ॥ धर्म्य एष तव प्रश्नो नैश्रेयसकरो नृणाम् ॥ वर्णाश्रमाचारवतां तमुद्धव निबोध मे ॥ ९ ॥ आदौ कृतयुगे वर्णो नृणां हंस इति स्मृतः ॥ कृतकृत्याः प्रजा जात्या तस्मात्कृतयुगं विदुः ॥ १० ॥ वेद प्रणव एवाग्रे धर्मोऽहं वृषरूपधृक् ॥ उपासते तपोनिष्ठा हंसं मां मुक्तकिल्बिषाः ॥ ११ ॥ त्रेतामुखे महाभाग प्राणान्मे हृदयात्त्रयी ॥ विद्या प्रादुरभूत्तस्या अहमासं त्रिवृन्मखः ॥१२॥ विप्रक्षत्रियविट्शूद्रा मुखबाहूरुपादजाः ॥ वैराजात्पुरुषाज्जाता य आत्माचारलक्षणाः ॥१३॥ गृहाश्रमो जघनतो ब्रह्मचर्यं हृदो मम ॥

पहिलो कृतयुग भयो, त्यसमा मनुष्यको हंस नामक केवल योटै वर्ण थियो, किनकि त्यस बेला व्यक्ति जन्मैदेखि *मुक्त एवं कृतकृत्य हुन्थे। त्यसैले उसलाई कृतयुग भन्दछन् ॥ १०॥ त्यस बेला प्रणव नै वेद थियो र तप, शौच, दया एवं सत्यरूप चार पाउ हुने वृषभरूपधारा धर्म म नै थिएँ। त्यस बखतका निष्पाप र तपोनिष्ठ व्यक्ति म हंस अर्थात् शुद्ध स्वरूप परमेश्वर को नै उपासना गर्ने गर्दथे ॥११॥ हे महाभाग ! त्रेतायुग आएपछि मेरो हृदयबाट मेरै श्वास-प्रश्वासद्वारा ऋक्, साम र यजुःस्वरूप वेदत्रयीको आविर्भाव भयो र त्यस त्रयी विद्याले होता, अध्वर्यु र उद्गाताका कर्म त्रिवृत् यज्ञरूपमा म प्रकट भएँ। उसै गरी विराट पुरुषको मुख, भुजा, ऊरु र चरणबाट क्रमशः ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र यी चार वर्णको उत्पत्ति

* दृष्टान्त ( जो स्वयं मुक्त छ, उही अरुलाई मुक्त पार्न सक्छ )—योटा पण्डितजीले दुनै यजमानलाई भागवतको कथा सुनाए। जब कथा सकियो, हवन भइसक्यो तब यजमानले भन्यो—'पण्डितजी ! पुस्तकमा त लेखिएको छ—शुकदेवजीले राजा परीक्षितलाई सप्ताह सुनाए तब कथा सकिएपछि राजा परीक्षितलाई लिन विमान आएको थियो, तब मेरो निम्ति विमान किन आएन ! पण्डितजीले भने—'सत्ययुगमा धर्मका चार चरण थिए, अब त केवल योटै चरण छ। अतः चार दोहर पुण्य गर्नाले पूर्ण फल मिल्दछ।' यजमानले २००) भगवान्मा चढाएको थियो। झन् ६००) अरु ल्याएर दिए र भने—'महाराज ! तीन पल्ट अरु कथा सुनाउनोस् !' जब पण्डितले तीन पल्ट अरु कथा सुनाइसके तैपनि विमान आएन तब पण्डितजी आत्तिए। अनि अत्यन्तमा यजमानलाई योटा महात्माकहाँ लगे र हात जोरेर भने—'महाराज ! मैले यजमानलाई एक पल्टको ठाउँमा चार पल्ट कथा सुनाएँ, तैपनि विमान आएन। यसको कारण के हो ?' महात्माले केही पनि उत्तर दिएनन् र ती दुवैको हात-खुट्टा बाँधेर योटा कुनामा फालिदिए। दुवै योटा अर्कोलाई हेर्दै रहे। महात्माले भने—'योटा अर्कोलाई के हेरिरहेका छौ ? मुक्त किन पार्दैनौ ?' तिनले भने—'हामी दुवै त बन्धनमा छौं, अनि कसरी योटाले अर्कोलाई मुक्त पार्न सक्तछौं ? हजुर नै कृपा गरेर फुकाइदिनोस्।' महात्माले ती दुवैलाई बन्धनमुक्त पारेर भने—'जसरी यस बखत तिमी दुवै जना योटाले अर्कोलाई मुक्त पार्न सक्दैनथ्यौ, त्यसै गरी जो संसारबाट स्वयं मुक्त छैनन् ती अर्कालाई कसरी मुक्त पार्न सक्तछन् ? शुकदेवजी मुक्त थिए त्यसैले राजा परीक्षितलाई मुक्त पार्न सके। तिमीहरू त स्वयं संसारी मायामा बाँधिएका छौ, अनि अर्कालाई कसरी मुक्त पारेर विमान द्वारा वैकुण्ठ पठाउन सक्तछौ ?'

1322

भयो, उसको परिचय तिनको आफ्नाफ्नू आचरणले हुन्छ ॥ १२ ॥ १३ ॥ म विराट पुरुषको तिघ्राबाट, गृहस्थ हृदयबाट, ब्रह्मचर्य वक्षस्थलबाट वानप्रस्थ र मस्तकबाट संन्यास चार आश्रम भए। उपर्युक्त आश्रमका मानिसको स्वभाव पनि तिनको जन्मस्थान अनुरूप नीच अङ्गले नीच र उत्तम अंगले उत्तम बनेका छन्। शम, दम, तप, शौच, सन्तोष, क्षमा, कोमलता, भक्ति, दया र सत्य—यी विप्रवर्णका स्वभाव हुन्। तेज, बल, धैर्य, वीरता, सहनशीलता, उदारता, उद्योग, स्थिरता, विप्र-भक्ति र ऐश्वर्य—यी क्षत्रिय वर्णका स्वभाव कहिएका छन्। आस्तिकता, दानशीलता, दम्भहीनता, विप्र-सेवा तथा धनबाट कहिल्यै सन्तुष्ट नहुनु—यी वैश्यवर्णका स्वभाव कहिन्छन् ॥१४॥१८॥ ब्राह्मण, गाई तथा देवताहरूको निष्कपटभावले सेवा गर्नु र त्यसले जे पाइन्छ, उसैमा सन्तुष्ट रहनु—यी शूद्रवर्णका स्वभाव हुन्। अपवित्रता, मिथ्या भाषण, चोरी गर्नु, नास्तिकता, व्यर्थ कलह गर्नु र काम-क्रोध र तृष्णा—यी अन्त्यजका स्वभाव कहिएका छन् ॥ १९ ॥ २० ॥ अहिंसा, अस्तेय, काम-क्रोध-लोभरहित हुनु र प्राणीहरूको प्रिय तथा परोपकारिणी चेष्टामा तत्पर रहनु—यी सबै वर्णका

वक्षःस्थानाद्वने वासो न्यासः शीर्षणि संस्थितः ॥१४॥ वर्णानामाश्रमाणां च जन्मभूम्यनुसारिणीः ॥ आसन्प्रकृतयो नृणां नीचैर्नीचोत्तमोत्तमाः॥१५॥ शमो दमस्तपः शौचं सन्तोषः क्षान्तिरार्जवम् ॥ मद्भक्तिश्च दया सत्यं ब्रह्मप्रकृतयस्त्विमाः ॥१६॥ तेजो बलं धृतिः शौर्यं तितिक्षौदार्यमुद्यमः॥ स्थैर्यं ब्रह्मण्यतैश्वर्यं क्षत्रप्रकृतयस्त्विमाः ॥१७॥ आस्तिक्यं दाननिष्ठा च अदम्भो ब्रह्मसेवनम् ॥ अतुष्टिरर्थोपचयैर्वैश्यप्रकृतयस्त्विमाः ॥१८॥ शुश्रूषणं द्विजगवां देवानां चाप्यमायया ॥ तत्र लब्धेन सन्तोषः शूद्रप्रकृतयस्त्विमाः ॥ १९ ॥ अशौचमनृतं स्तेयं नास्तिक्यं शुष्कविग्रहः ॥ कामः क्रोधश्च तर्षश्च स्वभावोऽन्तेवसायिनाम् ॥२०॥ अहिंसा सत्यमस्तेयमकामक्रोधलोभता ॥ भूतप्रियहितेहा च धर्मोऽयं सार्ववर्णिकः ॥२१॥ द्वितीयं प्राप्यानुपूर्व्याज्जन्मोपनयनं द्विजः ॥ वसन्गुरुकुले दान्तो ब्रह्माधीयीत चाहुतः ॥२२॥ मेखलाजिनदण्डाक्षब्रह्मसूत्रकमण्डलून् ॥ जटिलोऽधौतदद्वासोऽरक्तपीठः कुशान्दधत् ॥२३॥ स्नानभोजनहोमेषु जपोच्चारे च वाग्यतः ॥ न छिन्द्यान्नखरोमाणि कक्षोपस्थगतान्यपि ॥ २४ ॥ रेतो नावकिरेज्जातु ब्रह्मव्रतधरः स्वयम् ॥ अवकीर्णेऽवगाह्याप्सु यतासुस्त्रिपदीं जपेत् ॥ २५ ॥ अग्न्यर्काचार्यगोविप्रगुरुवृद्धसुराञ्छुचिः ॥ समाहित उपासीत सन्ध्ये च यतवाग्जपन् ॥ २६ ॥ आचार्यं मां विजानीयान्नावमन्येत कर्हिचित् ॥ न मर्त्यबुद्ध्याऽसूयेत सर्वदेवमयो गुरुः ॥ २७ ॥ सायं प्रातरुपानीय तस्मै भैक्ष्यं निवेदयेत् ॥

साधारण धर्म हुन्। अब सबै आश्रम भन्दा पहिले ब्रह्मचारीको धर्म सुन। जातकर्मादि संस्कारका क्रमले उपनयनसंस्कार स्वरूप अर्को जन्म पाएर द्विज-कुमार अर्थात् ब्राह्मण, क्षत्रिय वा वैश्य वर्णका बालक इन्द्रियदमनपूर्वक गुरुको घरमा बसेर गुरुद्वारा आहूत भई अध्ययन गरोस् ॥ २१ ॥ २२ ॥ ब्रह्मचारी, मेखला, यज्ञोपवीत, कमण्डलु र [illegible] सदा धारण गरोस्। राम्रो बन्नका लागि दाँत र लुगा नधोऊ, रंगीन आसनमा नबसोस् र सदा कुश धारण गरोस् ॥२३॥ स्नान, भोजन, होम, जप र मूत्र-पुरीषोत्सर्गका बेला मौन [illegible] तथा नङ, कक्ष र उपस्थका रौँ कहिल्यै न काटोस् ॥ २४ ॥ ब्रह्मचर्य व्रतको पालन गर्दा स्वयं कहिल्यै वीर्यपात नगरोस्, यदि स्वयं कहिले वीर्यपात भयो भने जलमा स्नान र प्राणायाम गरेर गायत्री-मन्त्रको जप गरोस्। प्रातः र सायंकाल दुवै बेला मौन भएर गायत्री जपोस्। अनि पवित्र भएर एकाग्र मन पारेर अग्नि, सूर्य, आचार्य, गाई, ब्राह्मण, गुरु,

बुटा पाका र देवताको उपासना, सन्ध्या पालन गरोस् ॥ २५ ॥ २६ ॥ आफ्नू आचार्यलाई साक्षात् मेरै स्वरूप ठानोस् । तिनको निरादर नगरोस् र न कहिल्यै साधारण मनुष्य ठानेर उनको कुनै कुराको उपेक्षा र अवहेलना नगरोस्, किनकि गुरु सर्वदेवमय कहिन्छन् ॥ २७ ॥ बेलुका र बिहान दुबै बेला भिक्षामा जति अन्न मिल्छ अथवा अरु पनि जे जति प्राप्त हुन्छ, त्यो गुरुको सामुन्ने राखिदेओस् । अनि उनको आज्ञानुसार भिक्षाबाट अन्न लिएर संयमपूर्वक भोजन गरोस् ॥ २८ ॥ गुरु यदि हिंड्छन् भने उनको पछि-पछि हिंडोस्, सुत्छन् भने सतर्क रहेर अलि पर सुतोस्, थाकेका छन् भने नजीकै बसेर पाउ मिचोस् र बसेका भए उनको आदेशको प्रतीक्षामा स्वयं उभिइरहोस् । यसरी आफू सानो बनेर सेवा-चाकरीद्वारा गुरुको आराधना गरोस् ॥ २९ ॥ जबसम्म अध्ययन समाप्त हुँदैन, तबसम्म सबै प्रकारका संसारी भोगहरूबाट पर रहेर अखण्डित ब्रह्मचर्यको पालन गर्दै गुरु-कुलमा बसोस् ॥ ३० ॥ यदि ब्रह्मलोक अथवा जहाँ मूर्तिमान् वेद रहन्छन्, त्यस महर्लोकमा जाने मन भए ब्रह्मचारी सदैव नैष्ठिक ब्रह्मचर्यव्रत लिएर सारा जीवन वेदाध्ययन गर्नका लागि गुरुलाई आफ्नो देह सुम्पिदेओस् ॥ ३१ ॥ ब्रह्मतेजले सम्पन्न, निष्पाप एवं नैष्ठिक ब्रह्मचारी अग्नि, आत्मा र समस्त प्राणीहरूमा अभिन्न भावले मेरो उपासना

तच्चान्यदप्यनुज्ञातमुपयुञ्जीत संयतः ॥ २८ ॥ शुश्रूषमाण आचार्यं सदोपासीत नीचवत् ॥ यानशय्यासनस्थानैर्नातिदूरे कृताञ्जलिः ॥२९॥एवंवृत्तो गुरुकुले वसेद्भोगविवर्जितः ॥ विद्या समाप्यते यावद्बिभ्रद्व्रतमखण्डितम् ॥ ३० ॥ यद्यसौ छन्दसांलोकमारोक्ष्यन् ब्रह्मविष्टपम् ॥ गुरवे विन्यसेद्देहंस्वाध्यायार्थं बृहद्व्रतः ॥ ३१ ॥ अग्नौ गुरावात्मनि च सर्वभूतेषु मां परम् ॥ अपृथग्धीरुपासीत ब्रह्मवर्चस्व्यकल्मषः ॥ ३२ ॥ स्त्रीणां निरीक्षणस्पर्शसंलापक्ष्वेलनादिकम् ॥ प्राणिनो मिथुनीभूतानगृहस्थोऽग्रतस्त्यजेत् ॥ ३३ ॥ शौचमाचमनं स्थानं सन्ध्योपासनमार्जवम् ॥ तीर्थसेवा जपोऽस्पृश्याभक्ष्यासंभाष्यवर्जनम् ॥ ३४ ॥ सर्वाश्रमप्रयुक्तोऽयं नियमः कुलनन्दन ॥ मद्भावः सर्वभूतेषु मनोवाकायसंयमः ॥३५॥ एवं बृहद्व्रतधरो ब्राह्मणोऽग्निरिव ज्वलन् ॥ मद्भक्तस्तीव्रतपसा दग्धकर्माशयोऽमलः ॥ ३६ ॥ अथानन्तरमावेक्ष्यन्यथा जिज्ञासितागमः ॥ गुरवे दक्षिणां दत्वा स्नायाद्गुर्वनुमोदितः ॥ ३७ ॥ गृहं वनं वोपविशेत्प्रव्रजेद्वा द्विजोत्तमः ॥ आश्रमादाश्रमं गच्छेन्नान्यथा मत्परश्चरेत् ॥ ३८ ॥ गृहार्थी सदृशीं भार्यामुद्वहेद-

गरोस् ॥ ३२ ॥ यदि गृहस्थी छैन भने तो ब्रह्मचारी, वानप्रस्थी र संन्यासीले नारीलाई हेर्नु, छुनु र तीसित वार्तालाप वा हाँसो-ठट्टा गर्न त्यागि दिनु पर्दछ । मैथुन गर्ने प्राणीहरूतिर हेर्दा पनि नहेर्नु ॥ ३३ ॥ हे यदुकुल - नन्दन ! शौच, आचमन, स्नान, सन्ध्योपासन, सरलता, तीर्थ-सेवन, जप, अभक्ष्य भक्षण एवं अवाच्य वचन त्यागिदिनु, सबै प्राणीहरूमा मलाई नै देखोस् र मन-वाणी, शरीरको संयम, यी धर्म सबै आश्रमका निम्ति विहित छन ॥ ३४ ॥ ३५ ॥ यसरी ब्रह्मचर्यको पालन गरेर पवित्र ब्राह्मण अग्नि झैं तेजस्वी हुन्छ । तीव्र तपद्वारा कर्मवासना दग्ध भएपछि चित्त निर्मल हुन्छ र प्राणी मेरो भक्त बन्दछ ॥ ३६ ॥ यदि द्विजाति आफ्नू इच्छित शास्त्रको सम्पूर्ण अध्ययन समाप्त पारेर गृहस्थाश्रममा जान खोज्दछ भने गुरुलाई दक्षिणा दिएर उनको अनुमतिले स्नानादि गरोस् । समावर्तन-संस्कार गरेर उसले ब्रह्मचर्याश्रमलाई छाड्न पनि सक्तछ ॥ ३७ ॥ ब्रह्मचारीको कर्तव्य हो—ब्रह्मचर्याश्रमपछि गृहस्थ अथवा वानप्रस्थाश्रममा प्रवेश गरोस् । अथवा यदि त्यो विरक्त भए संन्यास लेओस् । यसरी एक आश्रम पछि अन्य आश्रम

1329

अवश्य ग्रहण गरोस् । मेरो भक्त यसको विरुद्ध आचरण कदापि नगरोस् अर्थात् निराश्रमी रहेर स्वेच्छाचारी नबनोस् ॥ ३८ ॥ गृहस्थाश्रममा प्रवेशको इच्छुक स्नातक आफू भन्दा सानु र दुलो वर्णका कन्यासित विवाह गरोस् ॥३९॥ यज्ञ गर्नु र दान दिनु-यो धर्म सबै द्विज अर्थात् ब्राह्मण,क्षत्रिय, वैश्य तीनै थरिको निम्ति कहिएको छ । तर दान लिनु, पढाउनु यज्ञ गर्नु-यी केवल ब्राह्मणका धर्म हुन् ॥४०॥ इनमा पनि प्रतिग्रह अर्थात् दान थापे तेज र यशको नाशक ठानेर अन्य दुइ वृत्ति—अध्यापन र यज्ञ गराएर नै आजीविका गरोस् । इनमा पनि परावलम्बन र दीनतादि दोष देखिए-केवल शिलोञ्छवृत्तिले जीवनयापन गरोस् ॥ ४१ ॥ यो दुर्लभ ब्राह्मण देह नाशवान् विषयभोगको निम्ति होइन । यो बाँचुञ्जेल कठोर तप र अन्त्यमा अनन्त आनन्दरूप मोक्षको सम्पादन गर्न बनेको हो ॥ ४२ ॥ जुन ब्राह्मण सन्तोषपूर्वक शिलोञ्छवृत्तिले निर्वाह गरेर आफ्नू निर्मल र महान् धर्मको निष्काम भएर आचरण गर्दछ, सर्वभावले मलाई आत्मसमर्पण गरेर अनासक्त चित्तले आफ्नै घरमा बसेर पनि अन्त्यमा शान्तिरूप मोक्षपद

जुगुप्सिताम् ॥ यवीयसीं तु वयसा तां सवर्णामनुक्रमात् ॥ ३९ ॥ इज्याध्ययनदानानि सर्वेषां च द्विजन्मनाम् ॥ प्रतिग्रहोऽध्यापनं च ब्राह्मणस्यैव याजनम् ॥४०॥ प्रतिग्रहं मन्यमानस्तपस्तेजोयशोनुदम् ॥ अध्याप्यामेव जीवेत शिलैर्वा दोषदृक् तयोः ॥ ४१ ॥ ब्राह्मणस्य हि देहोऽयं क्षुद्रकामाय नेष्यते ॥ कृच्छ्राय तपसे चेह प्रेत्यानन्तसुखाय च ॥ ४२ ॥ शिलोञ्छवृत्त्या परितुष्टचित्तो धर्मं महान्तं विरजं जुषाणः ॥ मय्यर्पितात्मा गृह एव तिष्ठन्नातिप्रसक्तः समुपैति शान्तिम् ॥ ४३ ॥ समुद्धरन्ति ये विप्रं सीदन्तं मत्परायणम् ॥ तानुद्धरिष्ये न चिरादापद्भ्यो नौरिवार्णवात् ॥ ४४ ॥ सर्वाः समुद्धरेद्राजा पितेव व्यसनात्प्रजाः ॥ आत्मानमात्मना धीरो यथा गजपतिर्गजान् ॥ ४५ ॥ एवंविधो नरपतिर्विमानेनार्कवर्चसा ॥ विधूयेहाशुभं कृत्स्नमिन्द्रेण सह मोदते ॥ ४६ ॥ सीदन्विप्रो वणिग्वृत्त्या पण्यैरेवापदं तरेत् ॥ खड्गेन वाऽऽपदाक्रान्तो न श्ववृत्त्या कथञ्चन ॥ ४७ ॥ वैश्यवृत्त्या तु राजन्यो जीवेन्मृगययाऽऽपदि ॥ चरेद्वा विप्ररूपेण न श्ववृत्त्या कथञ्चन ॥४८॥ शूद्रवृत्तिं भजेद्वैश्यः शूद्रः कारुकटक्रियाम् ॥ कृच्छ्रान्मुक्तो न गर्ह्येण वृत्तिं लिप्सेत कर्मणा ॥ ४९ ॥ वेदाध्यायस्वधास्वाहाबल्यन्नाद्यैर्यथोदयम् ॥ देवर्षिपितृभूतानि मद्रूपाण्यन्वहं यजेत् ॥ ५० ॥ यदृ-

पाउँदछ ॥ ४३ ॥ जो व्यक्ति विपत्तिमा परेका ब्राह्मणलाई सहायता गर्दछन्, तिनलाई म पनि सबै कष्टबाट उसै गरी बचाउँछु, जसरी समुद्रमा डुब्ने व्यक्तिलाई डुङ्गाले बचाउँछ ॥ ४४ ॥ विचारशील राजाको कर्तव्य हो—पिता झैं सबै प्रजाहरू र आफ्नू पनि स्वयं उसै गरी रक्षा गरोस्, जसरी यूथपति गजराज आफ्नू यूथका सबै हात्तीहरू र स्वयं आफूलाई पनि आफ्नू बल र बुद्धिद्वारा विपत्तिबाट रक्षा गर्दछ ॥ ४५ ॥ यस्तो धार्मिक राजा यस लोकमा सबै दोषबाट मुक्त भएर सूर्य झैं प्रकाशमान उत्तम विमानमा बसेर स्वर्ग जान्छ र उहाँ इन्द्रसित अनेक सुख भोग्दछ ॥ ४६ ॥ जुन ब्राह्मणलाई अर्थ-कष्ट छ, त्यो वैश्य-वृत्तिद्वारा व्यापारादि गरेर त्यस विपत्तिबाट सहजै पारि तरोस्, त्यति गरेर पनि विपत्ति टरेन भने खड्ग धारण गरेर क्षत्रिय-वृत्तिको अवलम्बन गरोस्, तर नीचको सेवारूपिणी श्वानवृत्तिको आश्रय कहिल्यै पनि नलेओस् ॥ ४७ ॥ यदि क्षत्रियलाई दारिद्र्यको कष्ट भए त्यो वैश्य वृत्तिले, मृगया अर्थात् शिकार द्वारा वा ब्राह्मणवृत्ति ( अध्ययन ) द्वारा निर्वाह गरोस्, तर नीच सेवा हो आश्रय नलेओस्

1325

त्यस्तै विपत्तिग्रस्त वैश्य शूद्र वृत्तिरूपिणी सेवाको र शूद्र उत्तमवर्णकी स्त्रीमा नीचवर्णको पुरुषद्वारा उत्पन्न 'कारु' प्रतिलोम जातको चटाई बुन्ने आदि वृत्तिको आश्रय ग्रहण गरोस् यो नित्य आपत्कालका लागि दर्शाइएको छ। आपत्ति निवारण हुनासाथ निन्द्य र निम्न वर्णोचित कर्मले जीविका प्राप्त गर्ने लोभ नगरोस् ॥४९॥ गृहस्थ पुरुषको कर्तव्य हो–वेदाध्ययन अर्थात् ब्रह्मयज्ञ, स्वधाकार अर्थात् पितृयज्ञ, स्वाहाकार ( देवयज्ञ ), बलिवैश्वदेव ( भूतयज्ञ ) र अन्नदान अर्थात् अतिथियज्ञादि द्वारा मेरै रूप ऋषि, देव, पितृ र अन्य प्राणीहरूको यथाशक्ति पूजा गरोस् ॥५०॥ त्यो स्वयं उद्यम विना प्राप्त वा शुद्धवृत्ति द्वारा उपार्जित धनले, आफूद्वारा जसको भरण-पोषण हुन्छ, तिनलाई कुनै कष्ट नपुऱ्याई उचित न्यायपूर्वक यज्ञादि शुभकर्म गर्दै जाओस् ॥५१॥ आफ्ना कुटुम्बमै आसक्त नहोओस्। ठूलो कुटुम्बी भए पनि भगवद्भजन नछाडोस्। बुद्धिमानको कर्तव्य हो–दृश्यमान प्रपंच झैं अदृश्य स्वर्गादि पनि नाशवान ठानोस् ॥५२॥ स्त्री-पुत्र र कुटुम्बको संयोग बटुवाको संयोग बटुवाको झैं आगमापायी हुन्छ। यो सबै सम्बन्ध आफ्नू देहपछि उसै गरी छुट्दछन्, जस्तै स्वप्न केवल निद्राको समाप्ति सम्म नै विद्यमान रहन्छ ॥ ५३ ॥ यस्तो विचारेर मुमुक्षुजन घरमा पाहुना झैं ममता र अहङ्कार रहित भएर बसोस् ॥ ५४ ॥ गृहस्थोचित कर्मद्वारा मेरो पूजन गर्दै मेरो

च्छ्रयोपपन्नेन शुक्लेनोपार्जितेन वा ॥ धनेनापीडयन्भृत्यान्न्यायेनैवाहरेत्क्रतून् ॥ ५१ ॥ कुटुम्बेषु न सज्जेत न प्रमाद्येत्कुटुम्ब्यपि ॥ विपश्चिन्नश्वरं पश्येददृष्टमपि दृष्टवत् ॥ ५२ ॥ पुत्रदाराप्तबन्धूनां सङ्गमः पान्थसङ्गमः ॥ अनुदेहं वियन्त्येते स्वप्नो निद्रानुगो यथा ॥ ५३ ॥ इत्थं परिमृशन्मुक्तो गृहेष्वतिथिवद्वसन् ॥ न गृहैरनुबध्येत निर्ममो निरहंकृतः ॥ ५४ ॥ कर्मभिर्गृहमेधीयैरिष्ट्वा मामेव भक्तिमान् ॥ तिष्ठेद्वनं वोपविशेत्प्रजावान् वा परिव्रजेत् ॥ ५५ ॥ यस्त्वासक्तमतिर्गेहे पुत्रवित्तैषणातुरः ॥ स्त्रैणः कृपणधीर्मूढो ममाहमिति बध्यते ॥ ५६ ॥ अहो मे पितरौ वृद्धौ भार्या बालात्मजात्मजाः ॥ अनाथा मामृते दीनाः कथं जीवन्ति दुःखिताः ॥ ५७ ॥ एवं गृहाशयाक्षिप्तहृदयो मूढधीरयम् ॥ अतृप्तस्ताननुध्यायन्मृतोऽन्धं विशते तमः ॥ ५८ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे सप्तदशोऽध्यायः ॥ १७ ॥

श्रीभगवानुवाच ॥ वनं विविक्षुः पुत्रेषु भार्यां न्यस्य सहैव वा ॥ वन एव वसेच्छान्तस्तृतीयं भागमायुषः ॥१॥ कन्दमूलफलैर्वन्यैर्मेध्यैर्वृत्तिं प्रकल्प-

भक्तियुक्त भएर घरमै रहोस् वा वानप्रस्थ भएर वनमा बसोस् वा पुत्रवान् भए स्त्रीको पालन-पोषण गर्ने भार छोरोमा सुम्पेर संन्यास लेओस् ॥५५॥ तर घरमा आसक्त, पुत्रैषणा र वित्तैषणाले व्याकुल, स्त्रीलम्पट मन्दमति–'यो म हुँ यो मेरो हो' यो अज्ञान बन्धनमा बाँधिन्छ ॥५६॥ त्यो विचार्न थाल्दछ–'अहो ! मेरा आमा-बाबु बूढा छन् स्त्री स-साना बच्चा भएकी छ। म बाहेक म नभए दीन, अनाथ तथा दुःखी भएर कसरी बाँच्छन् ?' यसरी गृहासक्तिले विक्षिप्त चित्त त्यो मूढ विषय-भोगहरूले कहिल्यै तृप्त नभई सधैं तिनैको चिन्तन गर्दै अन्त्यमा एक दिन मरेर नरकको घोर अन्धकारमा जाकिन्छ ॥ ५७॥५८॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'बासिष्ठी' भाषाटीकायां सप्तदशोऽध्यायः ॥१७॥

( वानप्रस्थी र संन्यासीका विहित धर्म )—भगवान् भन्नुहुन्छ—हे उद्धव ! जो वानप्रस्थाश्रममा प्रविष्ट हुन चाहन्छ, त्यो स्त्रीलाई छोराको भरमा छाडेर वा साथमै लिएर

1376

शान्तचित्तले आफ्नू आयुको तेस्रो भाग वनमै व्यतीत गरोस् ॥ १ ॥ वनको कन्द-मूल र फलले नै निर्वाह गरोस् । वल्कल लगाई वा तृण, पात र मृगचर्मादिले निर्वाह गरोस् ॥२॥ कपाल, रौं नङ र श्मश्रु ( दाह्री जुँगा ) रूपी शारीरिक मल धारण गरोस् अर्थात् क्षौर नगराओस् दन्तधावन नगरोस्, जलमा डुबुल्की मारेर त्रिकाल स्नान र पृथ्वीमा शयन गरोस् ॥३॥ ग्रीष्ममा पञ्चाग्नि र वर्षामा जल-धाराको आघात खप्दै अभ्रावकाश व्रतको पालन गरेर तथा शरद् ऋतुमा घाँटीसम्म पानीमा डुबिरहोस् । यस प्रकार कठोर तप गरोस् ॥ ४ ॥ अग्निमा पाकेको अन्न अथवा वेलामा स्वयं पाकेका फलदिलाई ओखल वा ढुङ्गामा कुटेर वा दाँतले-चबाएर नै खाओस् ॥ ५ ॥ उदर-पोषणका लागि कन्द-मूलादि स्वयं संग्रह गरेर ल्याओस् । देश-काल र बल राम्ररी जान्ने मुनि कुवेलामा ल्याएका पदार्थ ग्रहण नगरोस् ॥ ६ ॥ वनका कन्द-मूलले बनाएको चरु पुरोडाशादिले नै त्यो समयोचित

येत् ॥ वसीत वल्कलं वासस्तृणपर्णाजिनानि च ॥ २ ॥ केशरोमनखश्मश्रुमलानि बिभृयाद्दतः ॥ न धावेदप्सु मज्जेत त्रिकालं स्थण्डिलेशयः ॥ ३ ॥ ग्रीष्मे तप्येत पञ्चाग्नीन्वर्षास्वासारषाड् जले ॥ आकण्ठमग्नः शिशिर एवंवृत्तस्तपश्चरेत् ॥४॥ अग्निपक्वं समश्नीयात्कालपक्वमथापि वा ॥ उलूखलाश्मकुट्टो वा दन्तोलूखल एव वा ॥ ५ ॥ स्वयं सञ्चिनुयात्सर्वमात्मनो वृत्तिकारणम् ॥ देशकालबलाभिज्ञो नाददीतान्यदाहृतम् ॥ ६ ॥ वन्यैश्चरुपुरोडाशैर्निर्वपेत् कालचोदितान् ॥ न तु श्रौतेन पशुना मां यजेत वनाश्रमी ॥ ७ ॥ अग्निहोत्रं च दर्शश्च पूर्णमासश्च पूर्ववत् ॥ चातुर्मास्यानि च मुनेराम्नातानि च नैगमैः ॥ ८ ॥ एवं चीर्णेन तपसा मुनिर्धमनिसन्ततः ॥ मां तपोमयमाराध्य ऋषिलोकादुपैति माम् ॥ ९ ॥ यस्त्वेतत्कृच्छ्रतश्चीर्णं तपो निःश्रेयसं महत् ॥ कामायाल्पीयसे युञ्ज्याद्बालिशः कोऽपरस्ततः ॥ १० ॥ यदाऽसौ नियमेऽकल्पो जरया जातवेपथुः ॥ आत्मन्यग्नीन् समारोप्य मच्चित्तोऽग्निं समाविशेत् ॥ ११ ॥ यदा कर्मविपाकेषु लोकेषु निरयात्मसु ॥ विरागो जायते सम्यङ् न्यस्ताग्निः प्रव्रजेत्ततः ॥१२॥ इष्ट्वा यथोपदेशं मां दत्त्वा सर्वस्वमृत्विजे ॥ अग्नीन्स्वप्राण आवेश्य निरपेक्षः परिव्रजेत् ॥ १३ ॥ विप्रस्य वै संन्यसतो देवा दारादिरूपिणः ॥ विघ्नान्कु-

आग्रयणादि कर्म गरोस् । वानप्रस्थी भएपछि वेदविहित पशुहरुद्वारा मेरो यजन नगरोस् ॥ ७ ॥ वेदज्ञले अग्निहोत्र, पौर्णमास र चतुर्मास्यादिको त मुनिको निम्ति पहिले झैं निरूपण गरिएको छ ॥ ८ ॥ यसरी घोर तपले जसका नसा देखिन्छन्, त्यो मुनि तपोमय प्रभुको आराधना गरेर ऋषिलोकादिमा गई फेरि त्यहाँबाट कालान्तरमा धर्मपूर्वक रहेर मलाई प्राप्त गर्दछ ॥ ९ ॥ यदि कोही व्यक्ति यो कष्टसाध्य र मोक्षदाता तपलाई तुच्छ फल अर्थात् स्वर्गलोक र ब्रह्मलोकादिको कामनाले गर्दछ, भने त्यो भन्दा ठूलो मूर्ख संसारमा को होला ? जुन वेला वानप्रस्थी आश्रमका नियम पालन गर्न असमर्थ हुन्छ र शरीर वृद्धावस्थाले काम्न लाग्दछ, अनि भावना द्वारा अग्निलाई आफ्नू अन्तःकरणमा आरोपित गरी मेरो स्मरण गर्दै अग्निमा प्रवेश गरिदिओस् । यो विधान केवल अविरक्तको निम्ति हो ॥ १०-११ ॥ यदि आफ्ना कर्मको फलस्वरूप नरकतुल्य लोकबाट पूर्ण वैराग्य भएपछि आहवनादि अग्निलाई त्यागेर संन्यास लिओस् ॥१२॥ अतः यसरी विरक्त वानप्रस्थी व्यक्ति वेदविधिले उत्तम अष्टका श्राद्धपूर्वक प्राजापत्य यज्ञले

1327

यस विचारले देवता स्त्री आदिको रूप धारण गरेर ब्राह्मणले संन्यास लिने बेलामा विघ्न पार्दछन् । अतः त्यस बेला क्र सावधान रहोस् ॥ १४ ॥ यदि यतिले लुगा लगाउने खाँचो परेको भने थोटा कौपीन र त्यो कौपिन ढाकिने थोटा अर्को वस्त्र राख्नु । आपत्तिकाल बाहेक दण्ड र कमण्डलु छाडेर अरू कुनै वस्तु आफ्नो पास राख्न वर्जित छ ॥ १५ ॥ सधैँ भूमिमा हेरेर पाइला राखोस्, लुगाले छानेर पानी पियोस्, सदा सत्य बोलोस् र विचार गरेर मात्र कुनै कार्य गरोस् ॥ १६ ॥ वाणीको मौनरूप दण्ड, शरीरको निष्क्रियता-रूप दण्ड र मनको प्राणायामरूप दण्ड—यी तीनै दण्ड जोसित रहन्न भने केवल बाँसको दण्ड लिनाले कोही त्रिदण्डी संन्यासी हुन सक्तैन ॥ १७ ॥ अतः *पतित जनहरूलाई

वैन्त्ययं ह्यस्मानाक्रम्य समियात्परम् ॥ १४ ॥ बिभृयाच्चेन्मुनिर्वासः कौपीनाच्छादनं परम् ॥ त्यक्तं न दण्डपात्राभ्यामन्यत्किञ्चिदनापदि ॥ १५ ॥ दृष्टिपूतं न्यसेत्पादं वस्त्रपूतं पिबेज्जलम् ॥ सत्यपूतां वदेद्वाचं मनः पूतं समाचरेत् ॥ १६ ॥ मौनानीहानिलायामा दण्डा वाग्देहचेतसाम् ॥ न ह्येते यस्य सन्त्यङ्ग वेणुभिर्न भवेद्यतिः ॥ १७ ॥ भिक्षां चतुर्षु वर्णेषु विगर्ह्यान्विवर्जयँश्चरेत् ॥ सप्तागारानसंक्लृप्ताँस्तुष्येल्लब्धेन तावता ॥१८॥ बहिर्जलाशयं गत्वा तत्रोपस्पृश्य वाग्यतः ॥ विभज्य पावितं शेषं भुञ्जीताशेषमाहृतम् ॥ १९ ॥ एकश्चरेन्महीमेतां निःसङ्गः संयतेन्द्रियः ॥ आत्मक्रीड आत्मरत आत्मवान्समदर्शनः ॥२०॥ विविक्तक्षेमशरणो मद्भावविमलाशयः ॥ आत्मानं चिन्तयेदेकमभेदेन यथा मुनिः ॥ २१ ॥ अन्वीक्षेतात्मनो बन्धं मोक्षं

छाडेर शेष चारै वर्णको भिक्षा ग्रहण गर्नु । पहिलेदेखि अनिश्चित केवल सात घरमा भिक्षा मागोस् । तीबाट जे पाइन्छ त्यतिमै सन्तुष्ट रहोस् ॥ १८ ॥ बस्ती बाहिर जलाशयमा गएर त्यहाँ जल छर्की स्थल शुद्ध गरोस् । यदि अरू कोही आयो भने उसलाई पनि दिएर रहेको अन्न चुपचाप खाओस् । अर्को पल्टको निम्ति जोगाएर नराखोस् र वर्ता मागेर संग्रह नै गरोस् ॥१९॥ आसक्तिरहित, जितेन्द्रिय, आत्माराम, आत्मप्रेमी, धीर र समदर्शी भएर पृथ्वीमा एक्लै डुलोस् ॥२०॥ त्यो मुनि सदा एकान्त र निर्भय देशमा रहेर मेरो भक्तिले निर्मलचित्त भई आफ्नू आत्मालाई मसित सम्बद्ध जानोस् ॥ २१ ॥ ज्ञाननिष्ठा द्वारा आफ्नू आत्माको बन्धन र मोक्षको यसरी विचार गरोस् इन्द्रियको चंचलता नै बन्धन र तिनको

---

* दृष्टान्त ( नौकर्को नोकरी )—कौनै गुरुजी एक दिन चेला नेलाकहाँ गइरहेका थिए । उनीसित कुनै सेवक थिएन । बाटोमा बौटा चमार भेटियो । तिनले कृपित भने—'तँ मसित हिंड्, यसरी स्नान पर्छ भने ? र तुने कुराको कत हुँदैन ।' चमारले भन्यो—'महाराज ! म जातको चमार हुँ, हजुरसित कसरी हिंड्ने !' गुरुजीले भने—'कुनै बाधा छैन, तँ आफ्नू जात कसैलाई नभन्नू र कसैसित नबोल्नू ।' चमार सहमत भयो । सायंकाल गुरुजी आफ्नू चेलाको घरमा पूजा गरिरहेका थिए । उसै बेला कौनै ब्राह्मण आए र गुरुको नोकरसित भने—'जा, कुवाँबाट एक गाग्री पानी लिएर आइज ।' नोकर केही बोलेन । ती ब्राह्मणले फेरि पनि भने, तर नोकर ठाउँबाट उठेन । अति-अति ब्राह्मण नजीकै आउँदै जान्थे, त्यो कुनामा यस निमित्त सर्दथ्यो कि तिनले मलाई नछोऊन् । निदान ब्राह्मणले नोकरसित भने—'तँ बाहुनले भनेको मान्दैनस् र चमार जस्तो कुनातिर सरिरहेको छस् !' यति सुनेर चमार डरले काम्न लाग्यो र गुरुतिर हेरेर भन्यो—'गुरुजी ! मलाई यसैले चिनी सकेका छन्—म चमार हुँ भनेर । अब म यहाँ बस्न सक्तिन, मलाई जान दिनोस् ।' यति भन्नासाथ चमार त्यहाँबाट उठेर भाग्यो । ज्ञानमार्गमा यसको दृष्टान्त हो—जब मनुष्य मायाको स्वरूप चिनिसक्तछ, तब माया तुरुन्त त्यहाँबाट भाग्दछ ।

संयम नै मोक्ष हुन्छ ॥ २२ ॥ अतः मुनिको कर्तव्य हो–छ इन्द्रिय, मन र पाँच ज्ञानेन्द्रियलाई जितेर सबै क्षुद्र कामनाहरू त्यागेर आफ्नू अन्तःकरणमा परमानन्दको अनुभव गरोस् र निरन्तर मेरै भावना गर्दो छँदो स्वच्छन्द भावले डुलोस् ॥२३॥ केवल भिक्षाको निम्ति पुर, ग्राम, गोष्ठ र यात्रीहरूको समूहमा जाओस् र पुण्यदेश, नदी, पर्वत, वन तथा आश्रमादि भूखण्डमा विचरण गरोस् ॥ २४ ॥ त्यस वेला भिक्षा पनि विशेष गरेर वानप्रस्थीको स्थानमै लेओस्, किनकि शिलोञ्छवृत्तिले प्राप्त अन्न खानाले छिट्टै चित्त शुद्ध हुन्छ । यसैले प्राणी निर्मोह बन्दछ र उसलाई सिद्धि पनि मिल्दछ ॥२५॥ यस दृश्य प्रपञ्चलाई कहिल्यै सत्य नठानोस्, किनकि यो नष्ट भएर जान्छ । यसमा अनासक्त रहेर लौकिक तथा पारलौकिक सबै कामना अर्थात् काम्य कर्महरूबाट विरक्त हुनु पर्दछ ॥ २६ ॥ आत्मा, मन, वाणी र प्राणको संघातरूप यो जगत् माया नै हो—यस्तो विचार द्वारा त्यसको बाध गरेर आफ्नू स्वरूपमा स्थित होओस् र फेरि कहिल्यै त्यसको स्मरण नगरोस् । २७ ॥ ज्ञाननिष्ठ, विरक्त एवं कुनै पनि वस्तुको अपेक्षा नगर्ने मेरो प्रिय भक्त

च ज्ञाननिष्ठया ॥ बन्ध इन्द्रियविक्षेपो मोक्ष एषां च संयमः ॥ २२ ॥ तस्मान्नियम्य षड्वर्गं मद्भावेन चरेन्मुनिः ॥ विरक्तःक्षुल्लकामेभ्यो लब्ध्वात्मनि सुखं महत् ॥ २३ ॥ पुरग्रामव्रजान्सार्थान्भिक्षार्थं प्रविशँश्चरेत् ॥ पुण्यदेशसरिच्छैलवनाश्रमवतीं महीम् ॥ २४ ॥ वानप्रस्थाश्रमपदेष्वभीक्ष्णं भैक्ष्यमाचरेत् ॥ संसिद्ध्यत्याश्वसंमोहः शुद्धसत्त्वः शिलान्धसा ॥ २५ ॥ नैतद्वस्तुतया पश्येद् दृश्यमानं विनश्यति ॥ असक्तचित्तो विरमेदिहामुत्र चिकीर्षितात् ॥ २६ ॥ यदेतदात्मनि जगन्मनोवाक्प्राणसंहतम् ॥ सर्वं मायेति तर्केणास्वस्थस्त्यक्त्वा न तत्स्मरेत् ॥ २७ ॥ ज्ञाननिष्ठो विरक्तो वा मद्भक्तो वाऽनपेक्षकः ॥ सलिङ्गानाश्रमाँस्त्यक्त्वा चरेदविधिगोचरः ॥२८॥ बुधो बालकवत्क्रीडेत्कुशलो जडवच्चरेत् ॥ वदेदुन्मत्तवद्विद्वान्गोचर्यां नैगमश्चरेत् ॥ २९ ॥ वेदवादरतो न स्यान्न पाखण्डी न हैतुकः ॥ शुष्कवादविवादे न कञ्चित्पक्षं समाश्रयेत् ॥ ३० ॥ नोद्विजेत जनाद्धीरो जनं चोद्वेजयेन्न तु ॥ अतिवादाँस्तितिक्षेत नावमन्येत कञ्चन ॥ देहमुद्दिश्य पशुवद्वैरं कुर्यान्न केनचित् ॥ ३१ ॥ एक एव परो ह्यात्मा भूतेष्वात्मन्यवस्थितः ॥ यथेन्दुरुदपात्रेषु भूतान्येकात्मकानि च ॥ ३२ ॥ अलब्ध्वा न विषीदेत काले कालेऽशनं क्वचित् ॥ लब्ध्वा न हृष्येद्धृतिमानुभयं देवतन्त्रितम् ॥ ३३ ॥ आहारार्थं समीहेत युक्तं तत्प्राणधारणम् ॥ तत्त्वं विमृश्यते तेन तद्विज्ञाय विमुच्यते ॥ ३४ ॥ यदृच्छयोपपन्नान्नमद्याच्छ्रेष्ठ-

आश्रमादिलाई तिनको चिह्न सहित त्यागेर वेदशास्त्रको विधि-निषेधरूपी बन्धनबाट मुक्त भई स्वच्छन्दरूपले डुलोस् ॥२८॥ बुद्धिमान भएर पनि बालक झैं खेलोस्, निपुण भएर पनि जड झैं बनिरहोस्, विद्वान् भएर पनि उन्मत्त ( पागल ) झैं कुरा गरोस् र सबै शास्त्र विधि जानेर पनि पशु झैं रहोस् ॥ २९ ॥ त्यो कर्मकाण्डको व्याख्यादि स्वरूप वेदवादमा प्रेम नराखोस्, पाखण्डी तथा केवल तर्कपरायण नभई जहाँ शुष्क वाद-विवाद भइरहन्छ, त्यहाँ कुनै पनि पक्ष नलिओस् ॥३०॥ त्यो धीर व्यक्ति अरूसित नआत्तियोस् र अरूलाई नै आफूसित उद्विग्न हुन देओस् । निन्दा आदि सहोस । कसैको अपमान नगरोस् र शरीरको निम्ति पशु झैं वसैसित शत्रुता नगरोस् ॥३१॥ जस्तै भिन्न-भिन्न जलपात्रमा पनि चन्द्रमाको अनेक प्रतिबिम्ब देखिन्छन्; त्यसै गरी सबै प्राणीहरूमा र आफूमा पनि यौटै परमात्मालाई विराजमान जानेर तथा आफ्नै कारणरूपिणी पृथिवीदेखि भिन्न सबै देहमा यौटै ठानोस

॥ ३२ ॥ उसले कहिले भिक्षा नपाए दुःख नमानोस् र पाएर पनि प्रसन्न नहोस्, किनकि दुवै अवस्था दैवको अधीन रहन्छ ॥ ३३ ॥ प्राणको रक्षा गर्नु नितान्त आवश्यक छ। अतः आहार मात्रको निम्ति उचित चेष्टा गरोस्, किनकि प्राण रहे मात्र तत्व चिन्तन हुन्छ र आत्मस्वरूपको ज्ञान भएपछि मात्र मोक्ष प्राप्त हुन सक्तछ।३४॥ विरक्त मुनि दैववशात् जस्तो आहार पाइन्छ, राम्रो वा नराम्रो, त्यही खाओस्। वस्त्र र बिछौना पनि जस्तो पाइन्छ, त्यसैले काम चलाओस् ॥ ३५ ॥ ज्ञाननिष्ठ परमहंस शौच, आचमन, तथा अन्य नियमतो पनि शास्त्र विधिको अधीन भएर नरहोस्, बरु म ईश्वर झैं केवल लीलापूर्वक गर्दै रहोस् ॥ ३६ ॥ उसको निम्ति विकल्परूप प्रपंच रहन्न, त्यो त मेरो साक्षात्कार हुनासाथ नष्ट भएर जान्छ। प्रारब्धवश जबसम्म देह छ, तबसम्म बाधित रूपमा नै उसको कहिले काहीं प्रतीति हुन्छ, त्यसको पतन भएपछि त ममा नै मिल्दछ ॥ ३७ ॥ यहाँसम्म सिद्ध ज्ञानीको धर्म कहियो। अब जिज्ञासुको कर्तव्य सुन–जुन धीर पुरुषलाई कष्टमय फल दिने वासनाबाट वैराग्य भइसकेको छ र जसलाई मेरो भागवत धर्मको ज्ञान स्थिर रहन सकेको छैन, त्यो कुनै विरक्त मुनिलाई गुरु मानेर उनकै शरणमा जाओस् ॥ ३८ ॥ गुरुलाई मेरै रूप मानेर अति आदरपूर्वक श्रद्धा-भक्तिले तबसम्म उनको सेवा-शुश्रूषामा संलग्न रहोस्,

मुतापरम् ॥ तथा वासस्तथा शय्यां प्राप्तं प्राप्तं भजेन्मुनिः ॥ ३५ ॥ शौचमाचमनं स्नानं न तु चोदनयाऽऽचरेत् ॥ अन्यांश्च नियमाञ्ज्ञानी यथाऽहं लीलयेश्वरः ॥ ३६ ॥ नहि तस्य विकल्पाख्या या च मद्वीक्षया हता ॥ आदेहान्तात्क्वचित्ख्यातिस्ततः सम्पद्यते मया ॥ ३७ ॥ दुःखोदर्केषु कर्मसु जातनिर्वेद आत्मवान् ॥ अजिज्ञासितमद्धर्मो गुरुं मुनिमुपाव्रजेत् ॥३८॥ तावत्परिचरेद्भक्तः श्रद्धावाननसूयकः ॥ यावद्ब्रह्म विजानीयान्मामेव गुरुमादृतः ॥ ३९ ॥ यस्त्वसंयतषड्वर्गः प्रचण्डेन्द्रियसारथिः ॥ ज्ञानवैराग्यरहितस्त्रिदण्डमुपजीवति ॥ ४० ॥ सुरानात्मानमात्मस्थं निह्नुते मां च धर्महा ॥ अविपक्वकषायोऽस्मादमुष्माच्च विहीयते ॥ ४१ ॥ भिक्षोर्धर्मः शमोऽहिंसा तप ईक्षा वनौकसः ॥ गृहिणो भूतरक्षेज्या द्विजस्याचार्यसेवनम् ॥ ४२ ॥ ब्रह्मचर्यं तपः शौचं सन्तोषो भूतसौहृदम् ॥ गृहस्थस्याप्यृतौ गन्तुः सर्वेषां मदुपासनम् ॥ ४३ ॥ इति मां यः स्वधर्मेण भजन्नित्यमनन्यभाक् ॥ सर्वभूतेषु मद्भावो मद्भक्तिं विन्दतेऽचिरात् ॥ ४४ ॥ भक्त्योद्धवानपायिन्या सर्वलोकमहेश्वरम् ॥ सर्वोत्पत्त्ययं ब्रह्म कारणं मोपयाति सः

जबसम्म उसलाई ब्रह्मज्ञान प्राप्त हुँदैन। त्यो कहिल्यै पनि गुरुको निन्दा नगरोस् ॥३९॥ जसले काम, क्रोध, लोभ, मद, मत्सर र अहङ्कार–यी छ शत्रुलाई जितेन, जसका इन्द्रियरूपी घोडा र बुद्धिरूपी सारथी प्रचण्ड भइरहेका छन् तथा जो ज्ञान-वैराग्यले शून्य छ, तापनि संन्यासीको वेषले पेट पाल्दछ, त्यो यति-धर्मको घातक हो र आफ्ना पूजनीय देवताहरूलाई र आफूलाई, आफ्नू अन्तःकरणमा स्थित मलाई धोखा दिन्छ। जसका वासना क्षीण भएका छैनन्, त्यो मूढ इहलोक र परलोक दुवैतिरबाट चुटाइ खाइरहन्छ ॥४०॥४१॥ शान्ति र अहिंसा यी संन्यासीका प्रधान धर्म हुन्। तप र ईश्वर चिन्तन वानप्रस्थका धर्म हुन्। प्राणीहरूको रक्षा र यज्ञ गृहस्थका प्रधान धर्म हुन्। गुरुसेवा नै ब्रह्मचारीको सर्वश्रेष्ठ धर्म हो ॥ ४२ ॥ ऋतुकालमा स्त्री-गमन गर्ने गृहस्थको निम्ति पनि ब्रह्मचर्य, तप, शौच, सन्तोष र प्राणीमा दया—यी आवश्यक धर्म कहिएका छन् र उपासना मनुष्य मात्रका परमधर्म हुन्छन् ॥ ४३ ॥ यसरी स्वधर्म-पालन द्वारा जो सबै प्राणीमा मेरै भावना गर्दो छँदो अनन्य भावले मेरो भजन गर्दछ, त्यो धर्मात्मा शीघ्र नै मेरो विशुद्ध भक्ति गर्न सक्तछ

॥ ४४ ॥ हे उद्धव ! मेरी अनपायिनी ( अविनाशिनी ) भक्ति द्वारा त्यो सबै लोकका स्वामी र सबैका उत्पत्ति तथा लयस्थान एवं सबैका कारणभूत म परब्रह्मलाई प्राप्त गर्दछ ॥ ४५ ॥ यसरी स्वधर्म-पालनले निर्मल अन्तःकरणको जुन प्राणीले मेरो ऐश्वर्य जानिसकेको छ, त्यो विरक्त पुरुष ज्ञान-विज्ञानले सम्पन्न भएर शीघ्र मलाई प्राप्त गर्दछ॥४६॥ वर्णाश्रमीहरूको निम्ति यो आचाररूपी धर्म कहिएको छ । मेरो भक्तिले युक्त भएपछि यही तिनको परम निःश्रेयसको कारण बन्दछ ॥४७॥ हे साधो ! तिमीले जो सोध्यौ, त्यो सबै भनिसकें— कसरी स्वधर्मपालन गर्दै भक्त म परब्रह्मलाई प्राप्त गर्छ ॥ ४८ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषाटीकायामष्टादशोऽध्यायः ॥ १८ ॥

( भक्तिको साधन र यम-नियमादिको निरूपण )–भगवान् भन्नुहुन्छ–हे उद्धव ! जो केवल अपरोक्षानुभव रूपिणी विद्या र शास्त्र-सम्पन्न आत्मज्ञानी छ, त्यो केवल आनुमानिक अर्थात् परोक्ष ज्ञानी मात्र होइन, द्वैत-प्रपंच र उसको निवृत्तिका साधनरूप वृत्तिज्ञान माया मात्र हो, यो जानेर ती सबै ममा लीन गरोस् ॥१॥ ज्ञानको अभीष्ट पदार्थ, स्वार्थ, फल

॥ ४५ ॥ इति स्वधर्मनिर्णिक्तसत्त्वो निर्ज्ञातमद्गतिः ॥ ज्ञानविज्ञानसम्पन्नो विरक्तः समुपैति माम् ॥४६॥ वर्णाश्रमवतां धर्म एष आचारलक्षणः ॥ स एव मद्भक्तियुतो निःश्रेयसकरः परः ॥४७॥ एतत्तेऽभिहितं साधो भवान्पृच्छति यच्च माम् ॥ यथा स्वधर्मसंयुक्तो भक्तो मां समियात्परम् ॥४८॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे अष्टादशोऽध्यायः ॥ १८ ॥

श्रीभगवानुवाच ॥ यो विद्याश्रुतसम्पन्न आत्मवान्नानुमानिकः ॥ मायामात्रमिदं ज्ञात्वा ज्ञानं च मयि संन्यसेत् ॥१॥ ज्ञानिनस्त्वहमेवेष्टः स्वार्थो हेतुश्च संमतः ॥ स्वर्गश्चैवापवर्गश्च नान्योऽर्थो मदृते प्रियः ॥२॥ ज्ञानविज्ञानसंसिद्धाः पदं श्रेष्ठं विदुर्मम ॥ ज्ञानी प्रियतमोऽतो मे ज्ञानेनासौ बिभर्ति माम् ॥३॥ तपस्तीर्थं जपो दानं पवित्राणीतराणि च ॥ नालंकुर्वन्ति तां सिद्धिं या ज्ञानकलयाकृता ॥४॥ तस्माज्ज्ञानेन सहितं ज्ञात्वा स्वात्मानमुद्धव ॥ ज्ञानविज्ञानसम्पन्नो भज मां भक्तिभावतः ॥५॥ ज्ञानविज्ञानयज्ञेन मामिष्ट्वाऽऽत्मानमात्मनि ॥ सर्वयज्ञपतिं मां वै संसिद्धिं मुनयोऽगमन् ॥६॥ त्वय्युद्धवाश्रयति यस्त्रिविधो विकारो मायान्तरापतति नाद्यपवर्गयोर्यत् ॥ जन्मादयोऽस्य यदमी तव तस्य किं स्युराद्यन्तयोर्यदसतोऽस्ति तदेव मध्ये ॥७॥ उद्धव उवाच ॥ ज्ञानं

स्यसको साधन र स्वर्गापवर्ग–सबै म नै हुँ । भक्तलाई म बाहेक अरु कोही पनि पदार्थ प्रिय हुन सक्तैन ॥ २ ॥ ज्ञान र विज्ञानले पूर्ण सिद्ध पुरुष मेरो उत्तम, परमश्रेष्ठ पदलाई जान्दछन्, यसै निम्ति ज्ञानी मलाई सबभन्दा प्रिय छन्, किनकि ज्ञानद्वारा त्यो निरन्तर मलाई आफ्नू अन्तःकरणमा धारण गर्दछ ॥ ३ ॥ तत्त्वज्ञानको अंशमात्रले जुन सिद्धि प्राप्त हुन्छ, त्यो तप, तीर्थ, दान वा अरु कुनै पनि पवित्र साधनले साध्य हुन सक्तैन ॥ ४ ॥ हे उद्धव ! ज्ञानसहित आफ्नू आत्मस्वरूप जानेर तिमी ज्ञान-विज्ञानबाट सम्पन्न भएर भक्तिपूर्वक मेरो आराधना गर ॥ ५ ॥ ज्ञान-विज्ञानरूपी यज्ञद्वारा आफ्नू अन्तःकरणमा आत्मारूप मेरो यजन गरेर अनेक मुनिहरूले सिद्धिरूप म सर्व यज्ञपतिलाई पाए । ६॥ हे उद्धव ! आध्यात्मिक, आधिदैविक र आधिभौतिक–यी तीन थरिका विकारको समष्टिरूप शरीर जुन सर्दव तिम्रो आश्रित छ, त्यो आदि-अन्त्यमा नरहनाले मायामिश्रै आउँदछ । त्यसरी जो जन्मादि छन् तीसित तिम्रो के सम्बन्ध ? जस्तै असत् व तु आदि र अन्त्य असत् हुन्छ, त्य तै मध्य पनि असत् हुने गर्दछ ॥ ७ ॥ उद्धव भन्नलागे–हे विश्वमूर्त ! जस्तै

1331

वैराग्य र विज्ञानले युक्त यो सनातन, विशुद्ध ज्ञान बलियो होओस्, स्यस्तै रामरी बुझाउनोस् । ब्रह्मादिक महापुरुष सदा जसको खोजगर्दछन्, त्यो आफ्नू भक्तियोगको पनि वर्णन गर्नोस् ॥ ८ ॥ हे प्रभो ! यो घोर संसार-मार्गमा तापत्रयले पीडित र सन्ताप दिने व्यक्तिका लागि हजुरको अमृतवर्षी चरणरूपी छाता बाहेक मलाई अरू कुनै आश्रय देखिइरहेको छैन ॥९॥ हे महानुभावः ! संसाररूपी अन्धकारमा परेर कराल-व्यालद्वारा ग्रस्त भएर यान विषय-सुखको तीव्र आशाले व्याकुल म हजुरका दासको उद्धार गर्नोस् र आफ्नू मोक्षप्रद वचनामृतले यसलाई शान्त पार्नोस् ॥ १० ॥ भगवान्‌ले भन्नुभयो–हे उद्धव ! राजा युधिष्ठिरले पूर्वसमयमा हामी सबैका सामुन्ने यस्तै प्रश्न भीष्म पितामहसित सुतेका थिए ॥ ११ ॥ जब महाभारतको युद्ध समाप्त भयो, तब आफ्ना बन्धुहरूको विनाशले व्याकुल राजा युधिष्ठिरले अनेक धर्महरू सुनिसकेपछि भीष्म-पितामहसित मोक्षधर्म सोधेका थिए ॥ १२ ॥ देवव्रतको मुखबाट सुनेको त्यही ज्ञान, विज्ञान, वैराग्य, श्रद्धा र भक्ति-युक्त मोक्ष धर्म म भन्दछु, सुन ॥ १३ ॥ जसले समस्त

विशुद्धं विपुलं यथैतद्वैराग्यविज्ञानयुतं पुराणम् ॥ आख्याहि विश्वेश्वरविश्वमूर्ते त्वद्भक्तियोगं च महद्विमृग्यम् ॥८॥ तापत्रयेणाभिहतस्य घोरे संतप्यमानस्य भवाध्वनीश ॥ पश्यामि नान्यच्छरण तवाङ्घ्रिद्वन्द्वातपत्रादमृताभिवर्षात् ॥९॥ दष्टं जनं संपतितं बिलेऽस्मिन् कालाहिना क्षुद्रसुखोरुतर्षम् ॥ समुद्धरैनं कृपयापवर्ग्यैर्वचोभिरासिञ्च महानुभाव ॥१०॥ श्रीभगवानुवाच ॥ इत्थमेतत्पुरा राजा भीष्मं धर्मभृतां वरम् ॥ अजातशत्रुः पप्रच्छ सर्वेषां नोऽनुशृण्वताम् ॥११॥ निवृत्ते भारते युद्धे सुहृन्निधनविह्वलः ॥ श्रुत्वा धर्मान्बहून्पश्चान्मोक्षधर्मानपृच्छत ॥१२॥ तानहं तेऽभिधास्यामि देवव्रतमुखाच्छ्रुतान् ॥ ज्ञानवैराग्यविज्ञानश्रद्धाभक्त्युपबृंहितान् ॥ १३ ॥ नवैकादश पञ्च त्रीन्भावान्भूतेषु येन वै ॥ ईक्षेताथैकमप्येषु तज्ज्ञानं मम निश्चितम् ॥१४॥ एतदेव हि विज्ञानं न तथैकेन येन यत् ॥ स्थित्युत्पत्त्यप्ययान्पश्येद्भावानां त्रिगुणात्मनाम् ॥ १५ ॥ आदावन्ते च मध्ये च सृज्यात्सृज्यं यदन्वियात् ॥ पुनस्तत्प्रतिसंक्रामे यच्छिष्येत तदेव सत् ॥ १६ ॥ श्रुतिः प्रत्यक्षमैतिह्यमनुमानं चतुष्टयम् ॥ प्रमाणेष्वनवस्थानाद्विकल्पात्स विरज्यते ॥१७॥ कर्मणां परिणामित्वादाविरिञ्च्यादमङ्गलम् ॥ विपश्चिन्नश्वरं पश्येददृष्टमपि दृष्टवत् ॥ १८ ॥ भक्तियोगः पुरैवोक्तः प्रीयमाणाय तेऽनघ ॥ पुनश्च कथयिष्यामि

प्राणीहरूमा ( पुरुष, प्रकृति, महत्तत्त्व, अहङ्कार र पञ्चतन्मात्रा रूप ) नौ, मन सहित एघार इन्द्रिय, पञ्चभूत र तीन गुण यी अट्ठाइस तत्त्व तथा तिनमा अधिष्ठानरूपले अनुगत एक आत्मतत्त्वको पनि साक्षात्कार गर्दछन्, यही मेरो निश्चित ज्ञान हो ॥ १४ ॥ जब कि त्यो योटै आत्मतत्त्वको सदा अपरोक्षानुभवले त्रिगुणात्मक भावको, उत्पत्ति, स्थिति र लय देखिएन भने यही विज्ञान हो ॥ १५ ॥ जो महत्तत्त्वादि कार्यको उत्पत्ति, प्रलय र स्थितिमा कारण र अधिष्ठान रूपले योटा कार्यबाट अर्को कार्यको अन्तर्गत अनुगत छ र ती सबैको लय भएर जे रहन्छ, त्यही सत् अर्थात् ब्रह्म हुन्छ ॥ १६ ॥ शब्द, प्रत्यक्ष, अनुमान र ऐतिह्य, महाजन तथा प्रसिद्धि—यी चार प्रमाणहरूमा व्यतिक्रम हुनाले विज्ञानी पुरुष यो विकल्परूपी संसारबाट विरक्त हुन्छ ॥ १७ ॥ कर्म परिणामशील छन् र तीबाट प्राप्त ब्रह्मलोकसम्म अन्यान्य अति लोक छन्, ती सब विनाशवान हुनाले अमङ्गलरूप नै रहन्छन् । विचारवान्‌को उचित कर्तव्य हो–यो लोक जस्तै परलोक पनि नाशवान् छ ॥ १८ ॥ हे अनघ ! मैले पहिल्यै भक्ति योगको निर्माण

वर्णन गरिदिएँ, तर त्यता तिम्रो प्रीति स्वयं बढेको छ ; अतः अब म आफ्नू भक्तिको उत्कृष्ट साधन फेरि भन्दछु ॥ १९ ॥ मेरा कथाहरूमा श्रद्धा राख्नु, सदा मेरो नाम संकीर्तन गर्नु, मेरा पूजामा तत्पर रहनु, स्तुति गर्नु । मेरो सेवामा प्रेम, सबै अङ्गले मलाई प्रणाम गर्नु, मेरा भक्तगणको पूजा गर्दै रहनु सबै प्राणीहरू मलाई नै देख्नु, मेरै निम्ति सर्वाङ्गको चेष्टा गर्नु. वाणीद्वारा मेरै गुणगान र ममा नै मन लगाउनु, सबै कामनाहरू त्यागिदिनु, मेरै निम्ति धन, भोग र सुख लत्याउनु र जुन यज्ञ, दान, हवन, जप, व्रत, तप गरिन्छ, त्यो मेरै निम्ति गर्नु - हे उद्धव ! यिनै धर्मको पालन गर्दै आत्मसमर्पण गर्ने व्यक्तिको हृदयमा जब मेरो भक्ति उत्पन्न हुन्छ, अनि उसलाई अरु के पदार्थको इच्छा रहन सक्दछ ? ॥ २०-२४॥ यसरी जबसम्म म सत्त्वगुणको उद्रेकले शान्त-चित्त आत्मामा लगाउन सकिन्छ तब धर्म, ज्ञान, वैराग्य तथा ऐश्वर्य आउने गर्दछन् ॥२५॥ यदि त्यही चित्त विकल्पमय संसारमा लगाइ-

मद्भक्तेः कारणं परम् ॥ १९ ॥ श्रद्धाऽमृतकथायां मे शश्वन्मदनुकीर्तनम् ॥ परिनिष्ठा च पूजायां स्तुतिभिः स्तवनं मम ॥ २० ॥ आदरः परिचर्यायां सर्वाङ्गैरभिवन्दनम् ॥ मद्भक्तपूजाऽभ्यधिका सर्वभूतेषु मन्मतिः ॥ २१ ॥ मदर्थेष्वङ्गचेष्टा च वचसा मद्गुणेरणम् ॥ मय्यर्पणं च मनसः सर्वकामविवर्जनम् ॥ २२ ॥ मदर्थेऽर्थपरित्यागो भोगस्य च सुखस्य च ॥ इष्टं दत्तं हुतं जप्तं मदर्थं यद्व्रतं तपः ॥२३॥ एवं धर्मैर्मनुष्याणामुद्धवात्मनिवेदिनाम् ॥ मयि सञ्जायते भक्तिः कोऽन्योऽर्थोऽस्यावशिष्यते ॥ २४ ॥ यदात्मन्यर्पितं चित्तं शान्तं सत्त्वोपबृंहितम् ॥ धर्मं ज्ञानं सवैराग्यमैश्वर्यं चाभिपद्यते ॥ २५ ॥ यदर्पितं तद्विकल्पे इन्द्रियैः परिधावति ॥ रजस्वलं चासन्निष्ठं चित्तं विद्धि विपर्ययम् ॥ २६ ॥ धर्मो मद्भक्तिकृत्प्रोक्तो ज्ञानं चैकात्म्यदर्शनम् ॥ गुणेष्वसङ्गो वैराग्यमैश्वर्यं चाणिमादयः ॥ २७ ॥ उद्धव उवाच ॥ यमः कतिविधः प्रोक्तो नियमो वाऽरिकर्शन ॥ कः शमः को दमः कृष्ण का तितिक्षा धृतिः प्रभो ॥ २८ ॥ किं दानं किं तपः शौर्यं किं सत्यमृतमुच्यते ॥ कस्त्यागः किं धनं चेष्टं को यज्ञः का च दक्षिणा ॥२९॥ पुंसः किंस्विद्बलं श्रीमन्भगो लाभश्च केशव ॥ का विद्या ह्रीः परा का श्रीः किं सुखं दुःखमेव च ॥ ३० ॥ कः पण्डितः कश्च मूर्खः कः पन्था उत्पथश्च कः ॥ कः स्वर्गो नरकः कःस्वित्को बन्धुरुत किं गृहम् ॥ ३१ ॥ क आढ्यः को दरिद्रो वा कृपणः कः क ईश्वरः ॥ एतान्प्रश्नान्मम ब्रूह

दिइन्छ भने त्यो इन्द्रियहरूसित उसैमा दगुरिरहन्छ । यस प्रकार रजोगुणप्रधान तथा झूटो पदार्थमा प्रीति राख्ने चित्तलाई नै विपर्यय अर्थात् अधर्मादिको प्राप्तिमा हेतु जान्नु पर्दछ ॥२६॥ जुनसुकै कार्यले मेरो भक्ति हुन्छ भने, त्यही धर्म हो, एकात्म्य दर्शन नै ज्ञान हो, गुणरूप विषयमा आसक्त नहुनु नै वैराग्य हो र अणिमादि सिद्धिहरू नै ऐश्वर्य मानिन्छन् ॥२७॥ उद्धवजी भन्दछन्—हे अरिकर्षन ! यम कति थरिका हुन्छन् ? नियम कुन-कुन हुन् ? हे कृष्ण ! हे विभो ! शम के हो ? दम के हो ? तितिक्षा के हो ? धैर्य कसलाई भन्दछन ? ॥२८॥ दान तप र शूरवीरता कसलाई भन्दछन् ? सत्य तथा ऋत के हो ? त्याग,इष्ट,धन यज्ञ र दक्षिणाको स्वरूप के हो ? ॥२९॥ पुरुषको बल के वस्तु हो ? भग अर्थात् कल्याण तथा परमलाभ कसलाई भन्दछन ? उत्तम विद्या, लज्जा र उत्तम श्री के हो ? सुख र दुःख कसलाई भन्दछ ? ॥३०॥ पण्डित र मूर्ख कस्तालाई भन्दछन् ! सुमार्ग र कुमार्ग के हो ? स्वर्ग के हो?

नरक के हो ? बन्धु र घर केलाई भन्दछन् ? ॥ ३१ ॥ धनी के हो ? निर्धन को हो ? कृपण कसलाई भन्दछन ? ईश्वर को हो ? हे सत्पुरुषहरूका स्वामी ! मेरो यी प्रश्न र तिनको विपरीत अशुभ कर्मको पनि व्याख्या गरी बुझाउनोस् ॥ ३२ ॥ भगवान् आज्ञा हुन्छ—हे उद्धव ! अहिंसा, सत्य, अस्तेय, ह्री अर्थात् लज्जा, असञ्चय अर्थात् चाहिए भन्दा बढ्ता धन जम्मा नपार्नु, आस्तिकता, ब्रह्मचर्य, मौन, स्थिरता, क्षमा, अभय, शौच, जप, तप, होम, श्रद्धा, अतिथि-सेवा, मेरो पूजा, तीर्थ-भ्रमण, परोपकार, सदा सचेष्टता, सन्तोष तथा गुरु-सेवा—यी बाह्र यम र नियम कहिएका छन् । हे तात ! यी यम-नियम आफ्नू पालन गर्ने प्राणीलाई सबै इच्छित कामनाहरू पूर्ण पारिदिने गर्दछन् ॥ ३३-३५ ॥ प्राणीका बुद्धिको ममा लाग्नु, शम, इन्द्रियको दमनलाई दम र कष्ट सहनेको नाम तितिक्षा हो । जिह्वा र उपस्थेन्द्रियको वेग रोक्नु नै धैर्य कहिन्छ ॥ ३६ ॥ समस्त प्राणीहरूका प्रति द्रोह भावनाको

विपरीताँश्च सत्पते ॥ ३२ ॥ श्रीभगवानुवाच ॥ अहिंसा सत्यमस्तेयमसङ्गो ह्रीरसञ्चयः ॥ आस्तिक्यं ब्रह्मचर्यं च मौनं स्थैर्यं क्षमाऽभयम् ॥ ३३ ॥ शौचं जपस्तपो होमः श्रद्धाऽऽतिथ्यं मदर्चनम् ॥ तीर्थाटनं परार्थेहा तुष्टिराचार्यसेवनम् ॥३४॥ एते यमाः सनियमा उभयोर्द्वादश स्मृताः ॥ पुंसामुपासितास्तात यथाकामं दुहन्ति हि ॥ ३५ ॥ शमो मन्निष्ठता बुद्धेर्दम इन्द्रियसंयमः ॥ तितिक्षा दुःखसंमर्षो जिह्वोपस्थजयो धृतिः ॥ ३६ ॥ दण्डन्यासः परं दानं कामत्यागस्तपः स्मृतम् ॥ स्वभावविजयः शौर्यं सत्यं च समदर्शनम् ॥ ३७ ॥ ऋतं च सूनृता वाणी कविभिः परिकीर्तिता ॥ कर्मस्वसङ्गमः शौचं त्यागः संन्यास उच्यते ॥ ३८ ॥ धर्म इष्टं धनं नृणां यज्ञोऽहं भगवत्तमः ॥ दक्षिणा ज्ञानसन्देशः प्राणायामः परं बलम् ॥३९॥ भगो म ऐश्वरो भावो लाभो मद्भक्तिरुत्तमा ॥ विद्याऽऽत्मनि भिदाबाधो जुगुप्सा ह्रीरकर्मसु ॥४०॥ श्रीर्गुणा नैरपेक्ष्याद्याः सुखं दुःखसुखात्ययः ॥ दुःखं कामसुखापेक्षा पण्डितो बन्धमोक्षवित् ॥४१॥ मूर्खो देहाद्यहंबुद्धिः पन्था मन्निगमः स्मृतः ॥ उत्पथश्चित्तविक्षेपः स्वर्गः सत्त्वगुणोदयः ॥४२॥

त्याग नै परम दान हो ! कामना अर्थात् भोगहरू त्याग्नु नै परम तप हो । सबै वासनामयी चित्तवृत्तिहरूलाई आफ्नू वशीभूत गर्नु नै शूरता र सबैमा समदर्शन नै परम सत्य कहिन्छ ॥ ३७ ॥ सत्य र मधुर वाणी नै विद्वान् द्वारा ऋत कहिन्छ । सबै कर्ममा आसक्ति नराख्नु नै शौच हो र कर्महरूको त्याग नै संन्यास कहिन्छ ॥ ३८ ॥ एक मात्र धर्म नै मनुष्यको इष्ट धन हुन्छ । परमेश्वर-सम्पन्नहरूमा श्रेष्ठ म यज्ञ पुरुष नै यज्ञ हुँ । ज्ञानोपदेश नै वास्तविक दक्षिणा र प्राणायाम नै बल हो ॥ ३९ ॥ मेरो ऐश्वर्य ईश्वरी भाव हो र मेरो उत्तम भक्ति प्राप्त हुनु नै परमलाभ हो । आत्मा र परमात्मामा भेद-बुद्धिको अभाव नै विद्या र दुष्कर्मबाट सदा परै रहनु लज्जा कहिन्छ ॥ ४० ॥ निरपेक्षता आदि

---

दृष्टान्त ( क्षमा ) भगवान् बुद्धदेवलाई यौटा धूर्तले गाली गर्‍यो । बुद्ध भगवान् केही बोलेनन् । मौकापाएर उसले फेरि गाली गर्‍यो, तर भगवान्ले केही भनेनन् । तेस्रो दिन उसले गाली गर्दा पनि जब ती बोलेनन्, तब उसले भन्यो—'भगवन् ! मैले हजुरलाई अनेक गाली गरें, परन्तु हजुरलाई रिस उठेन । यसको कारण के हो ?' भगवान् बुद्धले भन्नुभयो—'पहिले तिमीसँगाई यो भन—यदि कोही मनुष्य केही दिन भनेर लैजान्छ र लिने व्यक्तिले त्यो स्वीकार गरेन भने त्यो वस्तु कोसित रहन्छ ?' धूर्तले भन्यो—'त्यसले ल्याएको उसैसित रहन्छ ।' बुद्धदेवले भन्नु भयो—'तिमी मलाई गाली गर्न ल्याएका थियौ, मैले त्यो स्वीकार गरिन । अनि गाली कोसित रह्यो ?' यति सुनेर धूर्त अति लज्जित भयो कि बुद्धदेवका पाउमा परेर क्षमा माग्यो र त्यसै दिनदेखि उनको शिष्य बन्यो ।

गुणलाई श्री मन्दछन् । सुख-दुःखदेखि पर पुग्नु नै परम सुख हो । विषय-सुखको इच्छा नै दुःख हो । जो बन्धन र मोक्षको भेद जान्दछ, वास्तवमा त्यही पण्डित हो ॥४१॥ देह आदिमा अहंबुद्धि राख्ने नै मूर्ख मानिन्छ । मलाई प्राप्त गर्ने बाटो नै वास्तविक बाटो हो । चित्तमा विक्षेप उत्पन्न बाटो नै कुबाटो हो र सत्त्वगुणको उदय हुनु नै स्वर्ग कहिन्छ ॥४२॥ तमोगुणको वृद्धि नै नरक हो । हे मित्र ! म नै सबैको गुरुरूप बन्धु हुँ, मनुष्यको देह नै घर हो र गुणी नै राम्रो धनवान् हुन्छ ॥४३॥ असन्तुष्ट व्यक्ति नै निर्धन हुन्छ । अजितेन्द्रिय नै कृपण अर्थात् दीन हो । विषयमा अनासक्त प्राणी नै ईश्वर अर्थात् स्वाधीन हो । यसको विपरीत विषयी पुरुष नै अनीश्वर अर्थात् पराधीन रहन्छन् ॥ ४४ ॥ हे उद्धव ! यस प्रकार मैले तिम्रा सबै प्रश्नको निरूपण गरिदिएँ ; गुण-दोषका लक्षणहरूको यो भन्दा बर्ता के विवेचन हुन सक्छ ? केवल यति मै बुझ कि गुण-दोषलाई देख्नु नै दोष हो, यी दोषलाई नदेख्नु नै सर्वश्रेष्ठ गुण हो ॥ ४५ ॥ इति श्रीमद्भागवते पुराणे एकादशस्कन्धे 'शान्तिश्री' भाषाटीकायामेकोनविंशोऽध्यायः ॥ १९ ॥

नरकस्तम उन्नाहो बन्धुर्गुरुरहं सखे ॥ गृहं शरीरं मानुष्यं गुणाढ्यो ह्याढ्य उच्यते ॥ ४३ ॥ दरिद्रो यस्त्वसन्तुष्टः कृपणो योऽजितेन्द्रियः ॥ गुणेष्वसक्तधीरीशो गुणसङ्गो विपर्ययः ॥ ४४ ॥ एत उद्धव ते प्रश्नाः सर्वे साधु निरूपिताः ॥ किं वर्णितेन बहुना लक्षणं गुणदोषयोः ॥ गुणदोषदृशिर्दोषो गुणस्तूभयवर्जितः ॥४५॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे एकोनविंशोऽध्यायः ॥१९॥

उद्धव उवाच ॥ विधिश्च प्रतिषेधश्च निगमो हीश्वरस्य ते ॥ अवेक्षतेऽरविन्दाक्ष गुणं दोषं च कर्मणाम् ॥१॥ वर्णाश्रमविकल्पं च प्रतिलोमानुलोमजम् ॥ द्रव्यदेशवयःकालान्स्वर्गं नरकमेव च ॥२॥ गुणदोषभिदादृष्टिमन्तरेण वचस्तव ॥ निःश्रेयसं कथं नृणां निषेधविधिलक्षणम् ॥३॥ पितृदेवमनुष्याणां वेदश्चक्षुस्तवेश्वर ॥ श्रेयस्त्वनुपलब्धेऽर्थे साध्यसाधनयोरपि ॥ ४ ॥ गुणदोषभिदादृष्टिर्निगमात्ते न हि स्वतः ॥ निगमेनापवादश्च भिदाया इति ह भ्रमः ॥५॥ श्रीभगवानुवाच ॥ योगास्त्रयो मया प्रोक्ता नृणां श्रेयोविधित्सया ॥ ज्ञानं कर्म च भक्तिश्च नोपायोऽन्योऽस्ति कुत्रचित् ॥६॥ निर्विण्णानां ज्ञानयोगो न्यासिनामिह कर्मसु ॥ तेष्वनिर्विण्णचित्तानां कर्मयोगस्तु कामिनाम् ॥७॥ यदृच्छया मत्कथादौ जातश्रद्धस्तु यः पुमान् ॥ न निर्विण्णो नाति-

(ज्ञान, कर्म र भक्तियोगको निरूपण)—उद्धव भन्दछन्—हे कमलनयन ! हजुरकी आज्ञारूपिणी श्रुति पनि विधि-निषेधात्मक हुनाले कर्मका गुण तथा दोषलाई देख्दछिन् ॥१॥ त्यो वर्णाश्रम-भेद, प्रतिलोमज अर्थात् कुनै नीच जातको पुरुषबाट उच्च जातकी स्त्रीमा उत्पन्न सन्तान र अनुलोमज अर्थात् कुनै उच्च जातको पुरुषद्वारा नीच जातकी स्त्रीमा उत्पन्न सन्तान तथा द्रव्य, देश, अवस्था, काल, स्वर्ग र नरकको पनि विचार गर्दछिन् ॥२॥ हजुरको विधिनिषेधात्मक वाक्यरूप वेद पनि बिना गुणदोषमयी भेददृष्टि हुने मनुष्यको कल्याण कसरी गन सक्छ ? ३॥ हे ईश्वर ! अदृष्टस्वर्ग-अपवर्ग आदि तथा साध्य-साधनको विषयमा हजुरको वाक्यरूप वेद नै पितृ, देवता र मनुष्यका श्रेष्ठ नेत्र हुन् ॥४॥ हे स्वामिन् ! गुणदोषमयी भेददृष्टि पनि त हजुरकी आज्ञारूपिणी श्रुतिबाट नै पाइन्छ । त्यो स्वतः सिद्धि होइन । फेरि श्रुतिले नै भेद-दृष्टिको बाध पनि हुन्छ । अतः मलाई भ्रम भइरहेको छ । कृपया मेरो संशय निवारण गरिदिनोस् ॥५॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! सबै मनुष्यको कल्याण गर्नको निमित्त नै ज्ञानयोग, भक्तियोग र कर्मयोगरूपी तीन योग कहिन्छन् । मोक्षप्राप्तिको अरु कुनै उपाय

1335

कहीं पाउन सकिन्न ॥६॥ सबै कर्मबाट विरक्त भएर तिनलाई त्यागिदिने पुरुषका लागि ज्ञानयोग कहिएको छ । हुने कर्मबाट वैराग्य सकाम पुरुषका लागि कर्मयोग कहिएको छ ॥७॥ सौभाग्यवश जसमा मेरो कथा-श्रवण आदिको श्रद्धा उत्पन्न भएको छ र जो न वर्ता आसक्त छ, उसको निम्ति भक्तियोग नै सिद्धिदायक छ ॥८॥ जबसम्म कर्मबाट वैराग्य हुँदैन र मेरा कथा आदिको श्रवण-मननमा श्रद्धा नहोस्, तबसम्म कर्म गर्दै जाओस् ॥९॥ हे उद्धव ! जो पुरुष स्वधर्म पालनपूर्वक कर्मफलको आशा त्यागेर यज्ञादि कर्म गर्दै रहन्छ, त्यो यदि काम्य र निषिद्ध कर्म गर्दैन भने न स्वर्गमा पुग्छ र नर्कमै गाडिन्छ ॥ १० ॥ स्वधर्ममा तत्पर रहने त्यो व्यक्ति निष्पाप तथा पवित्र भएर यही लोक र मानवदेहमै रहेर पनि आफ्नू प्रारब्धानुसार कि त विशुद्ध आत्मज्ञान प्राप्त गर्दछ अथवा मेरी भक्ति नै प्राप्त गर्दछ ॥ ११ ॥ स्वर्गवासी देवता तथा नारकी जीव—यी दुवै नै मनुष्य देह पाउने इच्छा गर्दछन्, किनकि मानव देह नै ज्ञान र भक्तिद्वारामलाई प्राप्त गर्ने साधन छ र ती दुवै स्वर्गीय तथा नारकी देह मेरो प्राप्तिको साधन हुन सक्तैन ॥ १२ ॥अतः विवेकशील पुरुषको कर्तव्य हुन जान्छ—त्यो न त स्वर्गीय गति खोजोस्, न नारकी गति, न यस नाशवान् मनुष्य शरीरमा नै पुनः पाउने इच्छा गरोस् किनकि देहमा आस्था भएपछि

सक्तो भक्तियोगोऽस्य सिद्धिदः ॥ ८ ॥ तावत्कर्माणि कुर्वीत न निर्विद्येत यावता ॥ मत्कथाश्रवणादौ वा श्रद्धा यावन्न धार्यते ॥ ९ ॥ स्वधर्मस्थो यजन्यज्ञैरनाशीःकाम उद्धव ॥ न याति स्वर्गनरकौ यद्यन्यन्न समाचरेत् ॥ १० ॥ अस्मिँल्लोके वर्तमानः स्वधर्मस्थोऽनघः शुचिः ज्ञानं विशुद्धमाप्नोति मद्भक्तिं वा यदृच्छया ॥११॥ स्वर्गिणोऽप्येतमिच्छन्ति लोकं निरयिणस्तथा ॥ साधकं ज्ञानभक्तिभ्यामुभयं तदसाधकम् ॥ १२ ॥ न नरः स्वर्गतिं काङ्क्षेन्नारकीं वा विचक्षणः ॥ नेमं लोकं च काङ्क्षेत देहावेशात्प्रमाद्यति ॥ १३ ॥ एतद्विद्वान्पुरा मृत्योरभवाय घटेत सः ॥ अप्रमत्त इदं ज्ञात्वा मर्त्यमप्यर्थसिद्धिदम् ॥ १४ ॥ छिद्यमानं यमैरेतैः कृतनीडं वनस्पतिम् ॥ खगः स्वकेतमुत्सृज्य क्षेमं याति ह्यलम्पटः ॥ १५ ॥ अहोरात्रैश्छिद्यमानं बुद्ध्वायुर्भयवेपथुः ॥ मुक्तसङ्गः परं बुद्ध्वा निरीह उपशाम्यति ॥ १६ ॥ नृदेहमाद्यं सुलभं सुदुर्लभं प्लवं सुकल्पं गुरुकर्णधारम् ॥ मयानुकूलेन नभस्वतेरितं पुमान् भवाब्धिं न तरेत्स आत्महा ॥ १७ ॥ यदारम्भेषु निर्विण्णो विरक्तः संयतेन्द्रियः ॥ अभ्यासेनात्मनो योगी धारयेदचलं

मनुष्य प्रमाद गर्न लाग्दछ ॥ १३ ॥ शरीर-त्यागको पहिल्यै सावधानीपूर्वक यो जानोस् कि मनुष्यदेह नाशवान् भएर पनि परम पुरुषार्थको साधक छ । अतः यस देहले अविनाशी मोक्षको प्राप्तिका लागि चेष्टा गरोस् ॥१४॥ जुन वृक्षमा गुँड बनेको छ, यस्तो निज निवासस्थानरूपी यस देह वृक्षको यमदूत द्वारा सधैं काटिन लागेको देखेर यसमा बस्ने जीवरूपी पक्षी यसलाई अनासक्त भावले छाडेर उडिजान्छ ॥ १५ ॥ दिन र रात बराबर हाम्रो आयु काटिरहेका छन् । यो तथ्य जानेर जो पुरुष डरले काँपिरहेको होस्, त्यो आफ्ना परम आत्मस्वरूपलाई जानिसकेपछि यसमा आसक्त नहोस् र यसको रक्षामा-चेष्टाहीन भएर शान्त हुने गर्दछ ॥ १६ ॥ यो मनुष्य शरीर आद्य अर्थात् सबै शुभ फलहरूको प्राप्तिका आदि कारण छ र सुकर्मीहरूलाई पनि अति दुर्लभ छ । यो संसार-सागरलाई तर्नको निम्ति बलियो नौकास्वरूप छ, गुरु नै यसका कर्णधार छन् र अनुकूल वायुद्वारा नै प्रेरित भएर त्यो डुङ्गा पारी पुग्न सक्तछ । यस शरीरलाई पाएर पनि जो व्यक्ति संसार-सिन्धु तर्न सक्तैन त्यसलाई आत्मघाती नै भन्नुपर्दछ ॥१७॥ जब त्यो कर्मको प्रवृत्तिबाट उदासीन रहिरहन्छ।

होओस्, अनि इन्द्रिय-संयम र आत्मचिन्तनको अभ्यास गरेर आफ्नू चित्त स्थिर पारोस् ॥ १८ ॥ चित्त स्थिर पार्दा जब मन चंचल भई यता-उता डुल्ने भयो भने सतर्कताले उसको इच्छा अलि अलि पूर्ण पार्दै युक्तिले मनलाई वशमा पारोस् ॥१९॥ मनको स्वच्छन्द गतिलाई कहिल्यै खुला नछाडोस् बरु प्राण र इन्द्रियलाई जितेर सात्त्विक बुद्धिले उसलाई आफ्नो अधीन पारोस् ॥२०॥ जस्तै वशमा पार्न योग्य घोडालाई आफ्नू मनोभावको ज्ञाता तुल्याउने इच्छुक सवार उसलाई बारम्बार फकाएर वशमा पार्दछ—त्यस्तै अनुरोधपूर्वक मनको विग्रह गर्नु पनि योग मान्छि ॥ २१ ॥ सांख्य विधिको अनुसार सबै वस्तुको उद्भव र प्रलयको अनुलोम-प्रतिलोम क्रमले तबसम्म चिन्तन गर्दै रहोस् जबसम्म साधकको मन एकदम शान्त हुँदैन ॥ २२ ॥ यसरी गुरुले बताएको आत्मतत्त्वलाई राम्ररी बुझिसकेपछि सबैतिरबाट उदासीन तथा विरक्त पुरुषको चित्त पूर्वोक्त आत्मतत्त्वको नै बारम्बार चिन्तन गर्दै रहनाले आफ्नू अभिमान त्याग्दछ ॥ २३ ॥ पूर्वोक्त यम-नियमादि योगसाधन र आन्वीक्षिकी अर्थात् ब्रह्मविचारसित सम्बन्ध राख्ने विद्या र मेरो प्रतिमाको सदैव उपासनाले

मनः ॥ १८ ॥ धार्यमाणं मनो यर्हि भ्राम्यदाश्वनवस्थितम् ॥ अतन्द्रितोऽनुरोधेन मार्गेणात्मवशं नयेत् ॥ १९ ॥ मनोगतिं न विसृजेज्जितप्राणो जितेन्द्रियः ॥ सत्वसम्पन्नया बुद्ध्या मन आत्मवशं नयेत् ॥ २० एष वै परमो योगो मनसः संग्रहः स्मृतः ॥ हृदयज्ञत्वमन्विच्छन्दम्यस्येवार्वतो मुहुः ॥ २१ ॥ सांख्येन सर्वभावानां प्रतिलोमानुलोमतः ॥ भवाप्ययावनुध्यायेन्मनो यावत्प्रसीदति ॥ २२ ॥ निर्विण्णस्य विरक्तस्य पुरुषस्योक्त-वेदिनः ॥ मनस्त्यजति दौरात्म्यं चिन्तितस्यानुचिन्तया ॥ २३ ॥ यमादिभिर्योगपथैरान्वीक्षिक्या च विद्यया ॥ ममार्चोपासनाभिर्वा नान्यैर्योग्यं स्मरेन्मनः ॥ २४ ॥ यदि कुर्यात्प्रमादेन योगी कर्म विगर्हितम् ॥ योगेनैव दहेदंहो नान्यत्तत्र कदाचन ॥ २५ ॥ स्वेऽधिकारे या निष्ठा स गुणः परिकीर्तितः ॥ कर्मणां जात्यशुद्धानामनेन नियमः कृतः ॥ गुणदोषविधानेन सङ्गानां त्याजनेच्छया ॥ २६ ॥ जातश्रद्धो मत्कथासु निर्विण्णः सर्व-कर्मसु ॥ वेद दुःखात्मकान्कामान्परित्यागेऽप्यनीश्वरः ॥ २७ ॥ ततो भजेत मां प्रीतः श्रद्धालुर्दृढनिश्चयः ॥ जुषमाणश्च तान्कामान्दुःखोदर्कांश्च गर्हयन् ॥ २८ ॥ प्रोक्तेन भक्तियोगेन भजतो माऽसकृन्मुनेः ॥ कामा हृदय्या नश्यन्ति सर्वे मयि हृदि स्थिते ॥ २९ ॥ भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्व-

मन परमा माको स्मरण गर्न थाल्दछ ॥ २४ ॥ कदाचित प्रमादवश योगीद्वारा कुनै निन्दनीय कर्म भयो भने त्यस पापको योगले नै प्रायश्चित गरोस् । त्यसको निम्ति कुनै अन्य साधनको अवलम्बन गर्ने खाँचो छैन ॥ २५ ॥ आफाफ्ना अधिकारमा निष्ठा राख्नु नै गुण हो । वेदमा गुण-दोषको विधान गरेर जन्मतः अशुद्ध अर्थात् अपत् प्रवृत्तिले गर्दा हुने पापकर्म त्यागको नियम तिनको आसक्तिलाई छुटाउने इच्छाले नै गरिएको छ ॥ २६ ॥ जुन व्यक्तिलाई मेरा कथाहरूमा श्रद्धा छ र अन्य कर्ममा वैराग्य छ, त्यो यद्यपि सबै कामनालाई दुःखरूप ठान्दछ तापनि तिनलाई त्याग्न समर्थ हुन्न । यस्तो दशामा उसको कर्तव्य हुन्छ कि ती कर्मलाई परिणाममा दुःखदायी जानेर तिनको निन्दा गर्दै रहे पनि क्रमशः अनुष्ठान कम गरोस् र दृढनिश्चयी भएर प्रीतिपूर्वक मेरो भजन गर्दै रहोस् । पूर्वोक्त भक्तियोगले मेरो निरन्तर भजन गर्ने योग्य मुनिको हृदयमा म स्थिर भएपछि तिनका सबै मानसिक वासना नष्ट हुन्छन् ॥ २७–२९ ॥ म सर्वात्माको साक्षात्कार भएपछि उसको हृदय-ग्रन्थि स्वतः खुल्दछ र सबै संशयहरू निवृत्त भएर जान्छन्

॥ ३० ॥ मेरो भक्तिले युक्त तथा मत्परायण योगीको निम्ति ज्ञान र वैराग्य प्रायः श्रेयसाधक हुँदैनन् ॥ ३१ ॥ कर्म, तप, ज्ञान, वैराग्य, योग, दान-धर्म र अन्याय श्रेय साधनद्वारा स्वर्ग अपवर्ग वा मेरो परमधाम आदि जे प्राप्त हुन्छ, त्यो सबै यदि इच्छा गरे मेरो भक्त केवल मेरै भक्ति गरेर अनायास प्राप्त गर्न सक्दछ ॥ ३२ ॥ ३३ ॥ ममा अनन्य प्रेम राख्ने धीर र साधु भक्त मैले दिए पनि कैवल्य वा अपुनर्भव मोक्ष आदि कुनै पनि पदको कामना गर्दैनन् ॥ ३४ ॥ अतः निरपेक्षतालाई नै उत्कृष्ट एवं निःश्रेयस कहिएको छ। अनि निष्काम तथा निरपेक्ष व्यक्तिलाई नै मेरो भक्ति प्राप्त हुन्छ ॥ ३५ ॥ मेरा भक्तलाई र बुद्धिदे अतीत परमतत्त्व प्राप्त समदर्शी महात्मालाई गुण दोष-द्वारा उत्पन्न विकार दुःख दिन्नन् ॥ ३६ ॥ जो मैले भनेका उपायको अवलम्बन गर्दछन्, ती मेरा क्षेममय धाममा प्राप्त भई ब्रह्मलाई पनि जान्दछन् ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे-पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां विंशोऽध्यायः ॥ २० ॥

संशयाः ॥ क्षीयन्ते चास्य कर्माणि मयि दृष्टेऽखिलात्मनि ॥ ३० ॥ तस्मान्मद्भक्तियुक्तस्य योगिनो वै मदात्मनः ॥ न ज्ञानं न च वैराग्यं प्रायः श्रेयो भवेदिह ॥ ३१ ॥ यत्कर्मभिर्यत्तपसा ज्ञानवैराग्यतश्च यत् ॥ योगेन दानधर्मेण श्रेयोभिरितरैरपि ॥ ३२ ॥ सर्वं मद्भक्तियोगेन मद्भक्तो लभतेऽञ्जसा ॥ स्वर्गापवर्गं मद्धाम कथञ्चिद्यदि वाञ्छति ॥ ३३ ॥ न किञ्चित्साधवो धीरा भक्ता ह्येकान्तिनो मम ॥ वाञ्छन्त्यपि मया दत्तं कैवल्यमपुनर्भवम् ॥ ३४ ॥ नैरपेक्ष्यं परं प्राहुर्निःश्रेयसमनल्पकम् ॥ तस्मान्निराशिषो भक्तिर्निरपेक्षस्य मे भवेत् ॥ ३५ ॥ न मय्येकान्तभक्तानां गुणदोषोद्भवा गुणाः ॥ साधूनां समचित्तानां बुद्धेः परमुपेयुषाम् ॥ ३६ ॥ एवमेतान्मयाऽऽदिष्टाननुतिष्ठन्ति मे पथः ॥ क्षेमं विदन्ति मत्स्थानं यद्ब्रह्म परमं विदुः ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे विंशतितमोऽध्यायः ॥ २० ॥

श्रीभगवानुवाच ॥ य एतान्मत्पथो हित्वा भक्तिज्ञानक्रियात्मकान् ॥ क्षुद्रान्कामाँश्चलैः प्राणैर्जुषन्तः संसरन्ति ते ॥१॥ स्वे स्वेऽधिकारे या निष्ठा स गुणः परिकीर्तितः॥ विपर्ययस्तु दोषः स्यादुभयोरेष निश्चयः ॥२॥ शुद्ध्यशुद्धी विधीयेते समानेष्वपि वस्तुषु ॥ द्रव्यस्य विचिकित्सार्थं गुणदोषौ शुभाशुभौ ॥३॥ धर्मार्थं व्यवहारार्थं यात्रार्थमिति चानघ ॥ दर्शितोऽयं मयाऽऽचारो धर्ममुद्वहतां धुरम् ॥४॥ भूम्यम्ब्वग्न्यनिलाकाशा भूतानां पञ्च धातवः ॥ आब्रह्म-

(द्रव्य, देश-कालका गुण-दोषको विवेचना)—भगवान् भन्नुहुन्छ–हे उद्धव ! मलाई प्राप्त गर्नेको निम्ति भक्ति, ज्ञान र कर्मको मार्ग छाडेर जो आफ्ना स्थिर इन्द्रियहरूका क्षुद्र विषय-भोगहरू भोग्दछन्, ती बारम्बार आवागमनको चक्रमा पर्दछन् ॥ १ ॥ आफ्आफ्ना अधिकारमा दृढ़पूर्वक अडिएर नै गुण र अनाधिकार चेष्टा गर्नु दोष हो। गुण-दोषको यही विवेचन हो ॥२॥ हे अनघ ! सबै वस्तु एकैनासै भए पनि द्रव्य अर्थात् उपयोगमा वस्तुको चिकित्साको निम्ति शुद्धि-अशुद्धि, गुण-दोष र शुभाशुभको विधान गरिएको छ। यिनमा धर्मको निम्ति नै शुद्धि-अशुद्धिको व्यवहारको निम्ति गुण दोष र देहयात्राको लागि शुभाशुभको विचार गरिन्छ। यसरी केवल धर्मको भारी बोक्नेहरूका लागि नै मैले मनु आदि रूपले आचारको मार्ग देखाएको हो ॥३-४॥ पृथ्वी, जल, तेज, वायु र आकाश–यी पंचभूत नै ब्रह्मादेखि स्थावरपर्यन्त सबै प्राणीको शरीरमा आरम्भका कारण छन् र यो पै म आत्मामा युक्त

छन् ॥५॥ हे उद्धव ! यी सबै शरीरका धातु समान छन्, तापनि यी शरीरका स्वार्थ अर्थात् धर्माधर्मरूप पुरुषार्थको सिद्धिका निम्ति वेदले भिन्न-भिन्न नाम र रूपको कल्पना गरेका छन् ॥ ६ ॥ हे साधो ! कर्मलाई संकुचित पार्नका निम्ति नै मैले देश-कालादि भाव र वस्तुहरूका गुण-दोषको विधान गरिएको छ ॥ ७ ॥ सबै देशमा जुन देश कृष्णसार मृग र ब्राह्मण-भक्त पुरुषसित रहित होस्, त्यो अपवित्र मानिन्छ । कृष्णसार मृग भएर पनि सौवीर र कीकट अर्थात् मगध-अङ्ग-वङ्ग-कलिङ्गादि देश अपवित्र मानिन्छन् । असंस्कृत वा बाँझो पनि अपवित्र मानिन्छ ॥ ८ ॥ द्रव्य संयोगले वा स्वयमेव जुन कालमा कर्म हुन सक्दछन्, उही शुद्ध हो र जुनमा कर्म हुन सक्तैनन्, कर्म अयोग्य हुनाले त्यहाँ काल अशुद्ध हुन्छ ॥ ९ ॥ सबै पदार्थको शुद्धि, द्रव्य, वचन, संस्कार, काल, महत्त्व तथा अल्पत्वले नै हुन्छ ॥ १० ॥ यसरी आफाफ्नो शक्ति, अशक्ति, बुद्धि तथा वैभवका अनुसार पनि

स्थावरादीनां शारीरा आत्मसंयुताः ॥५॥वेदेन नामरूपाणि विषमाणि समेष्वपि ॥ धातुषूद्धव कल्पयन्त एतेषां स्वार्थसिद्धये ॥६॥ देशकालादिभावानां वस्तूनां मम सत्तम ॥ गुणदोषौ विधीयेते नियमार्थं हि कर्मणाम् ॥७॥ अकृष्णसारो देशानामब्रह्मण्योऽशुचिर्भवेत् ॥ कृष्णसारोऽप्यसौवीरकीकटासंस्कृतेरिणम् ॥८॥कर्मण्यो गुणवान्कालो द्रव्यतः स्वत एव वा ॥ यतो निवर्तते कर्म स दोषोऽकर्मकः स्मृतः॥९॥द्रव्यस्य शुद्ध्यशुद्धी च द्रव्येण वचनेन च॥संस्कारेणाथ कालेन महत्त्वाल्पतयाऽथवा ॥१०॥ शक्त्याऽशक्त्याऽथवा बुद्ध्या समृद्ध्या च यदात्मनः ॥ अघं कुर्वन्ति हि यथा देशावस्थानुसारतः ॥११॥ धान्यदार्वस्थितन्तूनां रसतैजसचर्मणाम् ॥ कालवाय्वग्निमृत्तोयैः पार्थिवानां युतायुतैः ॥ १२ ॥ अमेध्यलिप्तं यद्येन गन्धं लेपं व्यपोहति ॥ भजते प्रकृतिं तस्य तच्छौचं तावदिष्यते ॥ १३ ॥ स्नानदानतपोऽवस्थावीर्यसंस्कारकर्मभिः ॥ मत्स्मृत्या चात्मनः शौचं शुद्धः कर्माचरेद् द्विजः ॥ १४ ॥

आत्माको निम्ति पनि जुन पापको प्राप्ति हुन्छ, त्यो पनि देश-काल अनुसार नै हुन्छ ॥ ११ ॥ धान्य, काठ, अग्नि अर्थात् हाड, हात्तीदाँत, सूत, रस अर्थात् मधुर-लवणादि, तेजस अर्थात् सुवर्ण र पारा आदि, छाला र घटादि सबै पदार्थको शुद्धि काल, वायु, अग्नि, माटो र जलले हुन्छ । देश, काल, अवस्थानुसार यी मिलाएर र कहीं दुवै प्रकारले शुद्धि हुन्छ ॥१२॥ कुनै वस्तुमा यदि केही अशुद्ध पदार्थ लागेको छ भने ताछेर अथवा माटो आदिले माझेर जब त्यस पदार्थमा गन्ध रहन्न तथा त्यो वस्तु आफ्नू पूर्णरूपमा आएपछि त्यसलाई शुद्ध जान्नु पर्दछ ॥ १३ ॥ फेरि स्नान, दान, जप, अवस्था, पराक्रम, संस्कार, कर्म र स्मरणले चित्त शुद्ध हुन्छ । यसरी शुद्ध भएर द्विजमात्रले विहित कर्म गर्दै रहनु पर्दछ । *गुरुको मुखबाट सुनेर राम्ररी हृदयंगम गर्नाले मन्त्र र मलाई अर्पण गर्नाले कर्मको शुद्धि हुनेछ । यस प्रकार सम्पूर्ण देश, काल, पदार्थ

* दृष्टान्त ( गुरु र मन्त्र )—कुनै बहाजको मस्तूल ( पाल बाँध्ने मूल खाँबो ) मा चरो बसेर आएर बस्यो । जहाज समुद्रमा गइरहेको थियो । चरालाई अब कुनै स्थान देखिरहेको थिएन, [illegible] बसोस् । चरा मनमा विचार गर्न लाग्यो—यस मस्तूलमा दिन कसरी बिताउने । कतै हरियो वृक्ष देखिए त्यहीं बस्ने थिएँ । म अवश्य कुनै हरियो वृक्ष आसन् निमित्त खोज्दछु । यस्तो विचार गरेर उड्यो । [illegible] फिर गयो तर कहीं वृक्ष देखापरेन । अनि उसर गयो, त्यहाँ पनि पानी बाहेक केही देखिएन । अन्तमा अब त्यो उड्दा-उड्दा थाक्यो फेरि मस्तूलमै आएर बस्यो र मनन लाग्यो—अब म यहीं मस्तूलमा [illegible] । कारण अब कुनै स्थान मेरो बस्ने बासो छैन । त्यसै दिनदेखि त्यो शान्त भयो र सुखपूर्वक दिन बिताउन लाग्यो । [illegible] हो—गुरुले जुन आधारको चरालाई मन्त्रका मस्तूलमा [illegible] [illegible]

धर्ता, मन्त्र र कर्म—यी छ शुद्ध भएपछि धर्म र अशुद्ध हुनाले अधर्म हुन्छ ॥ १५ ॥ कहीं-कहीं गुण पनि दोष र दोष पनि गुण हुने गर्दछ । अतएव देश, काल तथा जाति आदिको विचार गरेर जो एकै वस्तुमा गुण-दोषका नियम कहिएको छ, त्यो आफ्नू अंशमा सामान्य शास्त्रद्वारा प्राप्त गुण-दोष विभागको बाधक बन्नसक्दछ ॥ १६ ॥ यस निम्ति आफ्नू जातिको अनुरूप कर्म स्वरूपले सदोष भएर पनि उसको आचरण पतित वा अन्त्यजको निम्ति पाप-जनक हुँदैन, किनकि जो जातिले कर्मको सम्बन्ध विहित छ, त्यो उसका निम्ति दोषको कुरा होइन । त्यसले उसको पतन त्यसै गरी हुँदैन जसरी पृथ्वीमा सुतेको मनुष्य तल झर्दैन ॥ १७ ॥ जुन-जुन प्रवृत्तिले मनुष्यको चित्त उपरत हुँदै जान्छ, उतै-उतैतिर उसको बन्धन टुट्दै जान्छ । यो निवृत्ति नै मनुष्यको निम्ति शोक, मोह तथा भयहारी, कल्याणमय धर्म हो ॥ १८ ॥ अतः जन विषयमा मनुष्य गुण-बुद्धि गर्न थाल्द, तब त्यसको उनमा आसक्ति हुन्छ । यस आसक्तिले उनमा कामना हुन्छ र त्यसमा बाधा उपस्थित भएपछि कलह बढ्दछ ॥ १९ ॥ त्यस कलहले

मन्त्रस्य च परिज्ञानं धर्मशुद्धिर्मदर्पणम् ॥ धर्मः सम्पद्यते षड्भिरधर्मस्तु विपर्ययः ॥ १५ ॥ क्वचिद्गुणोऽपि दोषः स्याद्दोषोऽपि विधिना गुणः ॥ गुणदोषार्थनियमस्तद्भिदामेव बाधते ॥ १६ ॥ समानकर्माचरणं पतितानां न पातकम् ॥ औत्पत्तिको गुणः सङ्गो न शयानः पतत्यधः ॥ १७ ॥ यतो यतो निवर्त्तेत विमुच्येत ततस्ततः ॥ एष धर्मो नृणां क्षेमः शोकमोहभयापहः ॥ १८ ॥ विषयेषु गुणाध्यासात्पुंसः सङ्गस्ततो भवेत् ॥ सङ्गात्तत्र भवेत्कामः कामादेव कलिर्नृणाम् ॥ १९ ॥ कलेर्दुर्विषहः क्रोधस्तमस्तमनुवर्त्तते ॥ तमसा ग्रस्यते पुंसश्चेतना व्यापिनी द्रुतम् ॥ २० ॥ तया विरहितः साधो जन्तुः शून्याय कल्पते ॥ ततोऽस्य स्वार्थविभ्रंशो मूर्च्छितस्य मृतस्य च ॥ २१ ॥ विषयाभिनिवेशेन नात्मानं वेद नापरम् ॥ वृक्ष-जीविकया जीवन्व्यर्थं भस्त्रेव यः श्वसन् ॥ २२ ॥ फलश्रुतिरियं नृणां न श्रेयो रोचनं परम् ॥ श्रेयोविवक्षया प्रोक्तं यथा भैषज्यरोचनम् ॥ २३ ॥ उत्पत्त्यैव हि कामेषु प्राणेषु स्वजनेषु च ॥ आसक्तमनसो मर्त्या आत्मनोऽनर्थहेतुषु ॥ २४ ॥ न तानविदुषः स्वार्थं भ्राम्यतो वृजिनाध्वनि ॥ कथं युञ्ज्यात्पुनस्तेषु ताँस्तमो विशतो बुधः ॥२५॥ एवं व्यवसितं केचिदविज्ञाय कुबुद्धयः ॥ फलश्रुतिं कुसुमितां न वेदज्ञा वदन्ति हि ॥२६॥ कामिनः

दुःसह क्रोध हुन्छ । अज्ञान त्यस क्रोधको अनुगमन गर्दछ । अज्ञानले शीघ्र मनुष्यको स्मरण-शक्ति आवृत गराइदिने गर्दछ ॥२०॥ हे उद्धव ! स्मरण शक्तिले हीन पुरुष शून्यवत् हुन्छ । फेरि मृत तथा मूर्च्छित् व्यक्ति जस्तै संज्ञाहीन भइदिनाले उसको स्वार्थ पनि भ्रष्ट हुन्छ ॥ २१ ॥ यसरी भस्त्राजस्तै सास फेर्दै त्यो वृक्ष समान व्यर्थ बाँच्तछ र विषय लम्पटको कारण आत्मा तथा परमात्मा कसैलाई पनि जान्दैन ॥ २२ । फेरि वेदका फलश्रुतिहरू पुरुषका परम पुरुषार्थको प्रतिपादक हुन सक्दैनन् । ती सकाम र विषयी पुरुषका केवल श्रेयको तर्फ प्रवृत्त गर्नको निम्ति प्रयोजना मात्र हुन् । जस्तै तीतो औषधि खुवाउन बालकलाई फुल्याउँछन् ॥२३॥ आत्माको लागि अनर्थस्वरूप कामना, प्राण तथा कुटुम्बीमा मनुष्य जन्मैदेखि आसक्त हुन्छन् । त्यसरी ती आफ्नू सच्चा स्वार्थलाई नजानेर जन्म-मरणरूपी संसारमार्गमा अलमलिन्छन् । यस्तो घोर अन्धकारमा गडेका ती दीन पुरुषहरू कोही जान्ने फेरि किन त्यसैमा प्रवृत्त गर्ला ? ॥ २५ ॥ अतः वेदको यस अभिप्रायलाई नबुझी केही बुद्धिहीन पुरुष कर्मासक्तिले गर्दा कुसुमस्थानीय फल श्रुतिलाई नै परम फल

मान्दछन् । तर वास्तवमा यस्तो कुरा होइन, किनकि वेदका मर्मज्ञ जन यस्तो गर्दैनन् ॥२६॥ ती कामासक्त, कृपण व्यक्ति पुष्प अर्थात् स्वर्गादिलाई नै फल मान्न थाल्दछन् र अग्निले साध्य यज्ञादि कर्ममा नै मुग्ध भै लागिरहेर अन्त्यमा धूममार्गबाट जान्छन् । आफ्नू निजधाम अर्थात् निर्वाणपद प्राप्त गर्न सक्तैनन् ॥२७॥ हे उद्धव ! कर्मयोग ग्राह्य हुने प्राणपोषक पुरुष आफ्नू अन्त:करणमा स्थित मलाई देख्तैन, जसले कि सारा जगत् उत्पन्न भएको छ । जस्तै-जनका आँखामा जालो परेको छ, त्यो आफ्नू नजीकै हो पदार्थ पनि देख्नसक्तैन ॥२८॥ ती विषयी मेरो यो गूढ अभिप्राय जान्दैनन् कि वेदमा हिंसालाई प्रेरणा दिइएको छ । यदि कसैको हिंसामा विशेष प्रवृत्ति भए त्यो यज्ञमा पशुको केवल स्पर्श गरोस्, हिंसा नगरोस् यस्तो नियम छ । हिंसामा रत ती दुष्ट आफ्नू सुखको इच्छाले पशुको बलि दिएर देवता, पितृ तथा भूतपतिको यज्ञद्वारा यजन गर्दछन् ॥ २९ ॥ ३० ॥ ती व्यक्ति स्वप्नको जस्तै सत्य तथा सुन्दर मनपर्ने स्वर्गादि परलोक र त्यसको भोगका निम्ति मन-मनै विविध सङ्कल्प गरेर ठूलो लाभको आशाले मूल धन पनि गुमाइदिने व्यापारीको समान यस

कृपणा लुब्धाः पुष्पेषु फलबुद्धयः ॥ अग्निमुग्धा धूमतान्ताः स्वं लोकं न विदन्ति ते ॥ २७ ॥ न ते मामङ्ग जानन्ति हृदिस्थं य इदं यतः ॥ उक्थशस्त्रा ह्यसुतृपो यथा नीहारचक्षुषः ॥ २८ ॥ ते मे मतमविज्ञाय परोक्षं विषयात्मकाः ॥ हिंसायां यदि रागः स्याद्यज्ञ एव न चोदना ॥ २९ ॥ हिंसाविहारा ह्यालब्धैः पशुभिः स्वसुखेच्छया ॥ यजन्ते देवता यज्ञैः पितृभूतपतीन्खलाः ॥ ३० ॥ स्वप्नोपमममुं लोकयसन्तं श्रवणप्रियम् ॥ आशिषो हृदि सङ्कल्प्य त्यजन्त्यर्थान्यथा वणिक् ॥ ३१ ॥ रजःसत्त्वतमोनिष्ठा रजःसत्त्वतमोजुषः ॥ उपासत इन्द्रमुख्यान्देवादीन्न तथैव माम् ॥३२॥ इष्ट्वेह देवता यज्ञैर्गत्वा रंस्यामहे दिवि तस्यान्त इह भूयास्म महाशीला महाकुलाः ॥ ३३ ॥ एवं पुष्पितया वाचा व्याक्षिप्तमनसां नृणाम् ॥ मानिनां चातिस्तब्धानां मद्वार्ताऽपि न रोचते ॥ ३४ ॥ वेदा ब्रह्मात्मविषयास्त्रिकाण्डविषया इमे ॥ परोक्षवादा ऋषयः परोक्षं मम च प्रियम् ॥ ३५ ॥ शब्दब्रह्म सुदुर्बोधं प्राणेन्द्रियमनोमयम् ॥ अनन्तपारं गम्भीरं दुर्विगाह्यं समुद्रवत् ॥ ३६ ॥ मयोपबृंहितं भूम्ना ब्रह्मणाऽनन्तशक्तिना ॥ भूतेषु घोषरूपेण विसेषूर्णेव लक्ष्यते ॥ ३७ ॥ यथोर्णनाभिर्हृदयादूर्णामुद्वमते मुखात् ॥ आकाशाद्घोषवान्प्राणो मनसा स्पर्शरूपिणा ॥ ३८ ॥ छन्दोमयोऽमृत-

लोकमा व्यर्थ आफ्नू धन नाश गर्दछन् ॥३१॥ रज, सत्व, तम—यी तीन गुणमा लीन व्यक्ति आफ्नू अनुरूप रज, सत्व, तमोगुणको सेवन गर्ने भएका इन्द्रादिदेवताहरूको नै उपासना गर्दछन् । ती म गुणातीतको उपासना कहिल्यै गर्दैनन् ॥३२॥ यहाँ यज्ञादिद्वारा देवताहरूको यजन गरेर हामी स्वर्गलोकमा गएर आनन्द भोग्नेछौं र फेरि त्यसपछि यस लोकमा उच्च कुलमा जन्म लिएर ठूलो कुटुम्बी हुनेछौं—यसरी चित्र-विचित्र वाक्यले जसको चित्त चञ्चल भइरहेछ, ती अभिमानी र अत्यन्त उद्दण्ड पुरुषलाई मेरो कुरा राम्रो लाग्दैन । वेदका कर्म, उपासना तथा ज्ञान—यी तीन काण्ड छन् र ती ब्रह्म तथा आत्माको एकता सिद्ध गर्दछन्, तर मन्त्रदर्शी ऋषिहरू परोक्षवादी छन् अर्थात् ती विषयलाई स्पष्ट शब्दमा भन्दैनन् र मलाई पनि परोक्ष कथन प्रिय छ, किनकि यसले कुनै गूढ वस्तु अनधिकारी व्यक्तिले पाउन्न ॥३३-३५॥ पूर्वोक्त शब्द-ब्रह्म निकै दुर्बोध छ । त्यो प्राणमय (अर्थात् परा), मनोमय ( अर्थात् पश्यन्ती ) र इन्द्रियमय ( अर्थात् मध्यमा ) तीन भरिको छ । त्यो अपार समुद्र झैं अनन्त, गम्भीर र कष्टपूर्वक पारी तर्न सकिने योग्य छ ॥ ३६ ॥ म

1341

अनन्त शक्ति तथा व्यापक ब्रह्मले नै उसको विस्तार गरेको छ। कमलनालको सूक्ष्म तन्तु झैं त्यो ब्रह्म प्रथम प्राणीहरूको अन्तःकरणमा नादरूपले उत्पन्न हुन्छ। त्यो नाद कान बन्द गरेपछि सुनिन्छ ॥३७॥ जस्तै माकुरो आफ्नू हृदयले मुखद्वारा जालो उकेल्ने र निल्ने गर्दछ, उसै गरी सूक्ष्मनादरूप उपादान कारणयुक्त वेदमूर्ति एवं अमृतमय प्राणोपाधिक भगवान् हिरण्यगर्भ स्पर्शादि वर्णको सङ्कल्प गर्ने मनरूपी निमित्त कारणले हृदयाकाश द्वारा हुदुगत सूक्ष्म ॐ कोर व्यक्त स्पर्शसंज्ञक वर्ण अर्थात् कदेखि म सम्म, स्वर अर्थात् अ देखि अः सम्म, अर्थात् ष, श, स, ह, र अन्तस्थ अर्थात् य, र, ल, व यी वर्णले विभूषित र उत्तरोत्तर चार-चार बढ्ता वर्ण हुने छन्द द्वारा विचित्र भाषाहरूको रूपमा विस्तार प्राप्त विधि मार्ग हुने अनन्तपारयुक्त बृहतीलाई स्वयं रच्तछन् र फेरि उसलाई आफ्नू पेटमा समेटि लिन्छन् ॥३८-४०॥ चार-चार भन्दा बढ्ता वर्ण हुने छन्द हुन्—गायत्री, उष्णिक् अनुष्टुप्, बृहती, पंक्ति, त्रिष्टुप, जगती अतिच्छन्दा, अत्यष्टि, अतिजगती र विराट् ॥ ४१ ॥ त्यो बृहती के विधान गर्दछे, के भन्दछे र कसको अनुवाद गर्दै के के

मयः सहस्रपदवीं प्रभुः॥ ओंकाराद्व्यञ्जितस्पर्शस्वरोष्मान्तःस्थभूषिताम् ॥३९॥ विचित्रभाषाविततां छन्दोभिश्चतुरुत्तरैः ॥ अनन्तपारां बृहतीं सृजत्याक्षिपते स्वयम् ॥४०॥ गायत्र्युष्णिगनुष्टुप् च बृहती पंक्तिरेव च ॥ त्रिष्टुब्जगत्यतिच्छन्दो ह्यत्यष्ट्यतिजगद्विराट् ॥४१॥ किं वधत्ते किमाचष्टे किमनूद्य विकल्पयेत् ॥ इत्यस्या हृदयं लोके नान्यो मद्वेद कश्चन ॥ ४२ ॥ मां विधत्तेऽभिधत्ते मां विकल्प्यापोह्यते त्वहम् ॥ एतावान्सर्ववेदार्थः शब्द आस्थाय मां भिदाम् ॥ मायामात्रमनूद्यान्ते प्रतिषिध्य प्रसीदति ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे एकोविंशोऽध्यायः ॥२१॥

उद्धव उवाच ॥ कति तत्त्वानि विश्वेश संख्यातान्यृषिभिः प्रभो ॥ नवैकादश पञ्च त्रीण्यात्थ त्वमिह अशुश्रुम ॥ १ ॥ केचित्षड्विंशतिं प्राहुरपरे पञ्चविंशतिम् ॥ सप्तैके नवषट् केचिच्चत्वार्येकादशापरे ॥२॥ केचित्सप्तदश प्राहुः षोडशैके त्रयोदश ॥ एतावत्त्वं हि संख्यानामृषयो यद्विवक्षया ॥ गायन्ति पृथगायुष्मन्निदं नो वक्तुमर्हसि ॥ ३ ॥ श्रीभगवानुवाच ॥ युक्तं च सन्ति सर्वत्र भाषन्ते ब्राह्मणा यथा ॥ मायां मदीयामुद्गृह्य वदतां किं नु दुर्घटम् ॥ ४ ॥ नैतदेवं यथाऽऽत्थ त्वं यदहं वच्मि तत्तथा ॥ एवं विवदतां हेतुं शक्तयो मे दुरत्ययाः ॥ ५ ॥ यासां व्यतिकरादासीद्विकल्पो वदतां

विकल्प गर्दछे, त्यसको मर्मलाई संसारमा म बाहेक अरु कोही पनि जान्दैन ॥ ४२ ॥ त्यो मेरो नै विधान गर्दछे। उपास्यहरूले मेरो नै वर्णन गर्दछे र आकाशादिरूपले मेरो नै आरोप गरेर फेरि मेरो नै बाध गर्दछे। सबै वेदहरूको अर्थ यही हो। यो अर्थ मेरै भरमा वेदलाई मायामात्र भन्दै उसको निषेध गरेर अन्त्यमा स्वयं पनि शान्त हुने गर्दछ ॥४३॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'वासिष्ठी' भाषाटीकायामेकविंशोऽध्यायः ॥ २१ ॥

( तत्त्वको संख्या र पुरुष-प्रकृतिको विवेचना )—उद्धव भन्दछन्–हे प्रभो ! तत्त्वदर्शी ऋषिहरूले कति तत्त्व भनेका छन् ? अहिल्यै हजुरले नौ, एघार, पाँच र तीन जम्मै अठार तत्त्व भन्नुभयो, जो मैले सुनिसकें, तर कोही छब्बीस, पचीस र कोही छ, कोही चार, एघार, सत्र र कोही सोह्र र कोही तेह्र नै तत्त्व भन्दछन्। हे आयुष्मन् ! ती ऋषि जुन अभिप्रायले तत्त्वका भिन्न-भिन्न संख्या कहन्छन्, त्यो हजुर मलाई आज्ञा होस् ॥ १–३ ॥ भगवान् भन्नुहुन्छ—यस विषयमा ब्राह्मण जे भन्दछन् त्यो ठीक छ।

जगत्को हेतुको विषयमा यस्तो विवाद गर्नेहरूको विवादमा अति कष्टले पार पाइने योग्य मेरा सत्वादि शक्ति नै कारण हुन्छन् । ती शक्तिको क्षोभ भए नै यो विकल्परूपी प्रपञ्च-वादी प्रतिवादीको विवादस्थान बनेको छ । शम र दम स्थिर भएपछि यो प्रपञ्च स्वयं शान्त हुन्छ र उसको साथै विवाद पनि निवृत्त भएर जान्छ । हे पुरुषश्रेष्ठ ! तत्त्वहरूको परस्पर सम्मिलित हुनाले वक्ताले जे बताउनु अभीष्ट छ, त्यसै अनुसार कार्यकारण भावले वा न्यूनता अधिकताको विचारले तत्त्वका भिन्न-भिन्न संख्या गरिन्छन् । कारण-तत्त्व वा कार्यतत्त्वमा एकैमा अन्यान्य तत्त्व पनि मिसिएका देखिन्छन् । यसै निम्ति पूर्वापर अर्थात् कार्य-कारणरूपले तत्त्वको न्यूनाधिक संख्या खोज्ने वादीहरूमा जसले आफ्नू बुझाले जे भने, युक्तियुक्त हुनाले हामी उसैलाई निश्चित मानेर स्वीकार गर्दछौं ॥ ४-९॥ अनादिकालदेखि अविद्याग्रस्त व्यक्तिलाई स्वयं आत्मज्ञान कदापि प्राप्त हुन सक्तैन । अतः उसलाई ज्ञानोपदेशको निम्ति कुनै अन्य तत्त्वज्ञानीको खाँचो पर्दछ, किनकि आत्मा र परमात्मामा अणुमात्र पनि भेद छैन, यसै निम्ति कुनै अन्य व्यक्तिको कल्पना पनि

पदम् ॥ शमे शमदमेऽप्येति वादस्तमनुशाम्यति ॥ ६ ॥ परस्परानुप्रवेशात्तत्त्वानां पुरुषर्षभ ॥ पौर्वापर्यप्रसंख्यानं यथा वक्तुर्विवक्षितम् ॥ ७ ॥ एकस्मिन्नपि दृश्यन्ते प्रविष्टानीतराणि च ॥ पूर्वस्मिन् वा परस्मिन्वा तत्त्वे तत्त्वानि सर्वशः ॥ ८ ॥ पौर्वापर्यमतोऽमीषां प्रसंख्यानमभीप्सताम् ॥ यथा विविक्तं यद्वक्त्रं गृह्णीमो युक्तिसम्भवात् ॥९॥ अनाद्यविद्यायुक्तस्य पुरुषस्यात्मवेदनम् ॥ स्वतो न सम्भवादन्यस्तत्त्वज्ञो ज्ञानदो भवेत् ॥ १० ॥ पुरुषेश्वरयोरत्र न वैलक्षण्यमण्वपि ॥ तदन्यकल्पनापार्था ज्ञानं च प्रकृतेर्गुणः ॥११॥ प्रकृतेर्गुणसाम्यं वै प्रकृतेर्नात्मनो गुणाः ॥ सत्त्वं रजस्तम इति स्थित्युत्पत्त्यन्तहेतवः ॥१२॥ सत्त्वं ज्ञानं रजः कर्म तमोऽज्ञानमिहोच्यते ॥ गुणव्यतिकरः कालः स्वभावः सूत्रमेव च ॥ १३ ॥ पुरुषः प्रकृतिर्व्यक्तमहङ्कारो नभोऽनिलः ॥ ज्योतिरापः क्षितिरिति तत्त्वान्युक्तानि मे नव ॥ १४ ॥ श्रोत्रं त्वग्दर्शनं घ्राणो जिह्वेति ज्ञानशक्तयः ॥ वाक्पाण्युपस्थपाय्वङ्घ्रिकर्माण्यङ्गोभयं मनः ॥ १५ ॥ शब्दः स्पर्शो रसो गन्धो रूपं चेत्यर्थजातयः ॥ गत्युक्त्युत्सर्गशिल्पानि कर्मायतनसिद्धयः ॥ १६ ॥ सर्गादौ प्रकृतिर्ह्यस्य कार्यकारणरूपिणी ॥ सत्त्वादिभिर्गुणैर्धत्ते पुरुषोऽव्यक्त ईक्षते ॥ १७ ॥ व्यक्तादयो विकुर्वाणा धातवः पुरुषेक्षया ॥ लब्धवीर्याः सृज-

सर्वथा व्यर्थ छ । ज्ञान प्रकृतिका सत्वगुणलाई नै मानिएको छ । तीनै गुणको साम्यावस्था नै प्रकृति हो । अतः संसारको स्थिति, सृष्टि र नाशको हेतु भूत सत्व, रज र तम—तीनै गुण प्रकृतिका नै मानिएका छन्—आत्माको होइन । यसरी सत्वगुण ज्ञान, रजोगुण कर्म र तमोगुण अज्ञान कहिन्छ । यी तीन गुणका विषमताको हेतु काल हो र इनको स्वभावले महत्त्व मानिन्छ ॥ १०-१३ ॥ मैले पुरुष, प्रकृति, महत्तत्त्व, अहङ्कार, आकाश, वायु, तेज, जल र पृथ्वी—यी नौ तत्त्व भनेका छन् । श्रोत्र, त्वचा, चक्षु घ्राण र रसना—यी पाँच ज्ञानेन्द्रिय हुन् तथा वाक्, पाणि, पाद, पायु र उपस्थ—यी पाँच कर्मेन्द्रिय हुन् । हे प्रिय ! यिनमा मन उभयेन्द्रिय कहिन्छ ॥१४॥१५। शब्द, स्पर्श, रूप, रस र गन्ध—यी ज्ञानेन्द्रियका विषय हुन् । हिंड्नु, बोल्नु, मूत्रत्याग, मलत्याग र शिल्प—यी पाँच कर्मेन्द्रियका विषय हुन् । सृष्टिको आरम्भमा जगत्को कार्य कारणात्मिका प्रकृति नै सत्वादि गुणद्वारा यी अवस्थालाई धारण गर्दछ, अव्यक्त पुरुष केवल उनको साक्षीमात्र रहन्छ ॥१६-१७॥ पुरुषको साक्षित्वले बल प्राप्त गरेर महत्तत्त्वादि कारणतत्त्व परस्पर मिलेर विकारमा प्राप्त

हुन्छन् । प्रकृतिको बलमा ब्रह्माण्डको रचना गर्दछन् ॥ १८ ॥ यसरी सात तत्त्व मान्नेहरूको विचारले पाँच आकाशादि पञ्चभूत, एक ज्ञान अर्थात् जीव र एक यी दुवैको अधिष्ठान परमात्मा हुन् । देह, इन्द्रिय, प्राणादि पञ्चभूतले नै जायमान भएका हुन् ॥ १९ ॥ छ तत्त्व मान्नेहरूको मतले पाँच भूत र छैटौं जीवले अभिन्न परमात्मा छ । त्यही आफूले उत्पन्न गरिएका सबै भूतको रचना गरेर तिनमा स्वयं जीवरूपले स्थित छ ॥२०॥ केही व्यक्ति चार तत्त्व मात्र मान्दछन्, तिनको कथनानुसार तेज, जल तथा अन्न यी आत्माबाट उत्पन्न भएका हुन् र उनैबाट अरु समस्त कार्यरूप पदार्थ पनि जायमान भए ॥ २१ ॥ यदि सत्र तत्त्वको संख्या मानौं भने पञ्चभूत, पञ्च कर्मेन्द्रिय, पञ्च कर्मेन्द्रिय, मन र आत्मा–यसरी जम्मा सत्र तत्त्व छन् ॥२२॥ यस्तै सोह्र तत्त्व गनामा आत्मालाई नै मन मानेर तेह्र गन्दा पञ्चभूत, पञ्च ज्ञानेन्द्रिय, पञ्च कर्मेन्द्रिय, मन जीवात्मा तथा परमात्मा–यी तेह्र भए ॥२३॥ एघारको संख्या मान्नमा आत्मा, पञ्चभूत, र पञ्च ज्ञानेन्द्रिय मानिन्छन् । यदि नौको संख्या माने आठ प्रकृति अर्थात् पञ्चभूत, मन, बुद्धि,

न्त्यण्डं संहताः प्रकृतेर्बलात् ॥ १८ ॥ सप्तैव धातव इति तत्रार्थाः पञ्च खादयः ॥ ज्ञानमात्मोभयाधारस्ततो देहेन्द्रियासवः ॥ १९ ॥ षडित्यत्रापि भूतानि पञ्च षष्ठ परः पुमान् ॥ तैर्युक्त आत्मसम्भूतैः सृष्ट्वेदं समुपाविशत ॥ २० ॥ चत्वार्येवेति तत्रापि तेज आपोऽन्नमात्मनः ॥ जातानि तैरिदं जातं जन्मावयविनः खलु ॥ २१ ॥ संख्याने सप्तदशके भूतमात्रेन्द्रियाणि च ॥ पञ्च पञ्चैकमनसा आत्मा सप्तदशः स्मृतः ॥ २२ ॥ तद्वत्षोडश-संख्याने आत्मैव मन उच्यते ॥ भूतेन्द्रियाणि पञ्चैव मन आत्मा त्रयोदश ॥ २३ ॥ एकादशत्व आत्मासौ महाभूतेन्द्रियाणि च ॥ अष्टौ प्रकृतयश्चैव पुरुषश्च नवेत्यथ ॥ २४ ॥ इति नानाप्रसंख्यानं तत्त्वानामृषिभिः कृतम् ॥ सर्वं न्याय्यं युक्तिमत्वाद्विदुषां किमशोभनम् ॥ २५ ॥ उद्धव उवाच ॥ प्रकृतिः पुरुषश्चोभौ यद्यप्यात्मविलक्षणौ । अन्योन्यापाश्रयात्कृष्ण दृश्यते न भिदा तयोः ॥ २६ ॥ प्रकृतौ लक्ष्यते ह्यात्मा प्रकृतिश्च तथात्मनि ॥ एवं मे पुण्डरीकाक्ष महान्तं संशयं हृदि ॥ छेत्तुमर्हसि सर्वज्ञ वचोभिर्नयनैपुणैः ॥ २७ ॥ त्वत्तो ज्ञानं हि जीवानां प्रमोषस्तेऽत्र शक्तितः ॥ त्वमेव ह्यात्ममायाया गतिं वेत्थ न चापरः ॥ २८ ॥ श्रीभगवानुवाच ॥ प्रकृतिः पुरुषश्चेति विकल्पः पुरुषर्षभ ॥ एष वैकारिकः सर्गो गुणव्यतिकरात्मकः ॥ २९ ॥ ममाङ्ग माया गुणमय्यनेकधा विकल्पबुद्धीश्च गुणैर्विधत्ते ॥ वैकारिकस्त्रिविधोऽध्यात्ममेकमथाधिदैवमधिभूतमन्यत् ॥ ३० ॥ दृग्रू-

अहङ्कार र पुरुष-यसरी नौ भए ॥ २४ ॥ यसरी ऋषिहरूले विविध तत्त्वको गणना गरेका छन् । युक्तिसंगत हुनाले ती सबै न्याय्य हुन् र यस्तो मानिलिनमा विद्वानहरूको निमित्त के हानि छ ? ॥ २५ ॥ उद्धवले भने–हे कृष्ण ! यद्यपि स्वरूपतः प्रकृति र पुरुष भिन्न छन्, तापनि यी दुवै अर्कोको आश्रित हुनाले तिनमा भेद थाहा हुँदैन ॥ २६ ॥ कमलनयन ! प्रकृतिमा पुरुष र पुरुषमा प्रकृति दुवै अभिन्न झैं देखिन्छन्, यो ठूलो कुतूहल छ । हे सर्वज्ञ ! हजुर आफ्नू न्यायसंगत र प्रवीण वचनले मेरो संशय-नष्ट गर्नुहोस् ॥ २७ ॥ हे प्रभो ! हजुरकै कृपाले जीवलाई ज्ञान हुन्छ र हजुरको मायाशक्तिले त्यस ज्ञानको अवनति हुन्छ । आफ्नू अद्भुत मायाको विचित्र गतिको बललाई हजुर नै जान्नुहुन्छ । हजुर बाहेक अरु कोही त्यसलाई जान्दैन ॥ २८ ॥ भगवान् भन्नुहुन्छ–हे पुरुषर्षभ ! प्रकृति र पुरुषमा ठूलो भेद छ । यो सारा प्राकृत प्रपञ्च विकार सहित छ । किनकि

गुणहरूका क्षोभले नै यो उत्पन्न भएको छ ॥ २९ ॥ हे प्रिय ! मेरी त्रिगुणात्मिका माया नै आफ्नू गुणद्वारा विविध भेदबुद्धि उत्पन्न गर्दछे । त्यो सविकार भेदबुद्धि अध्यात्म, अधिदैव र अधिभूतरूपले तीन थरिका मानिन्छन् ॥ ३० ॥ जस्तै चक्षु-इन्द्रिय, रूप र नेत्र-गोलकगत सूर्यको अंश—यी तीनै परस्पर एक अर्काको आश्रयले सिद्ध हुन्छन्, तर आकाशमा विद्यमान सूर्यनारायण स्वतः सिद्ध छन् । त्यस्तै यी भूतादि विकारबाट पृथक् रहने आत्मा इनको आदिकारण हुन्छ, त्यो आफ्नू स्वतः सिद्ध प्रकाशले यी प्रकाशको पनि प्रकाशक छन् । त्वगादि, श्रवणादि, चक्षुरादि, जिह्वादि, नासिकादि तथा चित्तादि पनि अध्यात्मादिको भेदले तीन-तीन थरिका हुन्छन् ॥३१॥ गुण-क्षोभवश प्रकृतिमूलक महत्तत्त्वले

विस्मार्कं वपुरत्र रन्ध्रे परस्परं सिद्ध्यति यः स्वतः खे ॥ आत्मा यदेषामपरो य आद्यः स्वयाऽनुभूत्याखिलसिद्धिसिद्धिः ॥ एवं त्वगादि श्रवणादि चक्षुर्जिह्वादि नासादि च चित्तयुक्तम् ॥ ३१ ॥ योऽसौ गुणक्षोभकृतो विकारः प्रधानमूलान्महतः प्रसूतः ॥ अहं त्रिवृन्मोहविकल्पहेतुर्वैकारिकस्तामस ऐन्द्रियश्च ॥ ३२ ॥ आत्मा परिज्ञानमयो विवादो ह्यस्तीति नास्तीति भिदार्थनिष्ठः ॥ व्यर्थोऽपि नैवोपरमेत पुंसां मत्तः परावृत्तधियां स्वलोकात् ॥ ३३ ॥ उद्धव उवाच ॥ त्वत्तः परावृत्तधियः स्वकृतैः कर्मभिः प्रभो ॥ उच्चावचान्यथा देहान्गृह्णन्ति विसृजन्ति च ॥ ३४ ॥ तन्ममाख्याहि गोविंद

उत्पन्न यो अहङ्काररूप विकार पनि वैकारिक अर्थात् सात्त्विक, राजस, तामस, ऐन्द्रियिक योगभेदले तीन थरिको हुन्छ । अहङ्कारनै मोह, विकल्परूप भेद-भावको मुख्यकारण छ॥३२॥ आत्मज्ञानस्वरूप छ र अस्ति नास्तिरूपले विद्यमान यो विवाद भेद-दृष्टिले गर्दा वर्तमान छ । यो यद्यपि व्यर्थ छ, तापनि जबसम्म पुरुष आफ्नू स्वरूपभूत मलाई जानि लिंदैन तबसम्म यो निवृत्त हुन सक्तैन ॥ ३३ ॥ उद्धव भन्दछन्—हे प्रभो ! जो जब हजुरदेखि विमुख रहन्छन्, ती आफ्ना कर्मद्वारा उच्च वा नीच जस्तो योनिहरू ग्रहण तथा त्याग गर्दछन्, त्यो सबै हजुर मलाई आज्ञा हवस् । हे गोविन्द ! *आत्मज्ञानले हीन पुरुषहरूका लागि यसको चिन्तन गर्नु पनि अतिशय कठिन छ र यस लोकमा आत्मतत्त्वका ज्ञाता प्रायः

---

* दृष्टान्त ( पढे-गुनेका मूर्ख )—चौटा वैद्य, चौटा ज्योतिषि, एक नैयायिक र एक वैयाकरणी—यी चारै जना धन कमाउन विदेश हिंडे । चारै जना आफ्नाआफ्नु विषयका विद्वान् भए पनि बुद्धिले कोरा थिए । आखिर घुमेपछि ती कुनै राजाको राजधानी नजीक आइपुगे । सबैले निश्चय गरे—'राम्रो मुहूर्तमा नगर-प्रवेश गर्नुपर्दछ जसले गर्दा धन प्राप्त हुन सकोस् ।' मुहूर्त सोध्नका लागि उनीहरू ज्योतिषी तिर लागे । ज्योतिषीले पात्रो लिएर औंलामा मेष-मीन र नक्षत्रको गणना गरेर भने—'आज बाह्र बजे राती सर्वार्थसिद्धि योग छ । त्यसै बेला नगर-प्रवेश गर्नुपर्दछ अनि कार्य सिद्ध हुन्छ ।' अब यो सल्लाह भयो—१२ बजे जाने हो भने केही भोजनको प्रबन्ध गर्नु उचित होला । अतः सबैको सल्लाहले वैद्यजीलाई खाने-पिने सामग्री किन्न पठाउनु पर्दछ, किनकि इनलाई सबै वस्तुहरूका गुण-दोष ज्ञान छ । अतः ती भोजनको सामग्री किन्न हिंडे । उनको विचार गर्नुभयो—अमुक वस्तु वातकारक छ, अमुक वातवर्धक छ र अमुक वस्तु पित्तकारक हुन्छ । फेरि सम्झे —'सर्वरोगहरा निम्बः'—नीम सबै रोग नष्ट गर्ने वस्तु हो । यति विचार गरेर लद्द बानरको डक र नामको बुझ्मा चढे र कहीं पात ल्याउँने र नैयायिकसित भने—'म यसै पात पठाउँछु, तिमी गएर दाह्र घिउ लिएर आऊ ।' नैयायिकले दोकानमा गएर घिउ किने र लिएर हिंडे । अकस्मात् मनमा विचार आयो—'घृताधारे पात्रं वा पात्राधारे घृतम्'—घिउ भाँडोको आधारमा छ कि पात्रको आधार घिउ छ । फेरि विचार गरे—प्रत्यक्षस्य किं प्रमाणम् ?'—जुन वस्तु प्रत्यक्ष छ त्यसको निम्ति प्रमाणको के खाँचो ? तुरुन्त अनुभव गर्दछु—यति विचारेर उनले घिउको पात्र पोख्याइदिए । सबै घिउ माटोमा मिसियो । अनि तो रित्तो भाँडो र हात हल्लाउँदै पण्डितजीनेर आए । वैद्यले सोधे—'महाशयजी ! घिउ ?' उनले रित्तो पात्र देखाएर सबै कुरा सुनाए । अनि नीमको पातको टुक्रा टुक्रा पीसेर टाँकेर डेरामा पुगे । नीमको पातको पाँचो भैंसा पकाइदिए र बुढा पुगेर आसनमा बसे । अब खाने कुरा पकाउने काम वैयाकरणीलाई सुम्पियो । उनले तह कुन्हालेकहाँबाट माटोको टुक्रा-बडा लिए-

1345

छँदैछैनन्, सबै जना हजुरकी मोहिनी मायाले ठगिएका छन् ।।३४।।३५।। भगवान् मन्नुहुन्छ–हे उद्धव ! सबै मनुष्यका कर्ममय मन पाँच ज्ञानेन्द्रिययुक्त रहन्छ । त्यही कर्ममय मन एक लोकबाट अर्को लोकमा जान्छ र उसित पृथक् भएर पनि अहङ्कार बद्ध हुनाले आत्मा उसको अनुसरण गर्दछ ॥ ३६ ॥ कर्माधीन मन देखेको तथा कर्म-शास्त्रादि द्वारा सुनेका विषयको ध्यान गर्दै उनैको निम्ति सदा उत्सुक रहन्छ, त्यो तिनैमा लीन रहन्छ र उसको पूर्वस्मृति रहिरहन्छ ॥ ३७ ॥ कर्मानुसार प्राप्त देवादि-देहरूप विषयमा अत्यन्त दृढ आस्था भइदिनाले जीवलाई पूर्वदेहको कलिकति पनि सम्झना रहन्न । कुनै कारणवश देहको अत्यन्त विस्मृति नै उसको मृत्यु कहिन्छ ॥ ३८ ॥ हे उदार उद्धव ! प्राप्त देहादि विषयलाई अहंभाव द्वारा स्वीकार्नु नै जीवको जन्म हो । वास्तवमा जीवको जन्म मरण हुँदैन । जन्म-मरणादि स्वप्न र मनोरथ समान कल्पित हुन्छन् ॥ ३९ ॥ अनि स्वप्न र

दुर्विभाव्यमनात्मभिः ॥ न ह्येतत्प्रायशो लोके विद्वांसः सन्ति वंचिताः ॥ ३५ ॥ श्रीभगवानुवाच ॥ मनः कर्ममयं नृणामिन्द्रियैः पञ्चभिर्युतम् ॥ लोकाल्लोकं प्रयात्यन्य आत्मा तदनुवर्तते ॥ ३६ ॥ ध्यायन्मनोऽनुविषयान्दृष्टान्वानुश्रुतानथ ॥ उद्यत्सीदत्कर्मतन्त्रं स्मृतिस्तदनु शाम्यति ॥ ३७ ॥ विषयाभिनिवेशेन नात्मानं यत्स्मरेत्पुनः ॥ जन्तो वैं कस्यचिद्धेतोर्मृत्युरत्यन्तविस्मृतिः ॥ ३८ ॥ जन्म त्वात्मतया पुंसः सर्वभावेन भूरिदः ॥ विषयस्वीकृतिं प्राहुर्यथा स्वप्नमनोरथः ॥ ३९ ॥ स्वप्नं मनोरथं चेत्थं प्राक्तनं न स्मरत्यसौ ॥ तत्र पूर्वमिवात्मानमपूर्वं चानुपश्यति ॥ ४० ॥ इन्द्रियायनसृष्ट्येदं त्रैविध्यं भाति वस्तुनि ॥ बहिरन्तर्भिदाहेतुर्जनोऽसज्जनकृद्यथा ॥ ४१ ॥ नित्यदा ह्यङ्ग भूतानि भवन्ति न भवन्ति च ॥ कालेनालक्ष्यवेगेन सूक्ष्मत्वात्तन्न दृश्यते ॥ ४२ ॥ यथाऽर्चिषां स्रोतसां च फलानां वा वनस्पतेः ॥ तथैव सर्वभूतानां वयोऽवस्थादयः कृताः ॥ ४३ ॥

मनोरथ पनि यस्ता हुन्छन् कि तिनमा मनुष्य आफ्नु पूर्वस्वरूप बिर्सिन्छ र पूर्वसिद्ध भएर पनि आफूलाई अपूर्व मान्न थाल्दछ ॥ ४० ॥ जस्तै स्वप्नादिअवस्थामा जीव असत् पदार्थका बाह्य-आभ्यन्तरका मिथ्या भेदको रचना गर्दछ, त्यस्तै इन्द्रियका आश्रयरूप मनको रचनाले नै आत्मामा उत्तम, मध्यम तथा अधम वा आधिभौतिक, आध्यात्मिक र आधिदैविक यी तीन थरिका भेद नभए पनि सत्य झैं लाग्दछन् र आत्मा बाह्य तथा आभ्यन्तरका भेदको हेतु बन्दछ ॥ ४१ ॥ हे मित्र ! सबै प्राणीहरूको जन्म-मरण त छिन-छिनमैं हुँदै रहन्छ, तर अत्यन्त सूक्ष्म हुनाले ती ज्ञात हुँदैनन् ॥ ४२ ॥ अनि ज्योतिको, फल र वृक्षादिको अवस्था निरन्तर सार्दिंदै रहन्छ र त्यो वर्षैले जान्न सकिँदैन । त्यस्तै नै

---

पानी हालेर चुल्हामा बसाले, पात कानी पत्ताली गरेर त्यसैमा हालिदिए । एकै छिनमा पात–'बुद बुद' गरेर पाक्न थाल्यो । वैयाकरणले हच्काए भने–'अशुद्धं मा वक्तव्यम्, अशुद्धं मा वक्तव्यम्' तर मनुष्य भए यो मान्दछ । नीमको पात कसरी सुनोस् । दुइ मिनटमा ती झन बेसरी 'बुद-बुद' गर्नलागे । वैयाकरणीले फेरि भने–'अशुद्धंममा वक्तव्यम् ।' तर को सुनोस् । वैयाकरणीले सहन सकेनन् । गाग्री उचाले र बेसरी पच्छारिदिए । गाग्री धूलो पीठो भयो । अनि चारै जना भोकै पेट रहे । राति बन्द यत्नास म सबै उठे । अब राज दरबारमा जाने मुहूर्त भयो । अनि राजदरबारको मुख्य द्वारमा जाँदा फाटक बन्द भेटे, त मुहूर्त कसरी टार्ने ! ढोका बाँदर भित्र बात खोल्दा पाले आएर चारै जनालाई समात्यो । हातमा हतकडी र खुट्टामा नेलगाई ती अर्को दिन न्यायालयमा उपस्थित गरिए । हाकिमले चारै जनालाई कारागारको सजाय सुनाए ।

1346

कालवश समस्त प्राणीको आयु र अवस्था नित्य मासिँदै रहन्छन्। तर ती सूक्ष्म हुनाले देख्न सकिन्नन् ॥ ४३ ॥ जस्तै नाइस्यले व्यक्ति दीपशिखालाई 'यो उही दीपक हो' र नदी प्रवाहलाई 'यो उही जल हो' यस्तो ठान्दछन्, त्यस्तै नै आयुष्य व्यर्थ खेर फाल्ने मनुष्यले 'यो उही व्यक्ति हो'—यस्तो भन्नु र ठान्नु पनि भूल हो ॥ ४४ ॥ यस्तो अज्ञानी जन आफ्नू कर्मरूप हेतुले न जन्मन्छ, न मर्दछ, किनकि त्यो अमर छ। वस्तुतः काठको संयोगले प्रकट तथा शान्त अग्नि झैं केवल भ्रमले नै अज्ञानीलाई जन्म-मरण ज्ञात हुँदै रहन्छ ॥४५ ॥ गर्भ-प्रवेश, गर्भ-वृद्धि, जन्म, बाल्य, कौमार, यौवन, प्रौढावस्था, जरा र मृत्यु—यी नौ अवस्था शरीरका हुन्छन् ॥ ४६ ॥ आफूभन्दा भिन्न देहको मनोरथमयी उच्च तथा नीच अवस्थालाई ऊ आफ्नू अज्ञानवश गुणका संगले आफ्नू मान्दछ र कहीं-कहीं कहिले कोही इनलाई त्यागी पनि दिन्छन ॥ ४७ ॥ पितालाई पुत्रको जन्म र पुत्रलाई पिताको मृत्युले आफाफ्नू जन्म-मरणको अनुमान गर्नुपर्दछ, तर जन्म-मरणरूपी धर्मको ज्ञाता यी दुवैं धर्मबाट मुक्त हुँदैनन् ॥ ४८ ॥ वृक्ष लगाउने र काट्नेले गुन त्यसको उत्पत्ति र नाशको

सोऽयं दीपोऽर्चिषां यद्वत्स्रोतसां तदिदं जलम् ॥ सोऽयं पुमानिति नृणां मृषा गीर्धीर्मृषायुषाम् ॥ ४४ ॥ मा स्वस्य कर्मबीजेन जायते सोऽप्ययं पुमान् ॥ म्रियते वाऽमरो भ्रान्त्या यथाऽग्निर्दारुसंयुतः ॥ ४५ ॥ निषेकगर्भजन्मानि बाल्यकौमारयौवनम् ॥ वयोमध्यं जरा मृत्युरित्यवस्थास्तनोर्नव ॥ ४६ ॥ एता मनोरथमयीर्ह्यन्यस्योच्चावचास्तनूः ॥ गुणसङ्गादुपादत्ते क्वचित्कश्चिज्जहाति च ॥ ४७ ॥ आत्मनः पितृपुत्राभ्यामनुमेयौ भवाप्ययौ ॥ न भवाप्ययवस्तूनामभिज्ञो द्वयलक्षणः ॥ ४८ ॥ तरोर्बीजविपाकाभ्यां यो विद्वाञ्जन्मसंयमौ ॥ तरोर्विलक्षणो द्रष्टा एवं द्रष्टा तनोः पृथक् ॥ ४९ ॥ प्रकृतेरेवमात्मानमविविच्याबुधः पुमान् ॥ तत्त्वेन स्पर्शसम्मूढः संसारं प्रतिपद्यते ॥५०॥ सत्त्वसङ्गादृषीन्देवान्रजसाऽसुरमानुषान् ॥ तमसा भूततिर्यक्त्वं भ्रामितो याति कर्मभिः ॥५१॥ नृत्यतो गायतः पश्यन्यथैवानुकरोति तान् ॥ एवं बुद्धिगुणान्पश्यन्ननीहोऽप्यनुकार्यते ॥५२॥ यथाऽम्भसा प्रचलता तरवोऽपि चला इव ॥ चक्षुषा भ्राम्यमाणेन दृश्यते भ्रमतीव भूः ॥ ५३ ॥ तथा मनोरथधियो विषयानुभवो मृषा ॥ स्वप्नदृष्टाश्च दाशार्ह तथा संसार आत्मनः ॥ ५४ ॥ अर्थे ह्यविद्यमानेऽपि संसृतिर्न निवर्तते ॥ ध्यायतो विषयानस्य स्वप्नेऽनर्थागमो यथा ॥ ५५ ॥ तस्मादुद्धव मा भुंक्ष्व

ज्ञाता छ, त्यो साक्षी पुरुष वृक्षदेखि पृथक् हुन्छ, त्यस्तै नै यस देहको साक्षी आत्मा पनि यस शरीरदेखि सर्वथा भिन्न छ ॥ ४९ ॥ यस्ता विवेकहीन अज्ञानी पुरुष आत्मालाई प्रकृतिदेखि पृथक् र उसको वास्तविक स्वरूप जान्न सक्तैन। त्यो विषयले मोहित भएर जन्म-मरणरूपी संसारमा अल्झिरहन्छ ॥ ५० ॥ अनि आफ्नू कर्मानुसार आवागमनको चक्रमा अलमलिँदै अविवेकी जीव सात्त्विक कर्मका संयोगले देव तथा ऋषियोनिमा र राजस कर्मले असुर तथा मनुष्य-योनिमा जान्छ र तामस कर्मले भूत-प्रेतादि तिर्यक् योनिहरूमा पनि जन्म लिँदै रहन्छ ॥५१॥ जस्तै नाच-गानमा लागेका व्यक्तिलाई देखेर मनुष्य स्वयं पनि नाच्न-गाउन थाल्दछ,त्यस्तै नै बुद्धिको गुणलाई देखेर आत्मा निश्चेष्ट भएर पनि तिनको अनुकरण गर्न विवश हुन्छ ॥ ५२ ॥ जस्तै बग्ने जलमा प्रतिबिम्बित वृक्ष पनि बगिरहे झैं देखिन्छ, वेगले घुमाइएका नेत्र द्वारा पृथिवी घुमिरहेको देखिन्छिन् ॥५३॥ जस्तै मनोरथद्वारा कल्पित तथा सपनामा देखेका विषयको अनुभव मिथ्या प्रतीत हुन्छ, हे दाशार्ह ! त्यस्तै गरी आत्माको विषयानुभवस्वरूप संसार पनि मिथ्या नै हो ॥ ५४ ॥ वास्तवमा पदार्थहरू नरहे

पनि विषयको सधैं चिन्तन गरिरहनाले संसारको निवृत्ति त्यसै गरी हुन सक्तैन, जसरी सपनामा विपत्ति देखिन्छ ॥ ५५ ॥ हे उद्धव ! सबै इन्द्रियले विषयलाई न भोग । सम्पूर्ण संसार-भ्रमलाई आत्मास्वरूपको अज्ञानले भासमान जान ॥ ५६ ॥ यदि दुष्टजन अनेक तिरस्कार, अपमान गरून् निन्दा गरेर हाँसुन, आजीविका खोसुन, थुकुन्, मल-मूत्र फालिदेउन, यस्तरी अज्ञानीले अनेक प्रकारले विचलित पारे पनि आफ्नो आत्यन्तिक श्रेयको इच्छुक व्यक्ति यी सबै कष्ट आइपरे पनि स्वयं आफ्नू उद्धार गरोस्, यी कष्टले विचलित नहोओस् ॥५७-५८॥ उद्धव भन्दछन्—हे वक्ताहरूमा श्रेष्ठ ! दुष्टले गरेका अपमानादिमा विचलित नहुनु त मलाई कठिन लागिरहेको छ । यो कुरा मैले राम्ररी बुझ्न सक्ने गरी आज्ञा हवस् ॥५९॥ हे विश्वात्मन् ! हजुरले बनाएका धर्ममा निरत रहने व्यक्तिहरू हजुरका चरणको आश्रित भएर शान्तचित्त भइसकेका छन्, तीं बाहेक अन्य विवेकीका लागि पनि म यो कठिन मान्दछु, किनकि मानव प्रकृति निकै बलवती हुन्छे ॥ ६० ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषा-टीकायां द्वाविंशोऽध्यायः ॥ २२ ॥

विषयानसदिन्द्रियैः ॥ आत्माग्रहणनिर्भातं पश्य वैकल्पिकं भ्रमम् ॥ ५६ ॥ क्षिप्तोऽवमानितोऽसद्भिः प्रलब्धोऽसूयितोऽथवा ॥ ताडितः सन्निबद्धो वा वृत्त्या वा परिहापितः ॥५७॥ निष्ठितो मूत्रितो वाऽज्ञैर्बहुधैवं प्रकम्पितः ॥ श्रेयस्कामः कृच्छ्रगत आत्मनात्मानमुद्धरेत् ॥ ५८ ॥ उद्धव उवाच ॥ यथैवमनुबुध्येयं वद नो वदतां वर ॥ सुदुःसहमिमं मन्य आत्मन्यसदतिक्रमम् ॥ ५९ ॥ विदुषामपि विश्वात्मन्प्रकृतिर्हि बलीयसी ॥ ऋते त्वद्धर्मनिरताञ्छान्तांस्ते चरणालयान् ॥ ६० ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे द्वाविंशोऽध्यायः ॥२२॥

बादरायणिरुवाच ॥ एवमाशंसित उद्धवेन भागवतमुख्येन दाशार्हमुख्यः ॥ सभाजयन्भृत्यवचो मुकुन्दस्तमाबभाषे श्रवणीयवीर्यः ॥ १ ॥ श्रीभगवानुवाच ॥ बार्हस्पत्य स वै नात्र साधुर्वै दुर्जनेरितैः ॥ दुरुक्तैर्भिन्नमात्मानं यः समाधातुमीश्वरः ॥२॥ न तथा तप्यते विद्धः पुमान्बाणैः सुमर्मगैः ॥ यथा तुदन्ति मर्मस्था ह्यसतां पुरुषेषवः ॥३॥ कथयन्ति महत्पुण्यमितिहासमिहोद्धव ॥ तमहं वर्णयिष्यामि निबोध सुसमाहितः ॥४॥ केनचिद्भिक्षुणा गीतं परिभूतेन दुर्जनैः ॥ स्मरता धृतियुक्तेन विपाकं निजकर्मणाम् ॥५॥ अवन्तिषु द्विजः कश्चिदासीदाढ्यतमः श्रिया ॥ वार्तावृत्तिःकदर्यस्तु कामी

( यौटा त्यागी ब्राह्मणको इतिहास ) शुकदेव भन्दछन्—हे राजन् ! उद्धवले प्रार्थना गरेपछि श्रवणीय पराक्रमी यदुश्रेष्ठ श्रीकृष्णचन्द्र आफ्ना सेवक उद्धवका प्रश्न को आदर गर्दै भन्नुभयो ॥ १ ॥ भगवान्ले भन्नुभयो—हे बृहस्पतिका शिष्य उद्धव ! संसारमा यस्ता साधु पुरुष धेरै पाइन्नन जो दुर्जनका वाक्यरूपी बाणले विद्ध भएर आफूमा धैर्य राख्छन् ॥२॥ कुनै मर्मवेधी बाणले घोचिएर पनि मनुष्य त्यति पीडित हुँदैन, जति दुष्टजनका मर्मस्पर्शी बाण झैं कठोर वचनले कष्ट दिन्छन् ॥ ३ ॥ हे उद्धव ! यस विषयमा यौटा पवित्र र प्राचीन इतिहास छ । त्यो म भन्दछु, सावधान मनले सुन—दुर्जन द्वारा दुःख दिंदा धैर्यपूर्वक आफ्ना कर्मको फल स्मरण गर्दै जे भनेका थिए, त्यसैको यसमा वर्णन छ ॥४॥५॥ उज्जयिनी नगरीमा यौटा ब्राह्मण बस्तथे । ती ठूला श्रीमान् र धनाढ्य थिए । ती कृषि-वाणिज्यादि व्यवसाय पनि गर्दथे । ती अत्यन्त कृपण, कामी, लोभी र ठूलो रिसाहा पनि थिए ।

॥६॥ तिनले कहिल्यै आफ्ना जात-भाइ र अतिथिहरूको वचनले पनि सत्कार गरेनन् र धर्म-कर्म रहित भएर घरमा बस्ता आफ्नू शरीरलाई पनि सुख दिन सकेनन् ॥ ७ ॥ ती कृपण ब्राह्मणका छोरा बन्धु, पुत्र, स्त्री, कन्या तथा नोकर चाकर पनि उचित दुःखी भएर द्रोह गर्दथे। ती कहिले उसको हित साधन गर्दैनथे ॥८॥ अतः यक्ष झैं धनको रक्षा गर्ने, दान र भोगले रहित, दुवै लोकबाट पतित ती ब्राह्मणमाथि पंचयज्ञका देवता रिसाए ॥९॥ हे अतिदानी उद्धव ! ती देवताको अपमान गर्नाले उसको पूर्वसंचित पुण्य क्षीण भयो, उसको अत्यन्त प्रयास र परिश्रमले संचित र केवल कष्ट मात्र दिने सारा धन पनि नष्ट भएर गयो ॥१०॥ ती पतित ब्राह्मणको केही धन कुटुम्बीहरूले खाइदिए, केही चोरले चोरेर लगिदिए केही दैव र कालले नष्ट भयो अनि केही राजा र अन्य मनुष्यहरूले पचाइदिए ॥ ११ ॥ यसरी धन नष्ट भएपछि धर्म एवं उपभोगले रहित र स्वजनबाट तिरस्कृत ती ब्राह्मणाई ठूलो चिन्ता भयो

लुब्धोऽतिकोपनः ॥ ६ ॥ ज्ञातयोऽतिथयस्तस्य वाङ्मात्रेणापि नार्चिताः ॥ शून्यावसथ आत्मापि काले कामैरनर्चितः ॥ ७ ॥ दुःशीलस्य कदर्यस्य द्रुह्यन्ते पुत्रबान्धवाः ॥ दारा दुहितरो भृत्या विषण्णा नाचरन्प्रियम् ॥ ८ ॥ तस्यैवं यक्षवित्तस्य च्युतस्योभयलोकतः ॥ कर्मकामविहीनस्य चुक्रुधुः पञ्चभागिनः ॥ ९ ॥ तदवध्यानविस्रस्तपुण्यस्कन्धस्य भूरिद ॥ अर्थोऽप्यगच्छन्निधनं बह्वायासपरिश्रमः ॥१०॥ ज्ञातयो जगृहुः किञ्चित्किञ्चिद्दस्यव उद्धव ॥ दैवतः कालतः किञ्चिद्ब्रह्मबन्धोर्नृपार्थिवात् ॥ ११ ॥ स एवं द्रविणे नष्टे धर्मकामविवर्जितः ॥ उपेक्षितश्च स्वजनैश्चिन्तामाप दुरत्ययाम् ॥१२॥ तस्यैवं ध्यायतो दीर्घं नष्टरायस्तपस्विनः ॥ खिद्यतो बाष्पकण्ठस्य निर्वेदःसुमहानभूत् ॥ १३ ॥ स चाहेदमहो कष्टं वृथात्मामेऽनुतापितः ॥ न धर्माय न कामाय यस्यार्थायास ईदृशः ॥१४ ॥ प्रायेणार्थाः कदर्याणां न सुखाय कदाचन ॥ इह चात्मोपतापाय मृतस्य नरकाय च ॥ १५ ॥ यशो यशस्विनां शुद्धं श्लाघ्या ये गुणिनां गुणाः ॥ लोभः स्वप्नोऽपि तान्हन्ति श्वित्रो रूपमिवेप्सितम् ॥ १६ ॥ अर्थस्य साधने सिद्ध उत्कर्षे रक्षणे व्यये ॥ नाशोपभोग आयासस्त्रासश्चिन्ता भ्रमो नृणाम् ॥ १७ ॥ स्तेयं हिंसाऽनृतं दम्भः कामः क्रोधः स्मयो मदः ॥ भेदो वैरमविश्वासः संस्पर्धा व्यसनानि च ॥ १८ ॥ एते पञ्चदशानर्था ह्यर्थमूला मता नृणाम् ॥ तस्मादनर्थमर्थाख्यं श्रेयोऽर्थी दूरतस्त्यजेत् ॥ १९ ॥ भिद्यन्ते भ्रातरो

॥१२॥ धन नाशले सन्तप्त तथा आँसुको ठूलो बाढीले गर्दा अवरुद्ध घाँटी भएको ब्राह्मणलाई बर्ता चिन्ता गर्नाले वैराग्य उत्पन्न भयो ॥१३॥ ऊ विचार्न लाग्यो–'अहो, ठूलो खेदको कुरा छ कि मैले व्यर्थ यतिका दिन आफ्नू देह जलाएँ। जुन धनको निम्ति मैले यति कष्ट सहेँ, त्यो न धर्ममा लाग्यो, न भोगमै खर्च भयो ॥१४॥ कृपण व्यक्तिका लागि धन केवल सुखको साधक हुँदैन। त्यो यस लोकमा तिनको चित्तलाई सन्तप्त गर्न र मरेपछि तिनको नरकगामी हुने कारण बन्दछ ॥१५॥ जस्तै—अलिकति पनि कोढ सुन्दर स्वरूपलाई बिगारिदिन्छ, त्यसरी नै अलिकति पनि लोभ र यशस्वी जनको यश र गुणवान्‌को प्रशंसनीय गुण बरबाद पारिदिन्छ ॥१६॥ धनको उपार्जनमा, उपार्जन गरेर त्यसको वृद्धि, रक्षा र व्यय गर्नमा तथा त्यसको नाश र उपभोगमा मनुष्यको अथक परिश्रम, भय, चिन्ता र भ्रमको डर मानिरहनु पर्दछ ॥१७॥ चोरी, हिंसा, झूठो, पाखण्ड, काम, क्रोध, गर्व, अहंकार, भेदबुद्धि

शत्रुता, अविश्वास, स्पर्द्धा, व्यसन—यी पन्ध्र अनर्थ मनुष्यलाई धनबाट नै प्राप्त हुन्छन् । अतः कल्याणका इच्छुक व्यक्ति यो अनर्थरूपी अर्थलाई सहर्ष त्यागिदेओस् ॥१८-१९॥ भाइ-बन्धु, माता पिता र सुहृद्गण जो स्नेह-बन्धनमा बाँधिएर यौटै रहन्छन्, ती सबै यौटा कौडीको निम्ति भिन्ना-भिन्नै लडेर तुरुन्त शत्रु बन्दछन् ॥२०॥ यी सबै सम्बन्धी अलिकति धनको लागि अत्यन्त रिस गरेर तत्काल यौटाले अर्कोलाई त्यागिदिन्छन् र डाहापूर्वक सारा स्नेह बिर्सेर एक अर्काको सर्वनाश गरिदिन्छन् ॥ २१ ॥ यो देव-दुर्लभ मनुष्य देह पाएर फेरि उसमा पनि उत्तम ब्राह्मण भएर जो यसको अनादर गरेर आफ्नो परम स्वार्थ र मोक्षलाई नाश गरिदिन्छन्, ती नीच गतिमा पुग्दछन् ॥२२॥ स्वर्ग तथा अपवर्गको द्वारस्वरूप मनुष्य देह पाएर कुन जान्ने व्यक्ति अनर्थको आश्रयरूप धनमा आसक्त होला ? ॥ २३ ॥ जो मनुष्य देव, ऋषि, पितृ, भूत, कुटुम्ब र त्यसको अन्य भाग पाउने हक भएकाहरूलाई आफ्नू धन बाँडेर सन्तुष्ट राख्दैन र न स्वयं त्यसलाई भोग्दछ, त्यो यक्ष झैं धनको रक्षक कृपण व्यक्ति अवश्य अधोगति पाउँदछ ॥ २४ ॥ म उन्मत्तको अवस्था बल र पुरुषार्थ

दाराः पितरः सुहृदस्तथा ॥ एकास्निग्धाः काकिणिना मद्यः सर्वेऽरतः कृताः ॥ २० ॥ अर्थेनाल्पोयसा ह्येते संरब्धा दीप्तमन्यवः ॥ त्यजन्त्याशु स्पृधो घ्नन्ति सहसोत्सृज्य सौहृदम् ॥२१॥ लब्ध्वा जन्मामरप्रार्थ्यं मानुष्यं तद्द्विजाग्र्यताम् ॥ तदनादृत्य ये स्वार्थं घ्नन्ति यान्त्यशुभां गतिम् ॥२२॥ स्वर्गापवर्गयोर्द्वारं प्राप्य लोकमिमं पुमान् ॥ द्रविणे योऽनुषज्जेत मर्त्योऽनर्थस्य धामनि ॥ २३ ॥ देवर्षिपितृभूतानि ज्ञातीन्बन्धूंश्च भागिनः ॥ असंविभज्य चात्मानं यक्षवित्तः पतत्यधः ॥ २४ ॥ व्यर्थयाऽर्थेहया वित्तं प्रमत्तस्य वयो बलम् ॥ कुशला ये न सिद्ध्यन्ति जरठः किंनु साधये ॥ २५ ॥ कस्मात्संक्लिश्यते विद्वान्व्यर्थयाऽर्थेहयाऽसकृत् ॥ कस्यचिन्मायया नूनं लोकोऽयं सुविमोहितः ॥ २६ ॥ किं धनैर्धनदैर्वा किं कामैर्वा कामदैरुत ॥ मृत्युना ग्रस्यमानस्य कर्मभिर्वोत जन्मदैः ॥ २७ ॥ नूनं मे भगवाँस्तुष्टः सर्वदेवमयो हरिः ॥ तेन नीतो दशामेतां निर्वेदश्चात्मनः प्लवः ॥ २८ ॥ सोऽहं कलावशेषेण शोषयिष्येऽङ्गमात्मनः ॥ अप्रमत्तोऽखिलस्वार्थे यदि स्यात्सिद्ध आत्मनि ॥ २९ ॥ तत्र मामनुमोदेरन्देवास्त्रिभुवनेश्वराः ॥ मुहूर्तेन ब्रह्मलोकं खट्वाङ्गः समसाधयत् ॥३०॥ श्रीभगवानुवाच ॥ इत्यभिप्रेत्य मनसा ह्यावन्त्यो द्विजसत्तमः ॥ उन्मुच्य हृदयग्रन्थीञ्छान्तो भिक्षुरभून्मुनिः

जसले विवेकीजन सिद्धि प्राप्त गर्दछन्, धन संचयको व्यर्थ चेष्टामा ती सबै नष्ट भए । अनि म वृद्ध भएँ, तब के साधन गरूँला ? ॥ २५ ॥ ज्ञानी पुरुष धनको व्यर्थ तृष्णाले निरन्तर किन सन्तप्त भइरहन्छन् ? निःसन्देह यो संसार कसैको मायाले मोहित छ ॥२६॥ यो मनुष्य देह कालको गालामा परिसकेको छ । यसको धनले धन दिने देवताहरूसित, कामनाले, कामनापूर्ण पार्नेहरूसित र बारम्बार जन्म-मरणको चक्रमा पार्ने काम्य कर्मसित के सम्बन्ध ? ॥ २७ ॥ अवश्य सर्वदेवमय भगवान् हरि ममाथि प्रसन्न छन् जसले म यस स्थितिमा पुगें र संसार-सागरबाट पारी तार्ने मलाई यो डुङ्गास्वरूप वैराग्य प्राप्त भएको छ ॥ २८ ॥ अब यदि आयु शेष रह्यो भने आफ्ना सबै धर्मसाधनहरूमा सावधान तथा चित्तले सन्तुष्ट रहेर म शेष समयमा कठोर तपस्याद्वारा आफ्नो यो देह सुखाइदिन्छु ॥२९॥ तीनै लोकका अधिपति भगवान् मेरो यस सङ्कल्पको अनुमोदन गरून् । राजा खट्वाङ्गले मुहूर्त मात्रमा ब्रह्मलोक पाएका थिए ॥३०॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! ती अवन्ति-देशवासी लोभी ब्राह्मण आफ्नू मनमा यस्तो निश्चय गरेर हृदयको अहंता-ममतारूपिणी

ग्रन्थिहरू फुकाएर शान्त र मौन भिक्षु संन्यासी भए ॥ ३१ ॥ मन, इन्द्रिय र प्राणको संयम गरेर ती सर्वदा अनासक्तभावले पृथिवी तलमा डुल्न लागे । ती केवल भिक्षाको निम्ति नै अलक्षित भावले कुनै नगर वा गाउँमा जान्थे ॥ ३२ ॥ हे भद्र ! ती वृद्ध अवधूत भिक्षुलाई देखेर अनेक दुष्ट तिनको अपमान गर्दै अनेक थरिका दुःख दिइरहन्थे ॥ ३३ ॥ कोई उनको लट्ठी खोसथे, कहीं पात्र तथा कमण्डलु लगिदिन्थे, कोही आसन, कोही रुद्राक्षमाला, कोही कन्था र कोही उनको लुगा लिएर भाग्दथे ॥३४॥ केही बेरपछि तिनलाई देखाएर दिन खोज्दथे, जब ती लिन्थे तब फेरि ती मुनिसित खोसिलिन्थे । भिक्षा मागेर जब गाउँको बाहिर कुनै नदी-तटमा खान बस्दथे तब ती पापीहरू तिनको टाउकोमा लघुशङ्का गरिदिन्थे वा थुकिदिन्थे । अतः ती ऊसित केही बोलाउने चेष्टा गर्दथे र त्यति गर्दा पनि जब ऊ बोल्दैनथ्यो तब उसलाई पिटिदिन्थे ॥ ३५ ॥ ३६ ॥ कोही-कोही 'यो चोर हो' भनेर उसलाई हप्काउँथे र कोही 'बाँध' भनेर उसलाई डोरीले बाँधिदिन्थे ॥ ३७ ॥ कोही निरादरपूर्वक कुवाक्य भनेर निन्दा पनि गर्दथे—हेर, अब दुष्ट फरतो

॥ ३१ ॥ स चचार महीमेतां संयतात्मेन्द्रियानिलः ॥ भिक्षार्थं नगरग्रामानसङ्गोऽलक्षितोऽविशत् ॥ ३२ ॥ तं वै प्रवयसं भिक्षुमवधूतमसज्जनाः ॥ दृष्ट्वा पर्यभवन्भद्र बह्वीभिः परिभूतिभिः ॥ ३३ ॥ केचित्त्रिवेणुं जगृहुरेके पात्रं कमण्डलुम् ॥ पीठं चैकेऽक्षसूत्रं च कन्थां चीराणि केचन ॥ ३४ ॥ प्रदाय च पुनस्तानि दर्शितान्याददुर्मुनेः ॥ अन्नं च भैक्ष्यसम्पन्नं भुञ्जानस्य सरित्तटे ॥ ३५ ॥ मूत्रयन्ति च पापिष्ठाः ष्ठीवन्त्यस्य च मूर्धनि ॥ यतवाचं वाचयन्ति ताडयन्ति न वक्ति चेत् ॥ ३६ ॥ तर्जयन्त्यपरे वाग्भिः स्तेयोऽयमिति वादिनः ॥ बध्नन्ति रज्ज्वा तं केचिद्बध्यतां बध्यतामिति ॥ ३७ ॥ क्षिपन्त्येकेऽवजानन्त एष धर्मध्वजः शठः ॥ क्षीणवित्त इमां वृत्तिमग्रहीत्स्वजनोज्झितः ॥ ३८ ॥ अहो एष महासारो धृतिमान्गिरिराडिव ॥ मौनेन साधयत्यर्थं बकवद्दृढनिश्चयः ॥ ३९ ॥ इत्येके विशसन्त्येनमेके दुर्वातयन्ति च ॥ तं बबन्धुर्निरुरुधुर्यथा क्रीडनकं द्विजम् ॥ ४० ॥ एवं स भौतिकं दुःखं दैहिकं दैविकं च यत् ॥ भोक्तव्यमात्मनो दिष्टं प्राप्तं प्राप्तमबुध्यत ॥४१॥ परिभूत इमां गाथामगायत नराधमैः ॥ पातयद्भिः स्वधर्मस्थो धृतिमास्थाय सात्त्विकीम् ॥ ४२ ॥ द्विज उवाच ॥ नायं जनो मे सुखदुःखहेतुर्न देवतात्मा ग्रहकर्मकालाः ॥ मनः परं कारणमामनन्ति संसारचक्रं परिवर्तयेद्यत् ॥ ४३ ॥ मनो गुणान्वै सृजते बलीयस्ततश्च कर्माणि विलक्षणानि ॥ शुक्लानि कृष्णान्यथ लोहितानि तेभ्यः सवर्णाः सृतयो भवन्ति

स्वाँग पारिरहेको छ । जब धन नष्ट भयो र परिवारले घरबाट [illegible] दिइ अब यसले यो वृत्ति धारण गरेको हो ॥ ३८ ॥ हेर त, पर्वतराज झैं यो कस्तो मोटो-घाटो र अटल धैर्यशाली छ । यो बकुल्लो जस्तै स्वाँग पारेर नबोलिकन आफ्नू काम बनाउँछ । यस्तो भनेर कोही ती ब्राह्मणको खिल्ली उडाउँथे, कोही उसमाथि अधोवायु छाडिदिन्थे र कोही सुगा-मैना आदि पालेका पक्षीहरू झैं उसलाई घरमा थुनिदिन्थे ॥३९॥ यसरी भौतिक, दैविक र दैहिक कष्ट तीमाथि जति-जति पर्दथे, ती सबैलाई आफ्नू अवश्यभोक्तव्य प्रारब्ध ठानेर भोगिरहन्थे ॥४०॥४१। ती धर्मबाट पतित भएका पापीहरूद्वारा पीडित भएपछि पनि आफ्नू धर्ममा सात्त्विक धैर्यपूर्वक स्थिर रहेर यो गान गर्ने गर्दथे ॥ ४२ ॥ ती ब्राह्मण भन्दथे—यी सबै स्वजन, देवता, आत्मा, ग्रह, कर्म र काल आदि कोही पनि मेरो सुख दुःखको कारण होइनन् । यसको एक मात्र कारण मन नै हो, जुन यस संसार-चक्रलाई निरन्तर

चलाइरहन्छ ॥ ४३ ॥ अति बलवान् मन सत्वादि गुणका वृत्तिहरू उत्पन्न गर्दछ र तिनकै सात्विक्, राजस र तामस कर्म हुन्छन् । ती कर्मको अनुकूल नै जीवलाई विविध गतिहरू प्राप्त हुन्छन् ॥४४॥ स्वतः चेष्टाशील मनसित उसको नितान्तरूपले वर्तमान भएर पनि यो आत्मा निरीह अर्थात् निष्क्रिय छ । यो हिरण्मय, विद्याशक्ति प्रधान एवं म जीवको सखा हो ! यो अलुप्त ज्ञानले केवल देख्दछ मात्र । यो आफ्नू द्योतक मन साथै लिएर विविध प्रकारका भोग भोग्दै गुण अर्थात् कर्मका रंगले बाँधिएको रहन्छ ॥ ४५ ॥ दान, स्वधर्म अर्थात् वर्णाश्रम-धर्म, नियम, यम, वेदाध्ययन, कर्म एवं शुभ व्रत यी सबैको अन्तिम फल केवल मनोनिग्रह छ र त्यही परमयोग मानिन्छ ॥ ४६ ॥ जसको मन शान्त तथा समाहित रहन्छ—मन, त्यसलाई दानादि कर्महरूको के आवश्यकता हुन्छ ? जसको मन असंयत हुनाले आलस्य तथा विषय-वासना आदिले नष्ट भइरहेको छ, त्यसलाई दानादि शुभ

॥ ४४ ॥ अहीन आत्मा मनसा समीहता हिरण्मयो मत्सख उद्विचष्टे ॥ मनः स्वलिंगं परिगृह्य कामाञ्जुषन्निबद्धो गुणसङ्गतोऽसौ ॥ ४५ ॥ दानं स्वधर्मो नियमो यमश्च श्रुतानि कर्माणि च सद्व्रतानि ॥ सर्वे मनोनिग्रहलक्षणान्ताः परो हि योगो मनसः समाधिः ॥ ४६ ॥ समाहितं यस्य मनः प्रशान्तं दानादिभिः किं वद तस्य कृत्यम् ॥ असंयतं यस्य मनो विनश्यद्दानादिभिश्चेदपरं किमेभिः ॥ ४७ ॥ मनोवशेऽन्ये ह्यभवन्स्म देवा मनश्च नान्यस्य वशं समेति ॥ भीष्मो हि देवः सहसः सहीयान् युञ्ज्याद्वशे तं स हि देवदेवः ॥ ४८ ॥ तं दुर्जयं शत्रुमसह्यवेगमरुन्तुदं तन्न विजित्य केचित् ॥ कुर्वन्त्यसद्विग्रहमत्र मर्त्यैर्मित्राण्युदासीनरिपून्विमूढाः ॥ ४९ ॥ देहं मनोमात्रमिमं गृहीत्वा ममाहमित्यन्धधियो मनुष्याः ॥ एषोऽहमन्योऽयमिति भ्रमेण दुरन्तपारे तमसि भ्रमन्ति ॥५०॥ जनस्तु हेतुः सुख-दुःखयोश्चेत्किमात्मनश्चात्र हि भौमयोस्तत् ॥ जिह्वां क्वचित्संदशति स्वदद्भि-

कर्महरूले के लाभ ? ॥ ४७ ॥ अन्य सबै देवता अर्थात् इन्द्रियहरू आफ्नू मनको नै वशमा पर्दछ, तर मन ती मध्ये कसैको पनि वशीभूत हुँदैन । यो मन बलियो भन्दा पनि बलियो र अति डरलाग्दो देवता हो । जो यसलाई आफ्नू वशमा पार्दछ, त्यही देवदेव अर्थात् इन्द्रियहरूलाई जित्ने हुन्छ ॥ ४८ ॥ यो दुर्जय, असह्य वेगवान् तथा मर्मभेदी शत्रुलाई नजितेर कैयौं व्यक्ति यस संसारमा अन्य मनुष्यसित व्यर्थ कलह गरेर तिनलाई आफ्नू शत्रु, मित्र र उदासीन ठान्याउने गर्दछन् ॥४९॥ यस मनोमय देहमा अन्धबुद्धि प्राणी ममता र अहङ्कारले 'यो म हुँ, यो अर्को हो' यस्तो भेदभ्रम गरेर अज्ञानान्धकारमा गाडिएर भौंतारिई रहन्छ॥५०॥ यदि कोही व्यक्ति सुख-दुःखको हेतु भए पनि त्योसित आत्माको के सम्बन्ध ?

---

दृष्टान्त ( व्यर्थ विवाद )—दुइ जना किसान कहीं गइरहेका थिए । दुवै परस्पर कुरा गर्दै आन्थे । दोस्राले भन्यो—'यो पर्व तिमी र म तालमा जग्गा लेला गर्दौं !' अर्कोले भन्यो—हुन्छ, ठीक छ तर हे भाइ ! म थोरा जग्गा लिनेछु चुसने छु !' अनि पहिलोले भन्यो—'म निश्च दुइटा जग्गा चुसने छु !' पहिलोले रिसाएर भन्यो—'म तिमीलाई त्यसो गर्न दिन्न !' अर्कोले भन्यो—'म आफ्नू भागबाट लिनेछु, अनि तिमीलाई के आपत्ति हुन सक्छ ?' दुवैमा झगडा हुन लाग्यो र कुट-मारको स्थिति आइपुग्यो । अन्तमा दुवैले अड्डामा नालीस दिए । हाकिमले भन्यो—'सरकारी खेतमा तिमी दुवैले जग्गा गोपेर खूब चुस्यौ, अतः अब पचास-पचास रुपियाँ मालपोत दाखिल गर । दुवैले जरिवाना तिर्नुपर्यो ।' मूर्खहरू यस्तै विवाद गरेर आफ्नू हानि गर्दछन्—यत्र दृष्टान्त विवदेदिति विशस्य सम्मतम् । बिना हेतुमपि द्वन्द्वमेतत् मूर्खस्य लक्षणम् ॥

1352

त्यो सुख-दुःख पृथ्वीका विकारभूत देहलाई नै हुन्छ । यदि कोही मानिस आफ्नै दाँतले जिब्रो टोक्छ भने त्यस वेदनाको निम्ति त्यो कसलाई दोषी ठानेर रिस गरोस् ॥५१॥ यदि देवता नै दुःखका हेतु छन् भने पनि त्यसले आत्मालाई के हानि हुन्छ? ती देवहरू उनै देहादि विकारलाई हुन्छ । यदि आफ्नै शरीरको कुनै अंग आफ्नू अंगमा प्रहार गर्दछ भने त्यस अवस्थामा त्यो व्यक्ति कसमाथि क्रोध गरोस्? ॥५२॥ यदि आत्मा स्वयं सुख-दुःखको हेतु छ भने त्यो पनि आफ्नै हो, अरु होइन, किनकि आत्मादेखि भिन्न केही छैन र छ भने पनि त्यो मिथ्या हो । अतः न सुख छ, न दुःख । अनि रिस केको? ॥५३॥ यदि ग्रहलाई सुख-दुःखको कारण मानौं भने तीबाट पनि के अजन्मा आत्माको हानि हुन्छ र तिनको प्रभाव पनि त जन्म-मरणशील देहमै हुन्छ । कोही यस्तो पनि भन्दछन्—यौटा ग्रहको अर्को ग्रहमाथि दृष्टि पर्नाले ग्रहलाई नै पीडा हुन्छ, अनि तीबाट अतिशय भिन्न पुरुष कसरी पीडा अनुभव गर्दो? ॥ ५४ ॥ कर्म नै सुख-दुःखको कारण हो भने तीसित आत्माको के प्रयोजन? ती दुवै पदार्थ जड र अजड दुइ रूपमा भएपछि नै हुन सक्छन्, तर यो देह

सद्वेदनायाः कतमाय कुप्येत् ॥ ५१ ॥ दुःखस्य हेतुर्यदि देवतास्तु किमात्मनस्तत्र विकारयोस्तत् ॥ यदङ्गमङ्गेन निहन्यते क्वचित्क्रुध्येत कस्मै पुरुषः स्वदेहे ॥५२॥ आत्मा यदि स्यात्सुखदुःखहेतुः किमन्यतस्तत्र निजस्वभावः ॥ न ह्यात्मनोऽन्यद्यदि तन्मृषा स्यात् क्रुध्येत कस्मान्न सुखं न दुःखम् ॥५३॥ ग्रहा निमित्तं सुखदुःखयोश्चेत्किमात्मनोऽजस्य जनस्य ते वै ॥ ग्रहैर्ग्रहस्यैव वदन्ति पीडां क्रुध्येत कस्मै पुरुषस्ततोऽन्यः ॥ ५४ ॥ कर्मास्तु हेतुः सुखदुःखयोश्चेत्किमात्मनस्तद्धि जडाजडत्वे ॥ देहस्त्वचित्पुरुषोऽयं सुपर्णः क्रुध्येत कस्मै न हि कर्ममूलम् ॥ ५५ ॥ कालस्तु हेतुः सुखदुःखयोश्चेत्किमात्मनस्तत्र तदात्मकोऽसौ ॥ नाग्नेर्हि तापो न हिमस्य तत् स्यात् क्रुध्येत कस्मै न परस्य द्वन्द्वम् ॥ ५६ ॥ न केनचित्क्वापि कथञ्चनास्य द्वन्द्वोपरागः परतः परस्य ॥ यथाहमः संसृतिरूपिणः स्यादेवं प्रबुद्धो न बिभेति भूतैः ॥ ५७ ॥ एतां स आस्थाय परात्मनिष्ठामध्यासितां पूर्वतमैर्महर्षिभिः ॥ अहं तरिष्यामि दुरन्तपारं तमो मुकुन्दाङ्घ्रिनिषेवयैव ॥ ५८ ॥ श्रीभगवानुवाच ॥ निर्विद्य नष्टद्रविणो गतक्लमः प्रव्रज्य गां पर्यटमान इत्थम् ॥ निराकृतोऽसद्भिरपि स्वधर्मादकम्पितोऽमुं मुनिराह गाथाम् ॥ ५९ ॥ सुखदुःखप्रदो नान्यः पुरुषस्यात्मविभ्रमः ॥ मित्रोदासीनरिपवः संसा-

जड अचेतन छ र यसमा पक्षीरूपले बस्ने आत्मा सर्वथा विकारहीन र साक्षीमात्र छ । यसरी कर्मको कुनै आश्रय नै छैन, अनि क्रोध कसमाथि गर्ने हो? ॥ ५५ ॥ यदि काल नै सुख-दुःखका हेतु हो भने त्यसले पनि आत्माको के हानि हुन सक्छ? काल पनि त उसैको अंश हो । जस्तै—आगोले आगोलाई डढाउन सक्तैन र हिउँले हिउँलाई चिसो पार्न सक्तैन, त्यस्तै आत्माको अंशभूत काल उसको कारण हुन सक्तैन । अनि रिस कसमाथि गर्ने? किनकि आत्मालाई त कुनै प्रकारको द्वन्द्व छुँदैछैन ॥ ५६ ॥ फेरि प्रकृति देखि पर आत्मालाई कहिल्यै कसैद्वारा कुनै प्रकारको सुख-दुःखको संसर्ग हुन सक्तैन । ती संसाररूपी अहङ्कारमै प्रतीत हुन्छन् । जो यस्तो जान्दछ, त्यो फेरि कहिल्यै कुनै भौतिक पदार्थबाट डराउँन ॥ ५७ ॥ यसै गरी पूर्ववर्ती महर्षीहरूका आश्रित परमात्मनिष्ठामा स्थित भएर मुकुन्द भगवानका चरण-युगलको सेवा द्वारा म अपार, पार नभएको अन्धकारलाई निकै सुगमताले तर्न सक्नेछु ॥ ५८ ॥ भगवानले भन्नुभयो—यसरी धन नष्ट भएपछि क्लेशरहित र विरक्त भई घरबार छाडी पृथ्वीमा डुलिरहेको बेला मानिस दुष्टहरूद्वारा

1353

तिरस्कृत हुँदा पनि आफ्नू धर्ममा अडिएर यस गाथाको गान गर्दथे—॥ ५९ ॥ यसमा संसारमा व्यक्तिलाई सुख-दुःख दिने अर्को कोही पनि छैन । यो उनको चित्तको भ्रममात्र हो । मित्र, उदासीन र शत्रुरूपी संसार अज्ञानले नै रचित छ ॥ ६० ॥ अतः हे तात ! ममा लगाइएको बुद्धि द्वारा आफ्नू सम्पूर्ण शक्ति लगाएर युक्तिपूर्वक मनको निग्रह गर, यही योगको सार हो ॥६१॥ जो प्राणी भिक्षुद्वारा गान गरिएको यो ब्रह्मनिष्ठा सावधानीपूर्वक सुनेर अन्यलाई सुनाउँदै हृदयङ्गम गर्दछ, त्यो सुख-दुःख आदि सबै द्वन्द्वको चक्रमा पर्दैन ॥ ६२ ॥
इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'कालिन्दी' भाषाटीकायां त्रयोदशोऽध्यायः ॥२३॥

( सांख्ययोगको निरूपण ) भगवान् आज्ञा हुन्छ—हे उद्धव ! अब म प्राचीन आचार्यहरूद्वारा निश्चित सांख्यशास्त्रको वर्णन गर्दछु, जुन जानिसकेपछि मनुष्य वैकल्पिक अर्थात् प्रपञ्चभ्रम तुरुन्त त्यागिदिन्छ ॥१॥ प्रलयकाल तथा सत्ययुगको आदिमा सबैजना विवेकी थिए । ज्ञान र उसको विषय अर्थात् द्रष्टा र दृश्य निर्विकल्परूपमा नै रहन्थे ॥२॥

रस्तमसा कृतः ॥६०॥ तस्मात्सर्वात्मना तात निगृहाण मनो धिया ॥ मय्यावेशितया युक्त एतावान् योगसंग्रहः ॥ ६१ ॥ य एतां भिक्षुणा गीतां ब्रह्मनिष्ठां समाहितः ॥ धारयञ्छ्रावयञ्छृण्वन्द्वन्द्वैर्नैवाभिभूयते ॥६२॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे त्रयोविंशतितमोऽध्यायः॥ २३ ॥

श्रीभगवानुवाच ॥ अथ ते संप्रवक्ष्यामि सांख्यं पूर्वैर्विनिश्चितम् ॥ यद्विज्ञाय पुमान्सद्यो जह्याद्वैकल्पिकं भ्रमम् ॥ १ ॥ आसीज्ज्ञानमथो ह्यर्थ एकमेवाविकल्पितम् ॥ यदा विवेकनिपुणा आदौ कृतयुगे युगे ॥ २ ॥ तन्मायाफलरूपेण केवलं निर्विकल्पितम् ॥ वाङ्मनोऽगोचरं सत्यं द्विधा समभवद्बृहत् ॥ ३ ॥ तयोरेकतरो ह्यर्थः प्रकृतिः सोभयात्मिका ॥ ज्ञानं त्वन्यतमो भावः पुरुषः सोऽभिधीयते ॥ ४ ॥ तमो रजः सत्त्वमिति प्रकृतेरभवन्गुणाः ॥ मया प्रक्षोभ्यमाणायाः पुरुषानुमतेन च ॥ ५ ॥ तेभ्यः समभवत्सूत्रं महान् सूत्रेण संयुतः ॥ ततो विकुर्वतो जातोऽहङ्कारो यो विमोहनः ॥ ६ ॥ वैकारिकस्तैजसश्च तामसश्चेत्यहं त्रिवृत् ॥ तन्मात्रेन्द्रियमनसां कारणं चिदचिन्मयः ॥ ७ ॥ अर्थस्तन्मात्रिकाज्जज्ञे तामसादिन्द्रियाणि च ॥ तैजसाद्देवता आसन्नेकादश च वैकृतात् ॥८॥ मया सञ्चोदिता भावाः सर्वे संहत्यकारिणः ॥ अण्डमुत्पादयामासुर्ममायतनमुत्तमम् ॥ ९ ॥ तस्मिन्नहं समभवमण्डे सलिलसंस्थितौ ॥ मम नाभ्यामभूत्पद्मं विश्वाख्यं तत्र चात्मभूः ॥१०॥ सोऽसृजत्तपसा युक्तो रजसा मदनुग्रहात् ॥ लोका-

अनि मन र वाणीले अतीत यो एकमात्र, निर्विकल्प र सत्यस्वरूप ब्रह्म माया अर्थात् दृश्य र उनको प्रकाशरूपले दुइटाको दुइ भयो ॥ ३ ॥ त्यसबाट एक वस्तु अर्थात् मायालाई प्रकृति भन्दछन् । त्यो प्रकृति कार्य-कारणरूपले दुइ थरिका हुन्छन् । दोस्रो वस्तु ज्ञान हो, जो पुरुष कहिन्छ ॥ ४ ॥ जीवको अदृष्टको अनुसार मैले प्रकृतिलाई क्षुब्ध पारें, त्यसबाट सत्त्व, रज, तम तीन गुण निस्के॥५॥ तीबाट सूत्र र उसबाट महत्तत्त्व उत्पन्न भयो, जुन सूत्रसित मिलिएको छ । त्यो विकारयुक्त महत्तत्त्वले अहङ्कार प्रकट भयो । अहंले जीवलाई मोहपार्दछ॥६॥ त्यो अहङ्कार वैकारिक, तैजस र तामस--भेदले तीन थरिको हुन्छ । पंचतन्मात्रा,इन्द्रिय र मनको कारण हुनाले त्यो जड-चेतनमय कहिन्छ॥७॥तामस अहङ्कारबाट पंचतन्मात्राहरूले पंचभूत तैजस अहङ्कारबाट इन्द्रिय र वैकृत अहङ्कारबाट इन्द्रियका अधिष्ठाता एघार देवता जन्मे ॥८॥ मद्वारा प्रेरित भएर सबै कारणतत्त्वले थोरैमा मिलिएर मेरा आश्रयस्वरूप उत्तम

अण्ड बनाएँ ॥ ९ ॥ जलमा स्थित भएपछि म त्यस अण्डमा गएर विराजमान भएँ। यनि मेरो नाभि-कमलबाट यो विश्व नामक कमल उपज्यो र यसैबाट ब्रह्मा भए ॥१०॥ ब्रह्मा-
ले तपस्या गरे र मेरै अनुग्रहले रजोगुण द्वारा लोकपाल सहित भूः अर्थात् पृथिवी, भुवः अर्थात् अन्तरिक्ष, स्वः अर्थात् स्वर्ग यी तीन लोकको सृष्टि भयो ॥११॥ स्वर्लोक देवताहरूका
निवासस्थान बन्यो। भुवर्लोक भूतगणको निम्ति तोकियो र भूर्लोकमा मनुष्यादि प्राणी गएर बसे तथा सिद्धहरूले बस्ने स्थान यी तीनैदेखि माथि महर्लोक तथा तपोलोकादि हुन
॥१२॥ यो जगत् प्रभु ब्रह्माले असुर तथा नागकालागि पृथिवीतलको तल, अतल, वितल, सुतलादि सात पाताल बनाए। यो तीनै लोकमा त्रिगुणात्मक कार्य अनुसार नै सबै गतिहरू प्राप्त
हुन्छन् ॥१३॥ योग, तप तथा संन्यासको फलस्वरूप महर्लोक, तपोलोक र सत्यलोक आदि उत्तम लोक प्राप्त हुन्छन् र भक्तियोगले मेरो परमधाम मिल्दछ ॥१४॥ म स्वयं कालस्वरूप
हुँ। मेरो प्रेरणाले नै यो सारा जगत् कर्मकलापले गुणको प्रवाहमा डुबेको कहिले उत्रिन्छ र गाडिन्छ, अर्थात् यो कहिले शुभ कर्मले उत्पन्न हुन्छ र कहिले पापकर्मले अधो-

सपालान्विश्वात्मा भूर्भुवःस्वरिति त्रिधा ॥ ११ ॥ देवानामोक आसीत्स्वर्भूतानां च भुवः पदम् ॥ मर्त्यादीनां च भूर्लोकः सिद्धानां त्रितयात्परम् ॥ १२ ॥ अधोऽसुराणां नागानां भूमेरोकोऽसृजत्प्रभुः ॥ त्रिलोक्यां गतयः सर्वाः कर्मणां त्रिगुणात्मनाम् ॥ १३ ॥ योगस्य तपसश्चैव न्यासस्य गतयोऽमलाः ॥ महर्जनस्तपः सत्यं भक्तियोगस्य मद्गतिः ॥ १४ ॥ मया कालात्मना धात्रा कर्मयुक्तमिदं जगत् ॥ गुणप्रवाह एतस्मिन्नुन्मज्जति निमज्जति ॥ १५ ॥ अणुर्बृहत्कृशः स्थूलो यो यो भावः प्रसिद्ध्यति ॥ सर्वोऽप्युभयसंयुक्तः प्रकृत्या पुरुषेण च ॥ १६ ॥ यस्तु यस्यादिरन्तश्च सवैमध्यं च तस्य सन् ॥ विकारो व्यवहारार्थो यथा तैजसपार्थिवाः ॥ १७ ॥ यदुपादाय पूर्वस्तु भावो विकुरुतेऽपरम् ॥ आदिरन्तो यदा यस्य तत्सत्यमभिधीयते ॥ १८ ॥ प्रकृतिर्ह्यस्योपादानमाधारः पुरुषः परः ॥ सतोऽभिव्यञ्जकः कालो ब्रह्म तत्त्रितयं त्वहम् ॥ १९ ॥ सर्गः प्रवर्तते तावत्पौर्वापर्येण नित्यशः ॥ महान्गुणविसर्गार्थः स्थित्यन्तो यावदीक्षणम् ॥ २० ॥ विराण्मयाऽऽसाद्यमानो लोककल्पविकल्पकः ॥ पञ्चत्वाय विशेषाय कल्पते भुवनैः सह ॥ २१ ॥ अन्ने प्रलीयते मर्त्यमन्नं धानासु लीयते ॥ धाना भूमौ प्रलीयन्ते भूमिर्गन्धे प्रलीयते ॥ २२ ॥ अप्सु प्रलीयते गन्ध आपश्च स्वगुणे रसे ॥

गतिमा गाडिन्छ ॥ १५ ॥ अणु अर्थात् सानो, बृहत् भनेको ठूलो र कृश अर्थात् पातलो र स्थूल अर्थात् मोटो जे जति पदार्थ उत्पन्न हुन्छ, त्यसको पुरुष र प्रकृति दुवै मिलेर नै
रचना हुन्छ ॥ १६ ॥ जुन पदार्थ जसको आदि र अन्त्यमा रहन्छ, त्यसको माझमा पनि उसैको सत्ता रहन्छ र त्यही सत्य पनि रहन्छ। त्यसका विकार केवल व्यवहारको निम्ति
हुन्छन्। जस्तै सुवर्णका विकार कङ्कणादि र माटोका गाग्री आदि हुन्छन् ॥ १७ ॥ जब कुनै उपादान कारणको सहायताले कुनै अर्को कार्यरूपी भावलाई पूर्ण उपादान कारण
उत्पन्न गर्दछ तब जो त्यसको आदि तथा अन्त्यमा रहन्छ, त्यही सत्य कहिन्छ ॥ १८ ॥ यस प्रपञ्चको उपादान कारण प्रकृति नै हो। प्रकृतिको अधिष्ठान परमात्मा हुन्। यसको
अभिव्यञ्जक काल हो। यी तीनै ब्रह्मरूप म नै हुँ ॥ १९ ॥ जबसम्म परमात्माको दृष्टि रहन्छ र जबसम्म स्थितिको अन्तिम समय अर्थात् प्रलय हुँदैन, तबसम्म जीवकृत कर्मका
फल-भोगको निम्ति पिता-पुत्र परम्पराले बारम्बार उत्पत्ति-नाशशील यो संसार जुन विराटरूपले स्थित छ, त्यो कालमा आएर यसै भुवन समेत नाशरूप विशेषत्वमा प्राप्त हुन्छ।

त्यसको लीन हुने प्रक्रिया हो–प्राणीहरूको शरीर अन्नमा, अन्न बीजमा, बीज भूमिमा र भूमि गन्ध तन्मात्रामा लीन हुन्छ ॥ २०॥ २३ ॥ अनि रूप वायुमा, वायु स्पर्शमा स्पर्श आकाशमा र आकाश शब्दतन्मात्रमा लीन हुन्छ । इन्द्रिय आफ्ना कारण देवताहरूमा र अन्तः राजस अहङ्कारमा विलीन हुन्छन् ॥ २४ ॥ हे सौम्य ! राजस अहङ्कार आफ्ना नियन्ता सात्त्विक अहङ्कारको मनमा, शब्द तन्मात्रा पञ्चमहाभूतका कारण तामस अहङ्कारमा र सारा जगत्लाई मोहित पार्नमा समर्थ त्रिविध अहङ्कार महत्तत्त्वमा लीन हुन्छ ॥२५॥ ज्ञानशक्ति र क्रियाशक्ति प्रधान महत्तत्त्व आफ्ना कारण गुणमा लीन हुन्छन् । गुण अव्यक्त प्रकृतिमा र प्रकृति आफ्नू प्रेरक अविनाशी स्वरूप कालमा लीन हुन्छ ॥ २६ ॥ काल मायामय जीवमा र जीव म अजन्मा आत्मामा लीन हुन्छ । आत्मा कसैमा पनि लीन हुँदैन, त्यो उपाधिरहित आफ्नू स्वरूपमा नै स्थिर रहन्छ । त्यो जगत्को सृष्टि र लयको अधिष्ठान एवं अवधि हो ॥२७॥ हे उद्धव ! जो यस्तो विवेक दृष्टिले हेर्दछ, त्यसको चित्तमा प्रपंचको भ्रम हुनै सक्दैन । यदि उसको स्फूर्ति कदाचित भए पनि त्यो धेरै समयसम्म हृदय-

लीयते ज्योतिषि रसो ज्योती रूपे प्रलीयते ॥२३॥ रूपं वायौ स च स्पर्शे लीयते सोऽपि चाम्बरे ॥ अम्बरं शब्दतन्मात्र इन्द्रियाणि स्वयोनिषु ॥२४॥ योनिर्वैकारिके सौम्य लीयते मनसीश्वरे ॥ शब्दो भूतादिमप्येति भूतादिर्महति प्रभुः ॥२५॥ स लीयते महान् स्वेषु गुणेषु गुणवत्तमः ॥ तेऽव्यक्ते संप्रलीयन्ते तत् काले लीयतेऽव्यये ॥२६॥ कालो मायामये जीवे जीव आत्मनि मय्यजे ॥ आत्मा केवल आत्मस्थो विकल्पापायलक्षणः ॥२७॥ एवमन्वीक्षमाणस्य कथं वैकल्पिको भ्रमः ॥ मनसो हृदि तिष्ठेत व्योम्नीवार्कोदये तमः ॥२८॥ एष सांख्यविधिः प्रोक्तः संशयग्रन्थिभेदनः ॥ प्रतिलोमानुलोमाभ्यां परावरदृशा मया ॥२९॥ इति श्रीमद्भगवते महापुराणे पारमहंस्यां चतुर्विंशोऽध्यायः ॥२४॥

श्रीभगवानुवाच ॥ गुणानामसमिश्राणां पुमान् येन यथा भवेत् ॥ तन्मे पुरुषवर्येदमुपधारय शंसतः॥१॥ शमो दमस्तितिक्षेक्षा तपः सत्यं दया स्मृतिः ॥ तुष्टिस्त्यागोऽस्पृहा श्रद्धा ह्रीर्दयादिः स्वनिर्वृतिः ॥२॥ काम ईहा मदस्तृष्णा स्तम्भ आशीर्भिदा सुखम् ॥ मदोत्साहो यशः प्रीतिर्हास्यं वीर्यं बलोद्यमः

मा टिक्न कसरी सक्छ ? के सूर्योदय भएपछि पनि आकाशमा अन्धकार टिक्न सक्छ ? ॥ २८ ॥ हे उद्धव ! म कार्य र कारण दुवैको साक्षी हुँ । मैले तिमीलाई सृष्टिदेखि प्रलय र प्रलयदेखि सृष्टिसम्मको सांख्यविधि बुझाएँ । यसले सन्देहको गाँठो फुस्किन्छ र पुरुष आफ्नू स्वरूपमा स्थित हुन्छ ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कंधे पं० गौरीशंकर 'नमिछ' कृत नेपाली भाषाटीकायां चतुर्विंशोऽध्यायः ॥ २४ ॥

( तीन गुणका वृत्तिहरूको निरूपण )—भगवान् आज्ञा हुन्छ–हे पुरुष प्रवर उद्धव ! प्रत्येक पुरुषमा भिन्न-भिन्न गुणको प्रकाश हुन्छ । त्यसले गर्दा प्राणीको स्वभावमा पनि भेद पर्दछ । जुन गुणले जस्तो स्वभाव हुन्छ, त्यो सुन ॥ १ ॥ सत्त्वगुणका वृत्ति हुन् शम ( मनः संयम ), दम ( इन्द्रियनिग्रह ) तितिक्षा ( सहिष्णुता ), विवेक, तप, सत्य, दया, स्मृति' सन्तोष, त्याग, विषयप्रति अनिच्छा, श्रद्धा, लज्जा ( पाप गर्नमा स्वाभाविक संकोच ), आत्मरति, दान, विनय र सरलता इत्यादि ॥ २ ॥ अनि रजोगुणका वृत्ति हुन्–

इच्छा, प्रयत्न, तृष्णा ( असन्तोष ), देवताहरूसित धनको याचना, भेदबुद्धि, विषयभोग, युद्धादिको निम्ति मदजनित उत्साह, आफ्नू वंशमा प्रेम, हास्य, पराक्रम र उद्योगादि ॥३॥ तमोगुणका वृत्ति—क्रोध ( असहिष्णुता ), लोभ, झूठो बोल्नु, हिंसा, याचना, पाखण्ड, श्रम, कलह, शोक, मोह, विषाद, दीनता, निद्रा, आशा, भय र अकर्मण्यता ॥४॥ यसरी क्रमले तीनै गुणका वेरजसो गुणको वर्णन गरियो । अब तिनको मिलापले हुने वृत्तिहरू सुन ॥ ५ ॥ हे उद्धव ! 'म हुँ र मेरो हो' यस प्रकारको बुद्धिमा तीनै गुणको मिश्रण छ । जुन मन, शब्दादि विषय, इन्द्रिय र मनले गर्दा पूर्वोक्त वृत्तिहरूको उदय हुन्छ, तो तबै सात्त्विक, राजस र तामस हुन् ॥ ६ ॥ जब मनुष्य धर्म, अर्थ र कामना संलग्न रहन्छ, तब उसलाई सत्त्वगुणमा श्रद्धा, रजोगुणमा धन-प्राप्ति हुन्छ । यो पनि गुणको मिश्रण नै हो ॥ ७ ॥ जुन बेला मनुष्य सकाम कर्म, गृहस्थाश्रम र धर्ममा प्रीति राख्छ, त्यो पनि त्रिगुणको मेल ठान्नु पर्दछ ॥ ८ ॥ मानसिक शान्ति र जितेन्द्रियादि गुणमा सत्त्वगुणी पुरुषको, कामना रजोगुणीको र क्रोध-हिंसा तमोगुणीको जान्नु ॥ ९ ॥ पुरुष वा स्त्री

॥ ३ ॥ क्रोधो लोभोऽनृतं हिंसा याच्ञा दम्भः क्लमः कलिः । शोकमोहौ विषादार्ती निद्राऽऽशा भीरनुद्यमः ॥४॥ सत्त्वस्य रजसश्चैतास्तमसश्चानुपूर्वशः ॥ वृत्तयो वर्णितप्रायाः संनिपातमथो शृणु ॥५॥ संनिपातस्त्वहमिति ममेत्युद्धव या मतिः ॥ व्यवहारः संनिपातो मनोमात्रेन्द्रियासुभिः ॥ ६ ॥ धर्मे चार्थे च कामे च यदासौ परिनिष्ठितः ॥ गुणानां संनिकर्षोऽयं श्रद्धारतिधनावहः ॥७॥ प्रवृत्तिलक्षणे निष्ठा पुमान् यर्हि गृहाश्रमे ॥ स्वधर्मं चानुतिष्ठेत गुणानां समितिर्हि सा ॥८॥ पुरुषं सत्त्वसंयुक्तमनुमीयाच्छमादिभिः ॥ कामादिभी रजोयुक्तं क्रोधाद्यैस्तमसायुतम् ॥९॥ यदा भजति मां भक्त्या निरपेक्षःस्वकर्मभिः ॥ तंसत्त्वप्रकृतिं विद्यात् पुरुषं स्त्रियमेव वा॥१०॥ यदा आशिष आशास्य मां भजेत स्वकर्मभिः ॥ तं रजः प्रकृतिं विद्याद्धिंसामाशास्य तामसम् ॥११॥ सत्त्वं रजस्तम इति गुणा जीवस्य नैव मे ॥ चित्तजा यैस्तु भूतानां सज्जमानो निबध्यते ॥ १२ ॥ यदेतरौ जयेत् सत्त्वं भास्वरं विशदं शिवम् ॥ तदा सुखेन युज्येत धर्मज्ञानादिभिः पुमान् ॥ १३ ॥ यदा जयेत्तमः सत्त्वं रजःसङ्गं भिदा चलम् ॥ तदा दुःखेन युज्येत कर्मणा यशसा श्रिया ॥ १४ ॥ यदा जयेद् रजः सत्त्वं तमो मूढं लयं जडम् ॥ युज्येत शोकमोहाभ्यां निद्रया हिंसयाऽऽशया ॥ १५ ॥ तदा चित्तं प्रसीदेते इन्द्रियाणां च निर्वृतिः ॥ देहेऽभयं मनोऽसङ्गं तत् सत्त्वं विद्धि मत्पदम् ॥ १६ ॥ विकुर्वन् क्रियया चाधी

जो पनि—जब त्यो निष्काम भएर नित्य-नैमित्तिक कर्मद्वारा मेरो आराधना गर्दछ, तब उसलाई सत्त्वगुणी जान्नु ॥ १० ॥ सकाम भावले आफ्ना कर्मद्वारा मेरो भजन गर्ने व्यक्ति रजोगुणी हो र शत्रुको मृत्यु कामनाले मेरो पूजा गर्ने तमोगुणी जान्नू ॥११॥ सत्त्व, रज, तम, तीनै गुणको कारण जीवको चित्त हो । तीसित मेरो कुनै सम्बन्ध छैन । इनै गुणले जीव शरीर वा बन्धनमा पर्दछ ॥१२॥ सत्त्वगुण निर्मल र शान्त छ । जब त्यो रज र तमलाई जितेर बढ्दछ, त्यसबेला पुरुष, सुख, धर्म र ज्ञानादिको पात्र बन्दछ ॥ १३ ॥ रजोगुण भेदबुद्धिको कारण हो, उसको स्वभाव आसक्ति र प्रवृत्ति । जुनबेला तम र सत्त्वलाई जितेर रजोगुण बढ्दछ, उसबेला व्यक्ति दुःख, कर्म र धनले सम्पन्न हुन्छ ॥१४॥ तमको रूप हो—अज्ञान । उसको स्वभाव हो आलस्य र मूढता । जब त्यो बढेर सत्त्व र रजलाई जित्दछ, तब प्राणी अनेक थरिका आशा गर्दछ, शोक-मोहमा परेर हिंसा गर्न थाल्दछ वा निद्रा आलस्यमा पाहिन्छ ॥१५॥ जब चित्त प्रसन्न र निर्भय रहन्छ तब सत्त्वगुणको वृद्धि जान्नू । सत्त्व मलाई पाउने साधन हो ॥१६॥ कामनाले जीवको बुद्धि, इन्द्रिय असन्तुष्ट, मन भ्रान्त, शरीर

अःवस्थ र मन भ्रममा पर्दछ, त्यस बेला रजोगुणको प्रवृत्ति जान्नु ॥ १७ ॥ जब ज्ञानेन्द्रिय ज्ञान ग्रहणमा असमर्थ र खिन्न भएर चित्त विकल हुन थाल्दछ, अनि मन शून्य जस्तो होस् र अज्ञान एवं ग्लानि बढ्दछ, तब तमोगुणको वृद्धि ठान्नु ॥ १८ ॥ हे उद्धव ! यसै गरी सत्वगुण बढेरछि देवताहरू, रजोगुण बढ्दा असुरहरू र तमोगुण बढेपछि राक्षसहरूको बल वृद्धि हुन्छ ॥ १९ ॥ सत्वगुणले जीवको जाग्रत् अवस्था, रजोगुणले स्वप्न र तमोगुणले सुषुप्ति अवस्था मान्नुपर्दछ। यी बाहेक तुरीय अवस्था—जुन शुद्ध तथा एकरस आत्मस्वरूप हो, त्यो यी तीनैमा व्याप्त रहन्छ ॥२०॥ ब्रह्मवेत्ता ब्राह्मण सत्वगुण द्वारा उत्तरोत्तर माथिका लोकहरूमा जान्छन्। तमोगुणले व्यक्तिको स्थावरपर्यन्त अधोगति मिल्दछ र रजोगुणले मनुष्य देह प्राप्त हुन्छ ॥ २१ ॥ सत्वगुणको वृद्धिमा मर्ने प्राणी स्वर्गलोक जान्छन्, रजोगुणमा लीन हुने मनुष्य लोकमा तथा तमोगुणमा लीन हुने व्यक्ति नरकगामी हुन्छन् र

रनिर्वृत्तिश्च चेतसाम् ॥ गात्रास्वास्थ्यं मनो भ्रान्तं रज एतैर्निशामय ॥ १७ ॥ सीदच्चित्तं विलीयेत चेतसो ग्रहणेऽक्षमम् ॥ मनो नष्टं तमो ग्लानि-स्तमस्तदुपधारय ॥ १८ ॥ एधमाने गुणे सत्त्वे देवानां बलमेधते ॥ असुराणां च रजसि तमस्युद्धव रक्षसाम् ॥ १९ ॥ सत्वाज्जागरणं विद्याद्रजसा स्वप्नमादिशेत् ॥ प्रस्वापं तमसा जन्तोस्तुरीयं त्रिषु सन्ततम् ॥ २० ॥ उपर्युपरि गच्छन्ति सत्वेन ब्राह्मणा जनाः ॥ तमसाधोऽध आमुख्याद्रजसा-न्तरचारिणः ॥ २१ ॥ सत्वे प्रलीनाः स्वर्यान्ति नरलोकं रजोलयाः ॥ तमोलयास्तु निरयं यान्ति मामेव निर्गुणाः ॥ २२ ॥ मदर्पणं निष्फलं वा सात्विकं निजकर्म तत् ॥ राजसं फलसङ्कल्पं हिंसाप्रायादि तामसम् ॥ २३ ॥ कैवल्यं सात्विकं ज्ञानं रजो वैकल्पिकं च यत् ॥ प्राकृतं तामसं ज्ञानं मन्निष्ठं निर्गुणं स्मृतम् ॥ २४ ॥ वनं तु सात्विको वासो ग्रामो राजस उच्यते ॥ तामसं द्यूतसदनं मन्निकेतं तु निर्गुणम् ॥ २५ ॥ सात्विकः कारकोऽसङ्गी रागान्धो राजसः स्मृतः ॥ तामसः स्मृतिविभ्रष्टो निर्गुणो मदपाश्रयः ॥ २६ ॥ सात्विक्याध्यात्मिकी श्रद्धा कर्मश्रद्धा तु राजसी ॥

ती गुणातीत एवं जीवनमुक्त व्यक्ति मकहाँ आउँछन् ॥ २२ ॥ कर्मफल मलाई अर्पण गरेर निष्कामभावले जो कर्म गरिन्छ, त्यो सात्विक, फल-प्राप्तिको सङ्कल्पले गरिएको कर्म राजस र हिंसा-दम्भादिलेयुक्त कर्म तामस कहिन्छ ॥ २३ ॥ आत्माको असंगताको ज्ञान सात्विक, हुन्छ, त्यसैलाई कर्ता र भोक्ता जान। राजस र साधारण सांसारिक ज्ञान तामस एवं मेरो स्वरूपको ज्ञान निर्गुण कहिन्छ ॥ २४ ॥ वनमा वस्नु सात्विक, गाउँमा वस्नु राजस, जूआ खेल्ने घरमा निवास तामस र मेरो स्वरूप तथा मेरो मन्दिरमा निवास निर्गुण

* दृष्टान्त ( कुकुरको रोग )—एक दिन कौरा राजाले आएर राजवैद्यलाई भने—'यो मेरो पालेको सुगा बोल्दछ, तर त्यसै गरी पालेको कुकुर किन बोल्दैन ? यसको जिब्रोमा कुनै रोग छ, त्यो तिमीले निको पार्नुपर्दछ। निको पार्न सकेनौ भने तिमीलाई मृत्युदण्ड दिने छु।' समस्या गम्भीर छ।' समस्या गम्भीर छ भन्ने कुरा राजवैद्यले बुझे तापनि एकदिन विचार गरेर भने—'महाराज ! यसको रोग निकै पुरानो गहिरोको छ। यो छिटै निको हुन सक्दैन। यसको निमित्त चौध वर्षको समय चाहिन्छ।' राजाले स्वीकार गरे। तदनुसार राजवैद्य दिनहुँ कुकुरलाई औषधालयमा बाँधेर भरि भरिका औषधि दसकौं दाउकोमा मिल्न लाउने र स्वयं आठ-आठ घण्टा राम नामको जप गर्दथे। यसो गर्दा गर्दै धेरै दिन बिते। एक दिन वैद्यका चौरा मित्रले भने—'यो रोग किन निको हुँदैन ? के यस्तो गर्नाले कुकुर बोल्न थाल्दछ ?' राजवैद्यले भने—'मलाई त राम्रो मौका मिल्यो। कुकुर बोले पनि नबोले पनि म निश्चिन्तताले भजन त गरिरहेको छु। अब म पूरा समय श्रीरामको मनोहर मूर्तिको ध्यान गर्दछु। चौध वर्षको अवधि छ। यति दिनमा म, राजा अथवा कुकुर —यी तीनमा कोही अवश्य मर्दछ। अनि मेरो काम पूरा हुन्छ।' राजवैद्यको यस्तो उत्तर पाएर उनका मित्र प्रसन्न भएर भन्न लागे—'खूब राम्रो बाटो रोजेछौ, तिमीले।'

१३५८

कहिन्छ ॥२५॥ अनासक्त भावले कर्म गर्ने व्यक्ति सात्त्विक, रागयुक्त भएर गर्ने राजस व्यक्ति र पूर्वापरको विचारले हीन भएर कर्म गर्ने व्यक्ति तामस कहिन्छ। जो निरहङ्कार र मेरो आश्रित भएर कर्ममा प्रवृत्त हुन्छ, त्यो निर्गुण कहिन्छ ॥ २६ ॥ आत्मज्ञानको श्रद्धा सात्त्विक श्रद्धा मानिन्छ। त्यसै प्रकार कर्मको श्रद्धा राजसी र जुन श्रद्धा अधर्ममा गरिन्छ, उसलाई तामसी श्रद्धा भन्दछन्। मेरो सेवा-पूजामा श्रद्धा निर्गुण कहिन्छ ॥२७॥ पथ्य, पवित्र र अनायास प्राप्त आहार सात्त्विक, रसनेन्द्रियलाई रुचिकर राजस तथा कष्टदायी एवं अपवित्र आहार तामस मानिन्छ ॥२८॥ आत्माले प्राप्त सुख सात्त्विक, विषयले प्राप्त सुख राजस, मोह र दीनताले प्राप्त सुख तामस र मद्वारा पाइने सुख निर्गुण मानिन्छ ॥ २९ ॥ यसरी द्रव्य, कर्म, कर्ता, श्रद्धा, देह, फल, काल, ज्ञान अवस्था, क्रिया र निष्ठा—यी सबै त्रिगुणात्मक कहिन्छन् ॥३०॥ हे उद्धव! पुरुष र प्रकृतिद्वारा अधिष्ठित सबै देखे-सुनेर र बुद्धिले

तामस्यधर्मे या श्रद्धा मत्सेवायां तु निर्गुणा ॥ २७ ॥ पथ्यं पूतमनायस्तमाहार्यं सात्त्विकं स्मृतम् ॥ राजसं चेन्द्रियप्रेष्ठं तामसं चार्तिदाशुचि ॥२८॥ सात्त्विकं सुखमात्मोत्थं विषयोत्थं तु राजसम् ॥ तामसं मोहदैन्योत्थं निर्गुणं मदपाश्रयम् ॥ २९ ॥ द्रव्यं देशः फलं कालो ज्ञानं कर्म च कारकः ॥ श्रद्धावस्था कृतिर्निष्ठा त्रैगुण्याः सर्व एव हि ॥ ३० ॥ सर्वे गुणमया भावाः पुरुषाव्यक्तधिष्ठिताः ॥ दृष्टं श्रुतमनुध्यातं बुद्ध्या वा पुरुषर्षभ ॥३१॥ एताः संपृतयः पुंसो गुणकर्मनिबन्धनाः ॥ येनेमे निर्जिताः सौम्य गुणा जीवेन चित्तजाः ॥ भक्तियोगेन मन्निष्ठो मद्भावाय प्रपद्यते ॥ ३२ ॥ तस्माद्देहमिमं लब्ध्वा ज्ञानविज्ञानसम्भवम् ॥ गुणसङ्गं विनिर्धूय मां भजन्तु विचक्षणाः ॥ ३३ ॥ निःसङ्गो मां भजेद्विद्वानप्रमत्तो जितेन्द्रियः ॥ रजस्तमश्चाभिजयेत्सत्त्वसंसेवया मुनिः॥३४॥ सत्त्वं नाभिजयेद्युक्तो नैरपेक्ष्येण शान्तधीः ॥ सम्पद्यते गुणैर्मुक्तो जीवो जीवं विहाय माम् ॥३५॥ जीवो जीवविनिर्मुक्तो गुणैश्चाशयसम्भवैः ॥ मयैव ब्रह्मणा पूर्णो न बहिर्नान्तरश्चरेत् ॥३६॥ इति श्रीमद्भागवते एकादशस्कन्धे पञ्चविंशतितमोऽध्यायः॥२५॥

श्रीभगवानुवाच ॥ मल्लक्षणमिमं कायं लब्ध्वा मद्धर्म आस्थितः ॥ आनन्दं परमात्मानमात्मस्थं समुपैति माम् ॥ १ ॥ गुणमय्या

॥ ३१ ॥ हे सौम्य! पुरुषलाई यो त्रिगुणमय संसार-बन्धन गुण-कर्मले प्राप्त हुन्छ। जुनःजीव थी चित्तजनित भक्तियोगद्वारा जितलिन्छ, त्यो ममा निष्ठा राख्ने भक्त मेरो स्वरूप आनेका पदार्थ त्रिगुणमय हुन्छ अर्थात् मोक्ष प्राप्त गर्दछ ॥३२॥ अतः ज्ञान-विज्ञान प्राप्तिको साधनरूप मानव-देह पाएर विचारवान् व्यक्ति गुण-सङ्ग त्यागेर मेरो भजन गरोस् ॥३३॥ विवेक सम्पन्न र मननशील व्यक्तिको कर्तव्य हो—सत्त्वगुणको सेवन गर्दै रज र तमको पराभव गरेर इन्द्रियसंयमपूर्वक आसक्ति र प्रमाद त्यागेर मेरो भजन गरोस् ॥ ३४ ॥ फेरि शान्तचित्त र निरपेक्षभावले युक्तिपूर्वक सत्वगुणलाई पनि जितोस्। त्यति भएपछि गुणबाट मुक्त जीव आफ्नो जीवत्व छाडेर निश्चय ममा प्राप्त हुन्छ ॥ ३५ ॥ यसरी जीव लिङ्गशरीररूपिणी आफ्नी उपाधि र अन्तःकरण जनित गुणबाट मुक्त भई म परब्रह्मलाई प्राप्त गरेर पूर्ण हुन्छ। फेरि त्यो बाह्य अथवा आन्तरिक विषयमा कुनै प्रकारले पनि अल्झन्न ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे 'वासिष्ठी' भाषाटीकायां पञ्चविंशोऽध्यायः ॥२५॥

( ऐलगीत र त्यसको विवेचन ) भगवान् भन्नुहुन्छ—हे उद्धव ! सबै सुलक्षणले युक्त यो मनुष्यदेह पाएर जो मनुष्य भागवत-धर्ममा स्थिर रहन्छ, त्यो आफ्नू अन्तःकरण स्थित म आनन्दरूप परमात्मालाई पाउँछ ॥ ११ ॥ यस्तो ज्ञाननिष्ठा द्वारा जीवावस्थाबाट मुक्त भएर पुरुष अवास्तविकरूपले प्रतीयमान गुणमा रहेर पनि मिथ्या गुणमा बाँधिन्न ॥२॥ विषय सेवन र उदर-पालनमा नै अल्झने व्यक्तिको संगत नगरोस्, किनकि तिनको पछिलाग्ने प्राणी अन्धोको पछि-पछि हिँड्ने अन्धो मानिस जस्तै घोर अन्धकारमा जाकिन्छ ॥ ३ ॥ यशस्वी, राजराजेश्वर तथा इलापुत्र महाराज पुरूरवाले उर्वशीको वियोगमा दुःखी भएर अनेक पश्चात्ताप गर्दै त्यो शोक हराएपछि भनेका थिए—॥ ४ ॥ स्वयं आफूलाई छाडेर जाने उर्वशीको पछि-पछि दगुर्दै उनले व्याकुल भएर उन्मत्त झैं नग्नावस्थामा नै भने—'ए कठोर कामिनी ! पर्खी यस्तो भन्दै रुनलागे ५ ॥ उर्वशीमा अत्यन्त आसक्तचित्त पुरूरवाले भोगहरू भोग्दै अतृप्तभावले धेरै वर्षसम्म रात र दिन गएको पनि थाहा पाएनन् ॥ ६ ॥ केही दिनपछि वैराग्य भयो र उनले भने—'अहो ! म

जीवयोन्या विमुक्तो ज्ञाननिष्ठया ॥ गुणेषु मायामात्रेषु दृश्यमानेष्ववस्तुतः ॥ वर्तमानोऽपि न पुमान्युज्यतेऽवस्तुभिर्गुणैः ॥ २ ॥ सङ्गं न कुर्यादसतां शिश्नोदरतृपां क्वचित् ॥ तस्यानुगस्तमस्यन्धे पतत्यन्धानुगान्धवत् ॥ ३ ॥ ऐलः सम्राडिमां गाथामगायत बृहच्छ्रवाः ॥ उर्वशीविरहान्मुह्यन्निर्विण्णः शोकसंयमे ॥ ४ ॥ त्यक्त्वाऽऽत्मानं व्रजन्तीं तां नग्न उन्मत्तवन्नृपः ॥ विलपन्नन्वगाज्जाये घोरे तिष्ठेति विक्लवः ॥ ५ ॥ कामानतृप्तोऽनुजुषन्क्षुल्लकान्वर्षयामिनीः ॥ न वेद यान्तीर्नायान्तीरुर्वश्याकृष्टचेतनः ॥ ६ ॥ ऐल उवाच ॥ अहो मे मोहविस्तारः कामकश्मलचेतसः ॥ देव्या गृहीतकण्ठस्य नायुःखण्डा इमे स्मृताः ॥ ७ ॥ नाहं वेदाभिनिर्मुक्तः सूर्यो वाऽभ्युदितोऽमुया ॥ मुषितो वर्षपूगानां बताहानि गतान्युत ॥ ८ ॥ अहो मे आत्मसम्मोहो येनात्मा योषितां कृतः ॥ क्रीडामृगश्चक्रवर्ती नरदेवशिखामणिः ॥ ९ ॥ सपरिच्छदमात्मानं हित्वा तृणमिवेश्वरम् ॥ यान्तीं स्त्रियं चान्वगमं नग्न उन्मत्तवद्रुदन् ॥ १० ॥ कुतस्तस्यानुभावः स्यात्तेज ईशत्वमेव वा ॥ योऽन्वगच्छं स्त्रियं यान्तीं खरवत्पादताडितः ॥ ११ । किं विद्यया किं तपसा किं त्यागेन श्रुतेन वा ॥ किं विविक्तेन मौनेन स्त्रीभिर्यस्य मनो हृतम् ॥ ॥ १२ ॥ स्वार्थस्याकोविदं धिङ्मां मूर्खं पण्डितमानिनम् ॥ योऽहमीश्वरतां प्राप्य स्त्रीभिर्गोखरवज्जितः ॥ १३ ॥ सेवतो वर्षपूगान् मे उर्वश्या अधरासवम् ॥ न तृप्यत्यात्मभूः कामो वह्नि-

काम-कलुषित चित्त हुने अज्ञानीका मोहको कस्तो विस्तार छ ? स्त्रीको घाँटीमा हात राखेर मैले आफ्नू आयुको यति दिन र रात बितेको पनि जान्न सकिन ॥ ७ ॥ यस्तो मोहमा बाँधिइरहनाले यो पनि जानिन कि कहिले सूर्योदय भयो र कहिले अस्त भयो र यो पनि जान्न सकिन कि यतिका वर्षका दिन कसरी बिते ॥८॥ अहो ! मेरो कस्तो ठूलो अज्ञान हो, म राजशिरोमणि र चक्रवर्ती भएर पनि आफूलाई स्त्रीको क्रीडामृग तुल्याएको छु ॥ ९ ॥ राजपाठ सहित म आफ्नू स्वामीलाई तृण झैं त्यागेर पनि स्त्रीका पछि-पछि म उन्मत्त झैं नाङ्गा र रुँदै दगुरें । गधाको समान चुटाई खाएर पनि मजस्तो पुरुषलाई त्यागेर जाने तथा पछि पछि दगुर्नेको प्रभाव, तेज तथा स्वामित्व कसरी टिक्नसक्ला ॥१०॥ ॥११॥ जसको मन नारीले चोर्छन्, त्यसको विद्या, तप, दान, शास्त्राभ्यास, एकान्त सेवन र मौनादि व्रतले के लाभ होला ? ॥ १२ ॥ आफ्नो हित तथा अनहित नजान्ने एवं

आफूलाई पण्डित मान्ने म मूर्खलाई धिक्कार छ, जो राज्य पाएर पनि गोरुजस्तो र गधा झैं स्त्रीको अधीन भयो ॥ १३ ॥ फेरि मैले धेरै वर्ष उर्वशीको अधर-रस पान गरें, तापनि अग्नि आहुतिले तृप्त नभए झैं मनबाट उत्पन्न हुने मेरा काम-वासनाहरू शान्त भएनन् ॥ १४ ॥ कुलटा द्वारा हरण गरिएको चित्तलाई मुक्त पार्न आत्माराम मुनिका प्रभु अधोक्षजलाई छाडेर अरु को समर्थ होला ? ॥ १५ ॥ उर्वशीले सत्य र मीठा वचन भनेर मलाई बुझाएकी थिई, तैपनि म मूढ र अजितेन्द्रियका मनको महामोह नष्ट हुन सकेन ॥१६॥ डोरीको स्वरूप नजानेर उसलाई सर्प ठान्ने पुरुषको डोरीले क्यै अपकार गर्दैन, त्यस्तै यदि मैले इन्द्रियहरू जित्न सकिन भने यसमा बिचरी ती उर्वशीले के अपराध गरिन् ? वास्तवमा मेरो नै सारा दोष थियो ॥१७॥ कहाँ मलिन र दुर्गन्धयुक्त स्त्रीको अपवित्र शरीर र कहाँ सौहार्द-प्रेम आदि अनेक अलौकिक गुण ? अविद्याले नै इनको दसरी शरीरमा अध्यास भइरहेको छ ॥१८॥ यो देह, माता-पिताको धन हो अथवा स्त्री, स्वामी, अग्नि, कुकुर र स्याल, गिद्धमा कसैको छ ? के यो आफ्नू हो वा

राहुतिभिर्यथा ॥ १४ ॥ पुंश्चल्याऽपहृतं चित्तं को न्वन्यो मोचितुं प्रभुः ॥ आत्मारामेश्वरमृते भगवन्तमधोक्षजम् ॥ १५ ॥ बोधितस्यापि देव्या मे सूक्तवाक्येन दुर्मतेः ॥ मनोगतो महामोहो नापयात्यजितात्मनः ॥ १६ ॥ किमेतया नोऽपकृतं रज्ज्वा वा सर्पचेतसः ॥ रज्जुस्वरूपाविदुषो योऽहं यदजितेन्द्रियः ॥ १७ ॥ क्वायं मलीमसः कायो दौर्गन्ध्याद्यात्मकोऽशुचिः ॥ क्व गुणाः सौमनस्याद्या ह्यध्यासोऽविद्यया कृतः ॥ १८ ॥ पित्रोः किं स्वं नु भार्यायाः स्वामिनोऽग्नेः श्वगृध्रयोः ॥ किमात्मनः किं सुहृदामिति यो नावसीयते ॥ १९ ॥ तस्मिन्कलेवरेऽमेध्ये तुच्छनिष्ठे विषज्जते ॥ अहो सुभद्रं सुनसं सुस्मितं च मुखं स्त्रियाः ॥ २० ॥ त्वङ्मांसरुधिरस्नायुमेदोमज्जास्थिसंहतौ ॥ विण्मूत्रपूये रमतां कृमीणां कियदन्तरम् ॥ २१ ॥ तथापि नोपसज्जेत स्त्रीषु स्त्रैणेषु चार्थवित् ॥ विषयेन्द्रियसंयोगान्मनः क्षुभ्यति नान्यथा ॥ २२ ॥ अदृष्टादश्रुताद्भावान्न भाव उपजायते । असम्प्रयुञ्जतः प्राणाञ्छाम्यति स्तिमितं मनः ॥ २३ ॥ तस्मात्सङ्गो न कर्तव्यः स्त्रीषु स्त्रैणेषु चेन्द्रियैः ॥ विदुषां चाप्यविश्रब्धः षड्वर्गः किमु मादृशाम् ॥ २४ ॥ श्रीभगवानुवाच ॥ एवं प्रगायन्नृपदेवदेवः स उर्वशीलोकमथो विहाय । आत्मानमात्मन्यवगम्य मां वै उपारमज्ज्ञानविधूतमोहः ॥ २५ ॥ ततो दुः

व धुहरूको ? यसरी जसको विषयमा केही निश्च हुन पाउन्न ॥ १९ ॥ यसरी अपवित्र र अन्त्यमा घृणित दशामा पुग्ने यो नाशवान् देहलाई पनि–'अहो ! यस रमणीको राम्रो मुख कस्तो उत्तम नाक र मनोहर हाँसोले युक्त छ ?'–यस्तो विचार गरेर मनुष्य त्यसमा आसक्त हुन्छ । यो कस्तो अद्भुत अज्ञान छ ? ॥२०॥ त्वचा, मांस, रुधिर, स्नायु, मेद, मज्जा तथा हाडका समूहरूपी यस देहमा आसक्त पुरुष र अपवित्र मल-मूत्रमा सुख मान्ने अनेकानेक कीराहरूमा के अन्तर छ ? ॥ २१ ॥ अतएव आफ्नू कल्याण खोज्ने ज्ञानी पुरुष, स्त्री र स्त्री लम्पटमा कहिल्यै आसक्त नहोउन्, किनकि विषय र इन्द्रियको संयोगले नै मनमा विकार उत्पन्न हुन्छ, यो कुनै अन्य कारणले होइन ॥ २२ ॥ जुन विषय देखे-सुनेको हुन्न, तिनको वासना पनि उठ्दैन । यसैले इन्द्रियको विषयसित संयोग हुन नदिने व्यक्तिको चित्त सदैव शिथिल, शान्त हुन्छ ॥ २३ ॥ अतः इन्द्रिय द्वारा पनि स्त्री र स्त्री लम्पटको सङ्ग कदापि नगरोस् । मन समेत पाँच इन्द्रियको विश्वास त विवेकी र बुद्धिमान् व्यक्ति कहिल्यै नगरून् । अनि म जस्तो कामान्ध र

अज्ञानीको त कुरै छैन ॥ २४ ॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! यसरी भन्दै राजाधिराज पुरूरवा उर्वशीलोक तत्काल छाडेर राज्यमा फर्केर आए र आफ्नू अन्तःकरणमा आत्मारूपले विराजमानस परमात्मालाई चिन्हेर आत्मज्ञान हुनाले मोहरहित भई शान्त हुनगए ॥ २५ ॥ अतः बुद्धिमान पुरुष कुसंग छाडेर सज्जनसित प्रेम बढाए । यसले ती सज्जन आफ्नू सदुपदेशले उनको मनको विषयासक्ति भिन्न-भिन्न पारिदिने छन् ॥ २६ ॥ सज्जन सर्वदा निष्काम ममा चित्त लगाउने, शान्त, समदर्शी, ममताशून्य, अहङ्काररहित, द्वन्द्वहीन र अकिञ्चन हुन्छन् ॥२७॥ हे उद्धव ! ती परम सौभाग्यशाली सन्तजनमा परस्पर नित्य मेरो कथा-वार्ता चलिरहन्छ, जो मनुष्यमात्रका लागि हितकारिणी छ र श्रवणादि द्वारा आफ्नू सेवन गर्नेहरूको सम्पूर्ण पाप नष्ट गरिदिन्छन् ।२८॥ जो व्यक्ति ममा मन लगाएर श्रद्धा तथा आदरपूर्वक मेरा पवित्र कथाहरू सुन्दै, भन्दै र अनुमोदन गर्दै रहन्छन्, ती मेरो अनन्य भक्ति पाउँछन् ॥ २९ ॥ म अनन्त-गुण सम्पन्न र आनन्दानुभवस्वरूप परब्रह्मको भक्ति पाउने साधु व्यक्तिलाई अरु के वस्तु

सङ्गमुत्सृज्य सत्सु सज्जेत बुद्धिमान् ॥ सन्त एतस्य छिन्दन्ति मनोव्यासङ्गमुक्तिभिः ॥२६॥ म तोऽनपेक्षा मच्चित्ताः प्रशान्ताः समदर्शिनः ॥ निर्ममा निरहङ्कारा निर्द्वन्द्वा निष्परिग्रहाः ॥२७॥ तेषु नित्यं महाभाग महाभागेषु मत्कथाः ॥ सम्भवन्ति हि ता नृणां जुषतां प्रपुनन्त्यघम् ॥२८॥तायेशृण्वन्ति गायन्ति ह्यनुमोदन्ति चादृताः ॥ मत्पराः श्रद्दधानाश्च भक्तिं विन्दन्ति ते मयि ॥ २९ ॥ भक्तिं लब्धवतः साधोः किमन्यदवशिष्यते ॥ मय्यनन्तगुणे ब्रह्मण्यानन्दानुभवात्मनि ॥३०॥ यथोपश्रयमाणस्य भगवन्तं विभावसुम् ॥ शीतं भयं तमोऽप्येति साधून्संसेवतस्तथा ॥ ३१ ॥ निमज्ज्योन्मज्जतां घोरे भवाब्धौ परमायनम् ॥ सन्तो ब्रह्मविदः शान्ता नौर्दृढेवाप्सु मज्जताम् ॥३२॥ अन्नं हि प्राणिनांप्राण आर्तानां शरणं त्वहम् ॥ धर्मो वित्तं नृणां प्रेत्य सन्तोऽर्वाग् बिभ्यतोऽरणम् ॥३३॥ सन्तो दिशन्ति चक्षूंषि बहिरर्कः समुत्थितः ॥ देवता बान्धवाः सन्तः सन्तआत्मानमेव च ॥३४॥ वैतसेनस्ततोऽप्येवमुर्वश्या लोकनिःस्पृहः ॥ मुक्तसङ्गो महीमेतामात्मारामश्चचार ह ॥३५॥इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे षड्विंशोऽध्यायः॥२६॥

उद्धव उवाच ॥ क्रियायोगं समाचक्ष्व भवदाराधनं प्रभो ॥ यस्मात्त्वां ये यथाऽर्चन्ति सात्वताः सात्वतर्षभ ॥ १ ॥ एतद्वदन्ति मुनयो

पाउन शेष रहन्छ ? ॥ ३० ॥ जस्तै भगवान अग्निदेवको आश्रय लिने पुरुषलाई शीत, भय र अन्धकार—यी तीनैको निवृत्ति भइजान्छ । त्यस्तै साधुजनको सेवा गर्नाले पाप, संसार-भय र अज्ञानादि रहन्नन् ।३१॥ यस घोर संसार-सागरमा डुब्ने-उत्रने व्यक्तिका निम्ति जलमा डुब्न लागेकालाई दृढ़ा डुङ्गा झैं ब्रह्मवेत्ता तथा शान्तचित्त साधुजन नै सर्वमन्दा ठूला सहायक छन् ॥ ३२ ॥ जस्तै—केवल अन्न नै देहधारीहरूको जीवन छ, जस्तै म नै दीन-दुःखीहरूको भर हुँ र जस्तै परलोकमा धर्म नै मनुष्यको धन छ, त्यस्तै संसारबाट भयभीत पुरुषकालागि एकमात्र सज्जन नै अवलम्बन हुन्छन् ॥३३॥ आकाशमा उदीयमान सूर्य मनुष्यलाई केवल बाह्य नेत्र ( प्रकाश ) दिन्छन्, बर सन्तजन ज्ञानरूपी आन्तरिक नेत्र दिन्छन् । अतएव सन्तजन देवता तथा बन्धु झैं हुन्छन्, ती सबैका आत्मा र साक्षात् मेरो स्वरूप नै हुन् ॥३४॥ हे उद्धव ! उसै बेला देखि उर्वशीलाई हेर्ने इच्छा त्यागेर सुद्युम्ननन्दन महाराज पुरूरवा अनासक्त र आत्माराम भएर भूतलमा डुल्नलागे ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादश स्कन्धे पं० गौरीशंकर कृत नेपाली भाषटीकायां षड्विंशोऽध्यायः ॥ २६ ॥

( कर्मयोगको विवेचन ) उद्धव भन्दछन्—हे सात्वतर्षभ ! हजुरका जो भक्तगण हजुरको जुन मूर्तिमा जसरी हजुरको आराधना गरुन्, ती आफ्ना आराधनास्वरूप कर्मयोग मसित भनुन् ॥ १ ॥ नारद, भगवान व्यासदेव तथा अङ्गिराका छोरा बृहस्पति आदि अनेक मुनि हजुरको यस कर्मयोगलाई नै मनुष्यको कल्याणको साधन भन्दै आएका छन् ॥ २ ॥ हजुरको मुखबाट निस्केको यो कर्मयोग पहिले ब्रह्माजीले आफ्ना पुत्र भृगुआदिलाई र भगवान् शङ्करले पार्वतीलाई बताएका थिए ॥३॥ हे मानद ! यो कर्मयोग सबै वर्ण र सबै आश्रमलाई मान्य छ र म यसलाई स्त्री तथा शूद्रादिको निम्ति पनि परम कल्याणकारी मान्दछु ॥ ४ ॥ हे कमलपत्राक्ष ! हे जगदीश्वरहरूका ईश्वर ! कर्मबन्धन छुटाउने श्रेष्ठ कर्म हजुर आफ्नू अनुरक्त भक्तमलाई भन्नुहवस् ॥५॥ भगवान् भन्नुहुन्छ—हे उद्धव ! यो अनन्तपार भएको कर्मकाण्डको कुनै अन्त्य छैन । अतएव पूर्वापर क्रमले म संक्षेपमा नै त्यसको वर्णन गर्दछु ॥ ६ ॥ मेरो पूजाको वैदिक, तान्त्रिक तथा मिश्र तीन विधि कहिएका छन् । यीमध्ये जुन आफ्नू अनुकूल पर्दछ, त्यसैले मेरो आराधना गर्नास् ॥ ७ ॥

मुहुर्निःश्रेयसं नृणाम् ॥ नारदो भगवान्व्यास आचार्योऽङ्गिरसः सुतः ॥ २ ॥ निःसृतं ते मुखाम्भोजाद्यदाह भगवानजः ॥ पुत्रेभ्यो भृगुमुख्येभ्यो देव्यै च भगवान्भवः ॥ ३ ॥ एतद्वै सर्ववर्णानामाश्रमाणां च सम्मतम् ॥ श्रेयसामुत्तमं मन्ये स्त्रीशूद्राणां च मानद ॥ ४ ॥ एतत्कमलपत्राक्ष कर्मबन्धविमोचनम् ॥ भक्ताय चानुरक्ताय ब्रूहि विश्वेश्वरेश्वर ॥ ५ ॥ श्रीभगवानुवाच । न ह्यन्तोऽनन्तपारस्य कर्मकाण्डस्य चोद्धव ॥ संक्षिप्तं वर्णयिष्यामि यथावदनुपूर्वशः ॥ ६ ॥ वैदिकस्तान्त्रिको मिश्र इति मे त्रिविधो मखः ॥ त्रयाणामीप्सितेनैव विधिना मां समर्चयेत् ॥ ७ ॥ यदा स्वनिगमेनोक्तं द्विजत्वं प्राप्य पूरुषः ॥ यथा यजेत मां भक्तया श्रद्धया तन्निबोध मे ॥ ८ ॥ अर्चायां स्थण्डिलेऽग्नौ वा सूर्ये वाऽप्सु हृदि द्विजे ॥ द्रव्येण भक्तियुक्तोऽर्चेत्स्वगुरुं माममायया ॥ ९ ॥ पूर्वं स्नानं प्रकुर्वीत धौतदन्तोऽङ्गशुद्धये ॥ उभयैरपि च स्नानं मन्त्रैर्मृद्ग्रहणादिना ॥ १० ॥ सन्ध्योपास्त्यादिकर्माणि वेदनाचोदितानि मे ॥ पूजां तैः कल्पयेत्सम्यक्सङ्कल्पः कर्मपावनीम् ॥ ११ ॥ शैली दारुमयी लौही लेप्या लेख्या च सैकती ॥ मनोमयी मणिमयी प्रतिमाऽष्टविधा स्मृता ॥ १२ ॥ चलाचलेति द्विविधा प्रतिष्ठा जीवमन्दिरम् ॥

शास्त्रोक्त विधि अनुसार यथा समय यज्ञोपवीत-संस्कारद्वारा द्विजत्व प्राप्त गरिसकेपछि कस्तो श्रद्धा-भक्तिले मेरो पूजा गर्नुपर्दछ, त्यो सुन ॥ ८ ॥ उपासक निष्कपट भावले प्रतिमा, चौतारा, अग्नि, सूर्य, जल, हृदय तथा ब्राह्मणमा भक्तिसहित यथोचित सामग्रीले आफ्नू गुरुस्वरूप मेरो पूजा गर्नास् ॥९॥ विहान दन्तधावनपछि शरीर शुद्धिकोलागि वैदिक र तान्त्रिक मन्त्र उच्चारण गर्दै मृत्तिकादि लगाएर स्नान गर्नास् ॥१०॥ वेदले सन्ध्योपासनादि कर्मको विधान गरेको छ । अतः सत्य सङ्कल्प पुरुष उसैद्वारा सबै कर्मलाई पवित्र पार्ने मेरो उपासना गर्नास् ॥११॥ मेरा प्रतिमाहरू आठ थरिका हुन्छन् । ढुङ्गा-ढुङ्गाको, काठको, फलाम, सुन, चाँदी आदि कुनै धातुको, चन्दनादि लेपको, चित्रित गरिएको फोटो, बालुकामयी र मणिमयी एवं मनोमयी ॥१२॥ विधिवत् प्राणप्रतिष्ठा गरेर स्थापित भगवान्को निवासस्थानरूपी प्रतिमा पनि चल र अचल दुई प्रकारको हुन्छ । हे उद्धव ! स्थिर प्रतिमाको पूजामा आवाहन अथवा विसर्जन गर्न आवश्यकता पर्दैन । अस्थिर प्रतिमामा आवाहन-विसर्जन गर्नास् वा नगर्नास्, तर बालुकामय प्रतिमामा आवाहन तथा

विसर्जन प्रतिदिन गर्नैपर्दछ। माटो, चन्दन र चित्रमयी प्रतिमालाई स्नान नगराएर केवल मार्जन गराउन् ॥१४॥ प्रसिद्ध र उत्तम पदार्थहरूले प्रतिमा आदिमा पूजा गरिन्छ, तर जो निष्काम भक्त छ, त्यो अनायास प्राप्त पदार्थ र भावनामात्रले पनि हृदयमा मेरो पूजा गरोस् ॥१५॥ हे उद्धव ! स्नान, वस्त्राभूषण आदि पाषाण अथवा धातुका प्रतिमा पूजनमा नै उपयोगी छन्, बालुकामयी वा माटोको मूर्तिमा पूजा गर्नु छ भने त्यसमा मन्त्रद्वारा अंग र त्यसका प्रधान देवताहरूको यथास्थान पूजा गर्नुपर्दछ। अग्निमा पूजा गर्नु छ भने घिउ मिसाएको हवन सामग्रीले आहुति दिनुपर्दछ ॥१६॥ सूर्यलाई प्रतीक मानेर गरिने पूजामा मुख्यतः अर्घ्यदान र उपस्थान प्रिय छ र जलमा तर्पणादिले मेरो उपासना गर्नु पर्दछ। जब मलाई कुनै भक्त श्रद्धाले जल मात्र चढाउँछ, तब म त्यो प्रेमले स्वीकार गर्दछु ॥ १७ ॥ यदि कुनै अभक्तले मलाई धेरै सामग्री निवेदन गरे पनि म त्यसले सन्तुष्ट हुन्न। जब म भक्तिले समर्पित जलले नै प्रसन्न हुन्छु भने गन्ध, पुष्प, धूप-दीप र नैवेद्यादि वस्तु समर्पणको कुरै छैन ॥ १८ ॥ उपासक पहिले पूजाको सामग्री जम्मा पारोस् र टुप्पा अगाडि पारेर

उद्वासावाहने न स्तः स्थिरायामुद्धवार्चने ॥ १३ ॥ अस्थिरायां विकल्पः स्यात् स्थण्डिले तु भवेद् द्वयम् ॥ स्नपनं त्वविलेप्यायामन्यत्र परिमार्जनम् ॥ १४ ॥ द्रव्यैः प्रसिद्धैर्मद्यागः प्रतिमादिष्वमायिनः ॥ भक्तस्य च यथालब्धैर्हृदि भावेन चैव हि ॥१५॥ स्नानालंकरणं प्रेष्ठमर्चायामेव तूद्धव ॥ स्थण्डिले तत्त्वविन्यासो वह्नावाज्यप्लुतं हविः ॥ १६ ॥ सूर्ये चाभ्यर्हणं प्रेष्ठं सलिले सलिलादिभिः ॥ श्रद्धयोपाहृतं प्रेष्ठं भक्तेन मम वार्यपि ॥१७॥ भूर्यप्यभक्तोदहृतं न मे तोषाय कल्पते ॥ गन्धो धूपः सुमनसो दीपोऽन्नाद्यं च किं पुनः ॥ १८ ॥ शुचि सम्भृतसम्भारः प्राग्दर्भैः कल्पितासनः ॥ आसीनः प्रागुदग् वार्चेदर्चायामथ सम्मुखः ॥ १९ ॥ कृतन्यासः कृतन्यासां मदर्चां पाणिनाऽऽमृजेत् ॥ कलशं प्रोक्षणीयं च यथावदुपसाधयेत् ॥२०॥ तदद्भिर्देवयजनं द्रव्याण्यात्मानमेव च ॥ प्रोक्ष्य पात्राणि त्रीण्यद्भिस्तैस्तैर्द्रव्यैश्च साधयेत् ॥ २१ ॥ पाद्यार्घ्याचमनीयार्थं त्रीणि पात्राणि दैशिकः ॥ हृदा शीर्ष्णाथ शिखया गायत्र्या चाभिमन्त्रयेत् ॥ २२ ॥ पिण्डे वाय्वग्निसंशुद्धे हृत्पद्मस्थां परां मम ॥ अण्वीं जीवकलां ध्यायेन्नादान्ते सिद्धभाविताम् ॥ २३ ॥ तयाऽऽत्मभूतया पिण्डे व्याप्ते सम्पूज्य तन्मयः ॥ आवाह्यार्चादिषु स्थाप्य न्यस्ताङ्गं मां प्रपूजयेत् ॥ २४ ॥ पाद्योपस्पर्शार्ह-

कुश बिछाओस्। अनि पूर्व वा उत्तरतिर फर्केर पवित्रताले त्यो कुशासनमा बसोस्। प्रतिमा अचल छ भने उसको सामुन्ने नै बस्नुपर्दछ। त्यसपछि पूजा थाल्नु पर्दछ ॥ १९ ॥ पहिले विधिपूर्वक अङ्गन्यास र करन्यास गरेर मूर्तिमा मन्त्रन्यास गरी प्रतिमामा पूर्वसमर्पित सामग्री हटाइदेओस्। अनि जलपूर्ण कलश र प्रोक्षणी पात्रादिको पूजा गन्ध-पुष्प आदिले गरोस्। प्रोक्षणीपात्रको जलले पूजा सामग्री र आफ्नू शरीरमा प्रोक्षण गरोस्। अनि पाद्य, अर्घ्य र आचमनको निम्ति तीन पात्रमा कलशको जल भरि पारेर राखोस् र त्यसमा पूजा पद्धति अनुसार सामग्री राखोस्। (पाद्यपात्रमा श्यामाक-धानको दाना, दूब, कमल, विष्णुकान्ता र चन्दन तुलसी आदि, अर्घ्यपात्रमा चन्दन, अक्षता, फूल, जौ, तिल, कुश, सरस्यू र दूबा तथा आचमन पात्रमा जाइफल, ल्वाङ आदि राख्नु।) अनि पूजा गर्ने व्यक्तिले तीनै पात्रलाई क्रमशः हृदयमन्त्र, शिरोमन्त्र र शिखामन्त्रले अभिमन्त्रित गरेर पछिबाट गायत्री मन्त्रले आमन्त्रित गरोस् ॥ २१ ॥ २२ ॥ त्यसपछि प्राणायाम द्वारा प्राणवायु र भावनाद्वारा शरीरस्थ अग्नि शुद्ध भएपछि हृदयकमलमा सूक्ष्म र श्रेष्ठ दीपशिखाको समान मेरो जीवकलाको

1364

ध्यान गरोस्। ठूला-ठूला सिद्ध ऋषि-मुनि ॐकारको, अकार, उकार, मकार, बिन्दु र नाद—यी पाँच कलाको अन्त्यमा उही जीवकलाका ध्यान गरून्॥ २३ ॥ त्यो जीवकला आत्मस्वरूपिणी छ। जब उसको तेजले अन्तःकरण र शरीर भरिन्छ तब मानसिक उपचारले मनमनै उसको पूजा गर्नुपर्दछ। अनि तन्मय भएर मेरो आवाहन गरी प्रतिमादिमा स्थापन गरोस्। फेरि मन्त्रद्वारा अङ्गन्यास गरेर त्यसैमा मेरो पूजा गरोस्॥ २४ ॥ हे उद्धव! मेरो आसनमा धर्मादि गुण र विमल शक्तिको उत्तम भावना अर्थात् आसनको चारैतिर धर्म, ज्ञान, वैराग्य र ऐश्वर्यरूप चार खुट्टा छन्, अधर्म, अज्ञान, अवैराग्य र अनैश्वर्य—यी चारैं दिशामा लट्ठी छन्, सत्त्व-रज-तम यी तीन काठका पीढा छन्, त्यसमा विमला, उत्कर्षिणी, ज्ञाना, क्रिया, योगा, प्रह्वी, सत्या, ईशाना र अनुग्रहा—यी नौ शक्तिहरू विराजमान छन्। त्यस आसनमा यौटा अष्टदल कमल छ, त्यसको कर्णिका अत्यन्त प्रकाशमान छ र पहेंला केशरको सौन्दर्य अनौठो छ। आसनको सम्बन्धमा यस्तो भावना गरेर पाद्य, अर्घ्य, आचमनीय आदि उपचार प्रस्तुत

णादीनुपचारान् प्रकल्पयेत् ॥ धर्मादिभिश्च नवभिः कल्पयित्वाऽऽसनं मम ॥ २५ ॥ पद्ममष्टदलं तत्र कर्णिकाकेसरोज्ज्वलम् ॥ उभाभ्यां वेदतन्त्राभ्यां मह्यं तूभयसिद्धये ॥ २६ ॥ सुदर्शनं पाञ्चजन्यं गदासीषु धनुर्हलान् ॥ मुसलं कौस्तुभं मालां श्रीवत्सं चानुपूजयेत् ॥ २७ ॥ नन्दं सुनन्दं गरुडं प्रचण्डं चण्डमेव च ॥ महाबलं बलं चैव कुमुदं कुमुदेक्षणम् ॥ २८ ॥ दुर्गां विनायकं व्यासं विष्वक्सेनं गुरून् सुरान् ॥ स्वे स्वे स्थाने त्वभिमुखान् पूजयेत् प्रोक्षणादिभिः ॥ २९ ॥ चन्दनोशीरकर्पूरकुङ्कुमागुरुवासितैः ॥ सलिलैः स्नापयेन्मन्त्रैर्नित्यदा विभवे सति ॥ ३० ॥ स्वर्णघर्मानुवाकेन महापुरुषविद्यया । पौरुषेणापि सूक्तेन सामभी राजनादिभिः ॥ ३१ ॥ वस्त्रोपवीताभरणपत्रस्रग्गन्धलेपनैः । अलंकुर्वीत सप्रेम मद्भक्तो मां यथोचितम् ॥ ३२ ॥ पाद्यमाचमनीयं च गन्धं सुमनसोऽक्षतान् ॥ धूपदीपोपहार्याणि दद्यान्मे श्रद्धयार्चकः ॥ ३३ ॥ गुडपायससर्पींषि शष्कुल्यापूपमोदकान् ॥ संयावदधिसूपांश्च नैवेद्यं सति कल्पयेत् ॥ ३४ ॥ अभ्यङ्गोन्मर्दनादर्शदन्तधावाभिषेचनम् ॥ अन्नाद्यगीतनृत्यादि पर्वणि स्युरुतान्वहम् ॥ ३५ ॥

गरोस्। अनि भोग र मोक्षको सिद्धिका लागि वैदिक र तान्त्रिक विधिले मेरो पूजा गरोस्॥ २५ ॥ २६ ॥ सुदर्शन चक्र, पांचजन्य शङ्ख, कौमोदकी गदा, खड्ग, बाण, धनुष, हलो र मुसल—यी आठ आयुधको पूजा आठ दिशामा गरोस् र कौस्तुभमणि, वैजयन्तीमाला र श्रीवत्सचिह्नको वक्षस्थलमा यथास्थान पूजा गरोस्॥ २७ ॥ नन्द, सुनन्द, प्रचण्ड, चण्ड, महाबल, बल, कुमुद र कुमुदेक्षण—यी आठ पार्षदको आठ दिशाहरूमा, गरुडको सामुन्ने, दुर्गा, विनायक, व्यास र विष्वक्सेनको चार कुनामा स्थापन-पूजन गरोस्। बायाँतिर गुरुको र यथाक्रम पूर्वादि दिशाहरूमा इन्द्रादि आठ लोकपालहरूको स्थापना गरेर प्रोक्षण, अर्घ्यदानादि क्रमले पूजा गर्नुपर्दछ ॥ २८ ॥ २९ ॥ हे प्रिय उद्धव! यदि सामर्थ्य छ भने दिनहुँ—चन्दन, खस, कपूर, केसरादि सुगन्धित वस्तु द्वारा सुवासित जलले मलाई स्नान गराउन् र त्यस बेला 'सुवर्णं घर्मं' इत्यादि स्वर्णघर्मानुवाक 'जितंते पुण्डरीकाक्ष' इत्यादि महापुरुष विद्या, 'सहस्रशीर्षा पुरुष सहस्राक्षः सहस्रः आदि पुरुषसूक्त र 'इन्द्रं नरो नेमधिता हवन्त' इत्यादि मन्त्रको राजनादि सामगायन पाठ पनि गर्दै रहनुपर्दछ ॥ ३० ॥ ३१ । मेरा भक्त वस्त्र, जनै, आभूषण, पत्र, माला, गन्धादिले प्रेमपूर्वक मेरो शृङ्गार गरून्॥ ३२ ॥ उपासक श्रद्धापूर्वक मलाई पाद्य,

1365

आचमन, चन्दन, फूल, अक्षता, धूप-दीपादि समर्पित गरून् ॥३३॥ शक्ति भए शक्खर, पायस, घिउ, पूरी, मिष्टान्न, दही र दाल आदि व्यञ्जन नैवेद्य लगाउन् ॥३४॥ भगवानका विग्रहलाई दन्तधावन गराउन्, कुकुवा पासिदिन्, पञ्चामृतले स्नान गराउन्, सुगन्धित पदार्थको लेप लगाइदिन्। ऐना देखाई भोग लगाएर शक्ति छ भने प्रतिदिन अथवा पर्वका दिन नाच-गाना आदिको पनि प्रबन्ध गरून् ॥ ३५ ॥ हे उद्धव ! पूजापछि शास्त्रोक्त विधिले बनाएको कुण्डमा अग्नि स्थापना गरून्। त्यो कुण्ड मेखला, गर्त र वेदीले शोभायमान हुनुपर्छ। त्यसमा हातले हम्केर अग्नि प्रज्वलित पारी त्यसको परिसमूहन अर्थात् एकत्र पारून् ॥ ३६ ॥ वेदीको चारैतिर कुश काण्डिका अर्थात् चारैतिर बीस-बीस कुश बिछाई त्यसमा मन्त्र पढ्दै जल छर्कोस्। त्यसपछि विधिपूर्वक समिधाहरूको आधानरूप अन्वाधान कर्म गरी अग्निको उत्तर भागमा होमोपयोगी सामग्री राखेर प्रोक्षणीको जलले प्रोक्षण गरेपछि मेरो यसरी ध्यान गरोस् ॥३७॥ मेरो मूर्ति तताएको सुन झैं बल्दो छ। रौं-रौंबाट शान्तिको वर्षा भइरहेछ। लामा र विशाल चार भुजाहरू

विधिना विहिते कुण्डे मेखलागर्तवेदिभिः ॥ अग्निमाधाय परितः समूहेत् पाणिनोदितम् ॥ ३६ ॥ परिस्तीर्याथ पर्युक्षेदन्वाधाय यथाविधि ॥ प्रोक्षण्याऽऽसाद्य द्रव्याणि प्रोक्ष्याग्नौ भावयेत माम् ॥ तप्तजाम्बूनदप्रख्यं शङ्खचक्रगदाम्बुजैः ॥ लसच्चतुर्भुजं शान्तं पद्मकिञ्जल्कवाससम् ॥ ३८ ॥ स्फुरत्किरीटकटककटिसूत्रवराङ्गदम् ॥ श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभं वनमालिनम् ॥ ३९ ॥ ध्यायन्नभ्यर्च्य दारूणि हविषाभिघृतानि च ॥ प्रास्याज्यभागावाघारौ दत्त्वा चाज्यप्लुतं हविः ॥ ४० ॥ जुहुयान्मूलमन्त्रेण षोडशर्चावदानतः ॥ धर्मादिभ्यो यथान्यायं मन्त्रैः स्विष्टकृतं बुधः ॥ ४१ ॥ अभ्यर्च्याथ नमस्कृत्य पार्षदेभ्यो बलिं हरेत् ॥ मूलमन्त्रं जपेद् ब्रह्म स्मरन्नारायणात्मकम् ॥ ४२ ॥ दत्त्वाऽऽचमनमुच्छेषं विष्वक्सेनाय कल्पयेत् ॥ मुखवासं सुरभिमत् ताम्बूलाद्यमथार्हयेत् ॥४३॥ उपगायन् गृणन् नृत्यन् कर्माण्यभिनयन् मम ॥ मत्कथाः श्रावयञ्छृण्वन् मुहूर्तं क्षणिको भवेत् ॥४४॥ स्तवैरुच्चावचैः स्तोत्रैः पौराणैः प्राकृतैरपि ॥ स्तुत्वा प्रसीद भगवन्निति वन्देत दण्डवत् ॥ ४५ ॥ शिरो मत्पादयोः कृत्वा बाहुभ्यां च परस्परम् ॥ प्रपन्नं पाहि मामीश भीतं मृत्युग्रहार्णवात् ॥४६॥ इति शेषां मया दत्तां शिरस्याधाय सादरम् ॥ उद्वासयेच्चेदुद्वास्यं ज्योतिर्ज्योतिषि तत् पुनः ॥४७॥

शोभायमान छन्, तिनमा शङ्ख, चक्र, गदा, पद्म शोभित छन्। कमलको केशर झैं पहेंलो वस्त्र छ ॥३८॥ सिरमा मुकुट, नारीमा कङ्कन, कम्मरमा करधनी, पाखुरामा बाजूबन्द झलिक रहेको छ। वक्षस्थलमा श्रीवत्सको चिह्न छ, घाँटीमा कौस्तुभ मणि जगमगाइरहेको छ। घुँडासम्म वनमाला झुण्डिएको छ ॥ ३९ ॥ अग्निमा मेरो यस मूर्तिको ध्यान गरेर पूजा गर्नु पर्दछ। अनि सुकेका समिधा घिउमा चोपेर आहुति दिनु र आज्यभाग-आधार नामका दुइ-दुइ आहुति अरु दिनु। अनि अन्य हवन-सामग्रीले आहुति दिनु ॥४०॥ त्यसपछि आफ्नू इष्टमन्त्रले वा 'ॐनमो नारायणाय' यस यो अष्टाक्षर मन्त्र अथवा पुरुषसूक्तका सोह्रमन्त्रले हवन गरेपछि धर्मादि देवताहरूलाई पनि विधिपूर्वक मन्त्रले हवन गरी स्विष्टकृत आहुति दिनु॥४१॥ यसरी अग्निमा अन्तर्यामीरूपले स्थित भगवान्को पूजा गरेर नमस्कार गरोस्, नन्द-सुनन्दादि पार्षदलाई आठ दिशामा हवनकर्माङ्ग बलि देओस्। अनि प्रतिमाको सम्मुख बसेर परब्रह्मस्वरूप नारायण भगवान्को जप गरोस् ॥४२॥ अनि भगवान्लाई आचमन गराई उनको प्रसाद विष्वक्सेनलाई निवेदन गरेर आफ्ना इष्टदेवको सेवामा अत्तर, पान आदि मुखवास

टकाओस् र पुष्पाञ्जलि चढाओस् ॥ ४३ ॥ मेरा लीलाहरूको गान र वर्णन तथा अभिनय गरोस्। यी सबै गर्दा प्रेमोन्मत्त भएर नाच्न थालोस्। मेरा लीला-कथाहरू स्वयं सुन्नु र अरूलाई सुनाउनु। केही बेरको निम्ति संसार र त्यसका सबै प्रपञ्च बिर्सेर ममा नै तन्मय होओस् ॥४४॥ प्राची ऋषि-मुनिद्वारा वा प्राकृत भक्तगणद्वारा बनाएका साना ठूला स्तव र स्तोत्रले मेरो स्तुति-प्रार्थना गरोस्—हे भगवन्! हजुर ममाथि प्रसन्न हुनोस्। मलाई आफ्नू कृपा प्रसादले निर्धक्क तुल्याउनोस्। अनि दण्डवत्-प्रणाम गर्नु। आफ्नू शिर मेरा चरणमा राखेर दुवै हातले—दाहिने बायाँ र बाँयाले दाहिने चरण समातेर भन्नु—हे भगवन्! यो संसार सागरमा म डुबिरहेको छु। मृत्युरूप ग्राह मलाई लखेटिरहेको छ। म डराई हजुरको शरणमा आएरो छु। प्रभो! मेरो रक्षा गर्नुहवस् ॥४६॥ यस प्रकार स्तुति गरेर मलाई चढाएका मालाहरू आफ्नू शिरमा राख्दा मैले दिएको प्रसाद ठानोस्। यदि विर्सजन गर्नु छ भने यस्तो भावना गर्नुपर्दछ—प्रतिमाबाट यौटा दिव्य ज्योति निस्केको छ र त्यो मेरो हृदयस्थ ज्योतिमा लीन भएको छ; यही विसर्जन हो ॥ ४७ ॥ हे उद्धव! प्रतिमादिमा जब जहाँ श्रद्धा छ, त्यहीं मेरो पूजा गर्नुपर्दछ, किनकि म सर्वात्मा हुँ र समस्त प्राणीमा र आफ्नू हृदयमा पनि स्थित छु ॥४८॥ जो मनुष्य यसरी वैदिक तान्त्रिक

अर्चादिषु यदा यत्र श्रद्धा मां तत्र चार्चयेत् ॥ सर्वभूतेष्वात्मनि च सर्वात्माहमवस्थितः ॥ ४८ ॥ एवं क्रियायोगपथैः पुमान् वैदिकतान्त्रिकैः ॥ अर्चन्नुभयतः सिद्धिं मत्तो विन्दत्यभीप्सिताम्॥४९॥मदर्चां सम्प्रतिष्ठाप्य मन्दिरं कारयेद् दृढम् ॥ पुष्पोद्यानानि रम्याणि पूजायात्रोत्सवाश्रितान् ॥५०॥ पूजादीनां प्रवाहार्थं महापर्वस्वथान्वहम् ॥ क्षेत्रापणपुरग्रामान् दत्त्वा मत्सार्ष्टितामियात् ॥ ५१ ॥ प्रतिष्ठया सार्वभौमं सद्मना भुवनत्रयम् ॥ पूजादिना ब्रह्मलोकं त्रिभिर्मत्साम्यतामियात् ॥ ५२ ॥ मामेव नैरपेक्ष्येण भक्तियोगेन विन्दति ॥ भक्तियोगं स लभते एवं यः पूजयेत माम् ॥ ५३ ॥ यः स्वदत्तां परैर्दत्तां हरेत सुरविप्रयोः ॥ वृत्तिं स जायते विड्भुग् वर्षाणामयुतायुतम् ॥ ५४ ॥ कर्तुश्च सारथेर्हेतोरनुमोदितुरेव च ॥ कर्मणां भागिनः प्रेत्य भूयो भूयसि तत् फलम् ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे सप्तविंशोऽध्यायः ॥ २७ ॥

श्रीभगवानुवाच ॥ परस्वभावकर्माणि न प्रशंसेन्न गर्हयेत् ॥ विश्वमेकात्मकं पश्यन् प्रकृत्या पुरुषेण च॥१॥ परस्वभावकर्माणि यः प्रशंसति निन्दति ॥

क्रियायोग द्वारा मेरो पूजा गर्दछ, त्यो यस लोक र परलोकमा मसित उभीष्ट सिद्धि प्राप्त गर्दछ। यदि शक्ति छ भने उपासक राम्रो मन्दिर बनाउन लगाओस् र त्यसमा मेरो प्रतिमा थापोस्। राम्रा-राम्रा फूलको बगैंचा लगाओस्, नित्य-पूजा, पर्वको यात्रा र ठूला-ठूला उत्सवको व्यवस्था गरिदेओस् ॥५०॥ जो मनुष्य पर्व र प्रतिदिनको पूजाका लागि जमीन, बजार, नगर वा गाउँ मेरा नाममा समर्पित गरिदिन्छ, तिनलाई मेरै समान ऐश्वर्य प्राप्त हुन्छ ॥५१॥ मेरो मूर्तिको प्रतिष्ठा गर्नाले पृथ्वीको एकछत्र राज्य, मन्दिर निर्माणले त्रैलोक्यको राज्य, पूजाको व्यवस्था गर्नाले ब्रह्मलोक प्राप्त हुन्छ ॥५२॥ निष्कामभावले पूजा गर्दा मलाई नै प्राप्त गर्दछ। जो आफूले दिएको वा अरूले दिएको देवता र ब्राह्मणको जीविका हरण गर्दछ, त्यो करोडौं वर्षसम्म विष्ठाको कीरा हुन्छ ॥५३॥५४॥ जो व्यक्तिको यस्ता काममा जति हात छ भने फल पनि उति नै पाउँछन् ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपालीभाषायां सप्तविंशोऽध्यायः ॥२७॥

(परमार्थ निरूपण)—श्री कृष्ण भन्नुहुन्छ—हे उद्धव! यद्यपि व्यवहारमा पुरुष र प्रकृति—द्रष्टा र दृश्यको भेदले दुइ थरिका देखिन्छन् तापनि परमार्थ दृष्टिले हेर्दा यो सबै

एक अधिष्ठानस्वरूप छ, यस्तैनिम्ति कसैको शान्त, घोर र मूढ स्वभाव वा कर्मको निन्दा-स्तुति नगर्नु, सधैं अद्वैत दृष्टि राख्नू ॥१॥ जो अर्काको प्रशंसा वा निन्दा गर्दछन्, ती आफ्नू परमार्थ साधनबाट च्युत हुन्छन् किनकि साधन अभिनिवेशको निषेध गर्दछ र निन्दा, प्रशंसा बलियो पार्दछन् ॥२॥ हे उद्धव ! सबै इन्द्रिय राजस-अहङ्कारका कार्य हुन्। ती निदाए पछि शरीरको अभिमानी जीव चेतना शून्य हुन्छ, त्यस बेला मन जागियो भने सपनाको झूठो दृश्यमा अलमलिन्छ र त्यो पनि लीन भयो भने जीव मृत्यु झैं गहिरो निद्रा–सुषुप्तिमा लीन हुन्छ। त्यस्तै जब जीव आफ्नू अद्वितीय स्वरूप बिर्सेर अनेक वस्तुको दर्शन गर्न थाल्दछ, अनि त्यो स्वप्न झैं झूठो दृश्यमा अल्झिन्छ वा मृत्यु अज्ञानमा लीन हुन्छ ॥३॥ हे उद्धव ! जब द्वैत नामको कुनै वस्तु नै छैन, अनि त्यसमा यो जाति, यो नजाति–यो प्रश्न नै आउन्न। विश्वका सबै वस्तुवाणीले भन सकिन्छ, मनले चिताउन सकिन्छ, दृश्य र अनित्य हुनाले त्यसको मिथ्यात्व स्पष्ट छ ॥४॥ छाया प्रतिध्वनि र सीपी आदिमा चाँदीको आभास सर्वथा मिथ्या छ, तर ती द्वारा मनुष्यको मनमा भय-कम्पादिको संचार हुन्छ, त्यस्तै देहादि सबै वस्तु मिथ्या छन् तर जबसम्म ज्ञानद्वारा तिनको असत्यताको बोध हुँदैन, तबसम्म अज्ञानीलाई भयभीत पार्दै रहन्छ ॥५॥ जो प्रत्यक्ष र परोक्ष वस्तुछ, त्यो आत्मा नै हो। जो विश्वसृष्टि प्रतीत

स आशु भ्रश्यते स्वार्थादसत्यभिनिवेशतः ॥२॥ तैजसे निद्रयाऽऽपन्ने पिण्डस्थो नष्टचेतनः ॥ मायां प्राप्नोति मृत्युं वा तद्वन्नानार्थदृक्पुमान् ॥३॥ किं भद्रं किमभद्रं वा द्वैतस्यावस्तुनः कियत् ॥ वाचोदितं तदनृतं मनसा ध्यातमेव च ॥ ४ ॥ छायाप्रत्याह्वयाभासा ह्यसन्तोऽप्यर्थकारिणः ॥ एवं देहादयो भावा यच्छन्त्यामृत्युतो भयम् ॥ ५ ॥ आत्मैव तदिदं विश्वं सृज्यते सृजति प्रभुः ॥ त्रायते त्राति विश्वात्मा ह्रियते हरतीश्वरः ॥ ६ ॥ तस्मान्नह्यात्मनोऽन्यस्मादन्यो भावो निरूपितः ॥ निरूपितेयं त्रिविधा निर्मूला भातिरात्मनि ॥ इदं गुणमयं विद्धि त्रिविधं मायया कृतम् ॥ ७ ॥ एतद् विद्वान् मदुदितं ज्ञानविज्ञाननैपुणम् ॥ न निन्दति न च स्तौति लोके चरति सूर्यवत् ॥ ८ ॥ प्रत्यक्षेणानुमानेन निगमेनात्मसंविदा ॥ आद्यन्तवदसज्ज्ञात्वा निस्संगो विचरेदिह ॥ ९ ॥ उद्धव उवाच ॥ नैवात्मनो न देहस्य संसृतिर्द्रष्टृदृश्ययोः ॥ अनात्मस्वदृशोरीश कस्य स्यादुपलभ्यते ॥ १० ॥ आत्माव्ययोऽगुणः शुद्धः स्वयंज्योतिरनावृतः ॥ अग्निवद्दारुवदचिद्देहः कस्येह संसृतिः ॥११॥ श्रीभगवानुवाच ॥ यावद् देहेन्द्रियप्राणैरात्मनः

भइरहेछ, त्यसको निमित्त त्यो हो नै, उपादान पनि हो अर्थात् उही विश्व बन्दछ र बनाउंछ, उही रक्षक र रक्षित पनि हो। परमात्मा यसको संहार गर्छन् र जसको संहार हुन्छ, त्यो पनि उनै हुन् ॥ ६ ॥ व्यवहार दृष्टिले हेर्दा आत्मा विश्वदेखि भिन्नछ, तर आत्मदृष्टिले उबाहेक अरू वस्तुछैन। त्योबाहेक जे प्रतीत भइरहेको छ, त्यसको निर्वचन गर्न सकिन्न र अनिर्वचनीय त केवल आत्मस्वरूप नै छ। यसै निम्ति आत्मामा सृष्टि-स्थिति-संहार अथवा अध्यात्म, अधिदैव र अधिभूत—यी तीन-तीन थरिका प्रतीतिहरू सर्वथा निर्मूल नै छन्। नभए पनि भए जस्तै छन्। यो सत्व, रज र तमले गर्दा प्रतीत हुने द्रष्टा, दर्शन, दृश्य आदिको त्रिविधता मायाको खेल हो ॥ ७ ॥ हे उद्धव ! तिमीसित मैले यो ज्ञान र विज्ञानको उत्तम स्थिति वर्णन गरें। जुन व्यक्ति मेरो यो बचनको रहस्य जान्दछ, त्यो न कसैको प्रशंसा गर्छ न निन्दा। त्यो संसारमा सूर्य झैं स्वभावले डुलिरहन्छ ॥ ८ ॥ प्रत्यक्ष, अनुमान शास्त्र र आत्मानुभूति आदि प्रमाणहरूले यो सिद्ध छ कि यो संसार उत्पत्ति-विनाशशील हुनाले अनित्य छ। यो कुरा जानेर जगत्मा असंगभावले डुल्नुपर्दछ ॥९॥

उद्धवले सोधे—भगवन् ! आत्मा द्रष्टा र देह दृश्य छ । आत्मा स्वयंप्रकाश र देह जड ! यस्तो स्थितिमा जन्ममृत्युरूप संसार न देहलाई हुन सक्छ, न आत्मालाई तर यसको हुनु पनि प्रत्यक्ष उपलब्ध छ । अनि यो कसलाई हुन्छ ? ॥ १० ॥ आत्मा त अविनाशी, प्राकृत-अप्राकृत गुणहरूले रहित, शुद्ध, स्वयं प्रकाश र सबै प्रकारका आवरणले रहित छ, तथा शरीर सगुण, प्रकाश्य र आवृत छ । आत्मा अग्नि झैं प्रकाशमान छ भने शरीर काठ झैं अचेतन । अनि यो जन्ममृत्युरूप संसार छ कसलाई ? ॥ ११ ॥ श्रीकृष्ण भगवान् आज्ञा हुन्छ—हे उद्धव ! वस्तुतः संसारको अस्तित्व छैन, तापनि जबसम्म देह, इन्द्रिय र प्राणासित आत्माको सम्बन्ध भ्रान्ति छ, तबसम्म अविवेकी पुरुषलाई यो सत्य झैं स्फुरित हुन्छ ॥ १२ ॥ जस्तै स्वप्नमा अनेक प्रकारका विपत्ति आइपर्दछन् तर वास्तवमा ती हुँदैनन् तापनि स्वप्न हराएपछि पनि त्यसको अस्तित्व रहिरहन्छ, त्यस्तै संसार छैन भन्ने भए पनि जो त्यसमा प्रतीत हुने विषयको चिन्तन रहन्छन्, तिनको जन्म-मरणरूपी संसारबाट निवृत्ति हुन सक्तैन ॥ १३ ॥ जब मानिस स्वप्न देखिरहन्छ, तब निद्रा भङ्ग हुनु भन्दा पहिले उसलाई ठूल-ठूला विपत्तिसित जुध्नु पर्दछ तर जब बिउँझन्छ, तब न स्वप्नका विपत्ति रहन्छन्, न तिनको कारण हुने मोहको विकार ॥ १४ ॥ हे उद्धव !

मंतिकर्षणम् ॥ संसारः फलवास्तावदपार्थोऽप्यविवेकिनः ॥ १२ ॥ अर्थे ह्यविद्यमानेऽपिसंसृतिर्न निवर्तते ॥ ध्यायतो विषयानस्य स्वप्नेऽनर्थागमो यथा ॥ १३ ॥ यथा ह्यप्रतिबुद्धस्य प्रस्वापो बह्वनर्थभृत् ॥ स एव प्रतिबुद्धस्य न वै मोहाय कल्पते ॥ १४ ॥ शोकहर्षभयक्रोधलोभमोहस्पृहादयः ॥ अहंकारस्य दृश्यन्ते जन्म मृत्युश्च नात्मनः ॥ १५ ॥ देहेन्द्रियप्राणमनोऽभिमानो जीवोऽन्तरात्मा गुणकर्ममूर्तिः ॥ सूत्रं महानित्युरुधेव गीतः संसार आधावति कालतन्त्रः ॥ १६ ॥ अमूलमेतद् बहुरूपपितं मनोवचःप्राणशरीरकर्म ॥ ज्ञानासिनोपासनया शितेनच्छित्त्वा मुनिर्गां विचरत्यतृष्णः ॥ १७ ॥ ज्ञानं विवेको निगमस्तपश्च प्रत्यक्षमैतिह्यमथानुमानम् ॥ आद्यन्तयोरस्य यदेव केवलं कालश्च हेतुश्च तदेव मध्ये ॥ १८ ॥

अहङ्कार नै शोक, हर्ष, भय, क्रोध, लोभ, मोह, स्पृहा र जन्म-मृत्युको शिकार बन्दछ । आत्मासित इनको कुनै सम्बन्ध रहन्न ॥१५॥ हे उद्धव ! देह, इन्द्रिय, प्राण र मनमा स्थित आत्मा नै जब तिनको अभिमान गर्दछ— उनलाई आफ्नू स्वरूप मानिलिन्छ—तब त्यसको नाम 'जीव' हुन्छ । त्यो सूक्ष्मातिसूक्ष्म आत्माको मूर्ति हो—गुण र कर्मले बनेको लिङ्गशरीर उसैलाई कहीं सूत्रात्मा र कतै महत्तत्त्व भन्दछन् । त्यही कालरूप परमेश्वरको अधीन भएर संसारमा यता-उता भौंतारिन्छ ॥१६॥ वास्तवमा मन, वाणी, प्राण र शरीर अहङ्कार-का नै कार्य हुन् । यो निर्मूल भए पनि देवता, मनुष्य आदि अनेक रूपमा यसको प्रतीति हुन्छ । मननशील व्यक्ति उपासनाको शानमा चढेर तरवारलाई तिखो बनाउँछ र उसै द्वारा–अहङ्कारको मूलोच्छेदन गरेर पृथ्वीमा निर्द्वन्द्व डुल्दछ । अनि उसमा कुनै आशा, तृष्णा रहन्न ॥ १७ ॥ आत्मा र अनात्माको स्वरूपलाई भिन्न-भिन्न प्रकारले बुझ्नु नै ज्ञान हो, विवेक हुनासाथ द्वैतको अस्तित्व मेटिन्छ । त्यसको साधन हो तपस्याद्वारा हृदय मारेर वेदादि शास्त्रहरूको श्रवण गर्नु । यीबाहेक श्रवणानुकूल युक्तिहरू, महापुरुषका उपदेश र यी दुवैबाट भिन्न अविरुद्ध स्वानुभूति पनि प्रमाण हुन्छन् । सबैको सार यही निस्कन्छ कि यस संसारमा आदिमा जो थियो तथा अन्त्यमा जो रहन्छ, जो यसको मूल

1369

कारण र प्रकाशक छ, त्यही अद्वितीय, उपाधि शून्य परमात्मा बीचमा पनि छ। त्यो बाहेक अरु केही पनि छैन ॥ १८ ॥ हे उद्धव ! सुनले कंगन, कुण्डल आदि अनेक गहना बन्दछन्, तर जब ती गहना बनेका थिएनन्, त्यस बेला पनि सुन नै थियो पछि पनि सुन नै रहन्छन्। ठीक त्यसै गरी यस जगत्‌को आदि, मध्य र अन्त्य मलाई नै जान। वास्तवमा म नै सत्य तत्त्व हुँ ॥ १९ ॥ हे भाई उद्धव ! मनका तीन अवस्था हुन्छन्–जाग्रत, स्वप्न र सुषुप्ति यी। अवस्थाका कारण तीन गुण नै हुन्–सत्व, रज र तम। जगत्‌का तीन भेद छन्–अध्यात्म ( इन्द्रियहरू ), अधिभूत ( पृथिव्यादि ) र अधिदैव ( कर्ता )। यी सबै त्रिविधताहरू जसको सत्ताले सत्य समान प्रतीत हुन्छन् र निर्विघ्न समाधि आदिमा यो त्रिविधता नरहे पनि जसको सत्ता विद्यमान रहन्छ, त्यो तुरीयतत्त्व–यी तीनै थरिभन्दा भिन्नै र यिनीहरूमा अनुगत चौथो ब्रह्मतत्त्व–नै सत्य छ ॥ २० ॥ जुन उत्पत्ति भन्दा पहिले थिएन र प्रलयको पश्चात् पनि रहने छैन–यस्तो मनमा ठान्नुपर्दछ–माझमा पनि त्यो छैन, केवल कल्पना मात्र, नाममात्रनै हो। यो निश्चित सत्य छ कि जुन पदार्थ जोसित बन्दछ र

यथा हिरण्यं स्वकृतं पुरस्तात् पश्चाच्च सर्वस्य हिरण्मयस्य ॥ तदेव मध्ये व्यवहार्यमाणं नानापदेशैरहमस्य तद्वत् ॥ १९ ॥ विज्ञानमेतत्त्रियवायमङ्ग· गुणत्रयं कारणकार्यकर्तृ ॥ समन्वयेन व्यतिरेकतश्च येनैव तुर्येण तदेव सत्यम्॥२०॥न यत् पुरस्तादुत यन्न पश्चान्मध्ये च तन्न व्यपदेशमात्रम् ॥ भूतंप्रसिद्धं च परेण यद् यत् तदेव तत् स्यादिति मे मनीषा ॥२१॥ अविद्यमानोऽप्यवभाषते यो वैकारिको राजससर्ग एषः ॥ ब्रह्म स्वयंज्योतिरतो विभाति ब्रह्मे· न्द्रियार्थात्मविकारचित्रम् ॥२२॥ एवं स्फुटं ब्रह्मविवेकहेतुभिः परापवादेन विशारदेन ॥ छित्त्वाऽऽत्मसंदेहमुपारमेत स्वानन्दतुष्टोऽखिलकामुकेभ्यः॥२३॥ नात्मा वपुः पार्थिवमिन्द्रियाणि देवा ह्यसुर्वायुजलं हुताशः ॥ मनोऽन्नमात्रं धिषणा च सत्वमहंकृतिःखं क्षितिरर्थसाम्यम् ॥२४॥ समाहितैःकरकर्णैर्गुणात्म

जसद्वारा प्रकाशित हुन्छ, त्यही उसको वास्तविक स्वरूप हो, त्यही उसको परमार्थ सत्ता हो–यस्तो मेरो दृढ निश्चय छ ॥ २१ ॥ यो जुन विकारमयी राजस सृष्टि छ, यो नभएर पनि स्पष्ट देखिइरहेको छ। यो स्वयं प्रकाश ब्रह्म नै हो। यसै निम्ति इन्द्रियहरू, मन, विषय र पञ्चभूतादि जति-विचित्र नामरूप छन्, तिनको रूपमा ब्रह्मनै प्रतित भइरहेको छ ॥ २२ ॥ हे उद्धव ! ब्रह्म-विचारका साधन हुन्–श्रवण, मनन, निदिध्यासन र स्वानुभूति। तिनमा मद्दत दिने सहायक हुन्–आत्मज्ञानी गुरुदेव ! इनै द्वारा विचार गरेर स्पष्टरूपले देहादि अनात्म पदार्थहरूको निषेध गरिदिनुपर्दछ। यस प्रकार निषेधद्वारा आत्मविषयक सन्देहहरूलाई छिन्न-भिन्न गरेर आफ्नु आनन्द स्वरूप आत्मामा नै मग्न हुनु र सबै प्रकारका विषय-वासनाहरूबाट रहित होओस् ॥ २३ ॥ निषेध गर्ने प्रक्रिया यो हो कि—पृथ्वीको विकार हुनाले शरीर आत्मा होइन। इन्द्रिय, तिनका अधिष्ठातृ देवता, प्राण, वायु, अग्नि, जल एवं मन पनि आत्मा होइन, किनकि इनको धारण-पोषण शरीर जस्तै अनेक थरिका अन्नद्वारा हुन्छ। अतएव बुद्धि, चित्त, अहङ्कार, आकाश, पृथ्वी, शब्दादि विषय रसमा मस्त र गुणहरूको साम्यावस्था प्रकृतिलाई पनि आत्मा हो भनेर तोकेर भन्न सकिन्न, किनकि यी सबै दृश्य एवं जड छन् ॥ २४ ॥

जुन पुरुषलाई मेरो स्वरूपको राम्ररी ज्ञान भइसकेको रहन्छ, त्यस व्यक्तिलाई मेरो गुणमयी इन्द्रियहरू समाहित हुनाले पनि के लाभ हुन्छ ? फेरि विक्षिप्त रहनाले के हानि नै हुन्छ ? बादलहरू आउने-जाने गर्नाले सूर्यलाई के हानि अथवा लाभ हुन सक्छ ? ॥ २५ ॥ जस्तै—वायु, अग्नि, जल, आकाश अथवा पृथ्वीका गुणले अथवा आउने-जाने ऋतुहरूका गुणले आकाश लिप्त हुन सक्तैन, त्यस्तै नै अहङ्कार देखि भिन्न अक्षर आत्मतत्त्व संसारका मुख्य कारण रूप सत्त्व, रज, तमको मलले मलिन हुँदैन ॥ २६ ॥ तापनि जबसम्म मेरो दृढ भक्तियोग द्वारा मनको मलरूप रजोगुण निवृत्त हुँदैन, तबसम्म यो मायारचित गुणका संग अवश्यमेव त्यागौस् ॥ ७ ॥

भिर्गुणो भवेन्मत्सुविविक्तधाम्नः ॥ विक्षिप्यमाणैरुत: किन्तु दूषणं घनैरुपेतैर्विगते रवेः किम् ॥ २५ ॥ यथा नभो वाय्वनलाम्बुभूगुणैर्गतागतैर्वर्तुगुणैर्न सज्जते ॥ तथाक्षरं सत्त्वरजस्तमोमलैरहंमतेः संसृतिहेतुभिः परम् ॥ २६ ॥ तथापि सङ्गः परिवर्जनीयो गुणेषु मायारचितेषु तावत् ॥ मद्भक्तियोगेन दृढेन यावद्रजो निरस्येत मनःकषायः ॥ २७ ॥ यथामयोऽसाधुचिकित्सितो नृणां पुनः पुनः संतुदति प्ररोहन् ॥ एवं मनोऽपक्वकषायकर्म कुयोगिनं विध्यति सर्वसङ्गम् ॥ २८ ॥ कुयोगिनो ये विहितान्तरायैर्मनुष्यभूतैस्त्रिदशोपसृष्टैः ॥ ते प्राक्तनाभ्यासबलेन भूयो युञ्जन्ति योगं न तु कर्मतन्त्रम् ॥ २९ ॥ करोति कर्म क्रियते च जन्तुः केनाप्यसौ चोदित आनिपातात् ॥ न तत्र विद्वान्प्रकृतौ स्थितोऽपि निवृत्ततृष्णः स्वसुखानुभूत्या ॥ ३० ॥ तिष्ठन्तमासीनमुत व्रजन्तं शयानमुक्षन्तमदन्तमन्नम् ॥ स्वभावमन्यत्किमपीहमानमात्मानमात्मस्थमतिर्न वेद ॥ ३१ ॥ यदि स्म

जस्तै—राम्ररी उपचार नगर्नाले रोग बारम्बार बल्झेर रोगी व्यक्तिलाई कष्ट दिन्छ, त्यस्तै वासना र कर्मका परिपाक रहित, स्त्री-पुत्रादिमा आसक्त छ भने अधूरो योगीलाई भ्रष्ट पारिदिन्छ ॥ २८ ॥ देवता द्वारा उत्पन्न गरिएका मनुष्यरूपी अनेक विघ्नले बाधित भएर योगी मार्गच्युत हुन्छन्, तर ती पूर्वाभ्यासवश फेरि योगमा नै प्रवृत्ति हुन्छन्—कर्मादिमा लाग्दैनन ॥ २९ ॥ यो जीव कुनै अन्य प्राणीको प्रेरणाले मरणपर्यन्त कर्म गर्दै रहन्छ, तैपनि ज्ञानी व्यक्ति आत्मानन्दको अनुभवले वितृष्ण हुनाले अनेक लौकिक विषयमा रहेर पनि तिनमा आसक्त हुँदैन ॥ ३० ॥ जसको बुद्धि आत्मस्वरूपमा स्थित रहन्छ त्यो उठ्दा-बस्ता, हिंड्दा, मल-मूत्र त्याग्दा, खाँदा वा अरु कुनै स्वाभाविक काम

---

दृष्टान्त ( मन त आमालाई दिएको छु ) एकपल्ट रामकृष्ण परमहंसको घाँटीमा रोग लाग्यो। तिनलाई हेर्न गएका श्रीशधर तर्कचूडामणिले भने—हजुर जस्ता पुरुष यदि मन एकाग्र पारेर रोगको स्थानमा रोकेर भनुन् 'रोग जा' त्यो भागिहाल्छ। हजुर एकपल्ट यसो गरेर त हेर्नु हवस्।' परमहंसले भने—'तिमी पण्डित भएर यस्तो कुरा गर्दैछौ ! जुन मन मैले काली आमालाई सुम्पिसकें, त्यो उहाँबाट फर्काएर यो हाड मासुको थैलोमा रोकौं ? के यो उचित होला ?' पण्डितजी मौन भए, तर उनका शिष्य स्वामी विवेकानन्दले भने—'हजुरको मनाइ सत्य हो, तर आफ्नू नभए पनि हाम्रो दुःख निवारण गर्नुपर्दछ, किनकि हामी हजुरको दुःख हेर्न सक्तैनौं। गुरुदेव भन्दछन्—दुःख मेट्नू वा न मेट्नू कालीजीको हातमा छ।' विवेकानन्दले भने—'आमासित दुःख निवारणको निमित्त भन्नुहवस्।' गुरुदेवले भने—'हुन्छ, म आमासित सोधौंला।' पछि ध्यानमा सोधेर उनले भने—मैले आमासित सं.के—'कष्ट हुने घाँटीबाट भोजन गर्दा हजुरलाई दुःख हुन्छ।' तत्काल माताले तिम्रो घाँटीतिर संकेत गरेर भनिन्—'यसको घाँटीले खानू। के म कैही दिन तिम्रा घाँटीले नखाउँ ?' विवेकानन्द उनका अनन्य शिष्य थिए। माताको आज्ञा सुनेर ती कसो न कसो भए।

गरेर पनि आफ्नु शरीरलाई जान्न सक्तैन ॥ ३१ ॥ यदि कुनै विद्वान् इन्द्रियका कुनै बाह्य असत् विषयलाई देख्दछ भने अनेक थरिका अनुमानले उसलाई आत्मादेखि भिन्न वास्तविक ठान्दैन । जस्तै—ब्युँतेर उठेपछि अन्तर्हित स्वप्नका पदार्थलाई कोही पनि साँचो मान्दैन ॥३२॥ हे प्रिय ! अनेक थरिका गुण-कर्मले युक्त जुन देह तथा इन्द्रिय आदि अज्ञानजनित पदार्थलाई ऊ पहिले आत्ममिश्रित मिलेको मान्दथ्यो, अब आत्मनिरीक्षणले नै निवृत्त हुन्छन् । यसको विपरीत आत्माको ग्रहण वा त्याग हुँदैन ॥ ३३ ॥ जस्तै—सूर्योदय मनुष्यको निमित्त नेत्रका आवरणरूप अन्धकार हटाइदिन्छ, त्यो कुनै पदार्थको रचना गर्दैन, त्यस्तै मेरो बलियो ज्ञान मन-बुद्धिका अन्धकारलाई नष्ट पारिदिन्छ ॥ ३४ ॥ आत्मा त स्वयं प्रकाश, अजन्मा, अप्रमेय, महानुभवरूप, सर्वानुभवस्वरूप, अद्वितीय, अनन्त छ । त्यो वाणीको विषय नहुनाले जब वाणी उसलाई नभेटेर निवृत्त हुन्छे, तब पनि यसैको प्रेरणाले वाणी र प्राण आफ्ना कर्ममा प्रवृत्त हुन्छन् ॥ ३५ ॥ अभिन्न आत्मामा विकल्प मान्नु नै चित्तको घेरै ठूलो अज्ञान हो, किनकि यस

पश्यत्यसदिन्द्रियार्थं नानानुमानेन विरुद्धमन्यत् ॥ न मन्यते वस्तुतया मनीषी स्वाप्नं यथोत्थाय तिरोदधानम् ॥ ३२ ॥ पूर्वं गृहीतं गुणकर्मचित्रमज्ञानमात्मन्यविविक्तमङ्ग ॥ निवर्तते तत्पुनरीक्षयैव न गृह्यते नापि विसृज्य आत्मा ॥ ३३ ॥ यथा हि भानोरुदयो नृचक्षुषां तमो निहन्यान्न तु सद्विधत्ते ॥ एवं समीक्षा निपुणा सती मे हन्यात्तमिस्रं पुरुषस्य बुद्धेः ॥ ३४ ॥ एष स्वयंज्योतिरजोऽप्रमेयो महानुभूतिः सकलानुभूतिः ॥ एकोऽद्वितीयो वचसां विरामे येनेषिता वागसवश्चरन्ति ॥ ३५ ॥ एतावानात्मसंमोहो यद्विकल्पस्तु केवले ॥ आत्मन्नृते स्वमात्मानमवलम्बो न यस्य हि ॥ ३६ ॥ यन्नामाकृतिभिर्ग्राह्यं पञ्चवर्णमबाधितम् ॥ व्यर्थेनाप्यर्थवादोऽयं द्वयं पण्डितमानिनाम् ॥ ३७ ॥ योगिनोऽपक्वयोगस्य युञ्जतः काय उत्थितैः ॥ उपसर्गैर्विहन्येत तत्रायं विहितो विधिः ॥ ३८ ॥ योगधारणया कांश्चिदासनैर्धारणान्वितैः ॥ तपोमन्त्रौषधैः कांश्चिदुपसर्गान् विनिर्दहेत् ॥ ३९ ॥ कांश्चिन्ममानुध्यानेन नामसङ्कीर्तनादिभिः ॥ योगेश्वरानुवृत्त्या वा हन्यादशुभदाञ्छनैः ॥ ४० ॥ केचिद्देहमिमं धीराः सुकल्पं वयसि स्थिरम् ॥ विधाय विविधोपायैरथ युञ्जन्ति सिद्धये ॥४१॥ न हि तत्कुशलादृत्यं तदायासो ह्यपार्थकः ॥ अन्तवत्त्वाच्छरीरस्य फलस्येव वनस्पतेः ॥ ४२ ॥ योगं निषेवतो नित्यं कायश्चेत्कल्पतामियात् ॥ तच्छ्रद्दध्यान्न मतिमान्योगमुत्सृज्य मत्परः ॥ ४३ ॥ योगचर्यामिमां योगी विच-

विदरथतो पनि आफ्नो आत्मस्वरूप मन बाहेक अरु कुनै सहारा छैन ॥ ३६ ॥ नाम-रूपले ग्रहण गरिने पाञ्चभौतिक द्वैत बाधित छैन, यस सिद्धान्तलाई मानेर आफूलाई पण्डित मान्ने मीमांसकहरूलाई यो वेदान्त-कथित अनात्मवाद अकारण नै अर्थवाद ज्ञात हुन्छ ॥ ३७ ॥ योग साधना पूर्ण हुनुभन्दा पहिल्यै कुनै साधकको शरीर कुनै अकस्मात् उत्पन्न व्याधिले पीडित भयो भने त्यसको निम्ति उपाय कहिएका छन् ॥३८॥ केही उपद्रवलाई योगधारणाले, केहीलाई धारणयुक्त आसनले र केहीलाई तप, मन्त्र र औषधिले शान्त पारोस् ॥३९॥ केही अशुभप्रद दोषलाई मेरो निरन्तर ध्यानले, केहीलाई नाम-संकीर्तनले र केहीलाई योगेश्वरहरूको अनुवर्तन गरेर बिस्तार-बिस्तार नष्ट पारोस् ॥४०॥ कुनै-कुनै धीर योगी यो देहलाई विविध उपायले बलियो र युवावस्थामा स्थिर पारेर अणिमादि सिद्धिका लागि योगसाधन गर्दछन् ॥४१॥ बाटा व्यक्ति यो बाटो रोज्दैनन् । यो त व्यर्थ प्रयास

1372-

हो, किनकि वृक्षमा फलेका फल झैं यो शरीर पनि नाशवान् नै छ ॥ ४२ ॥ नित्य योगसाधनामा तत्पर योगीको शरीर यदि बलियो भए पनि मलाई मञ्ने बुद्धिमान् पुरुष साधन छाडेर, उसैमा सन्तुष्ट भएर नबसिरहोस् ॥ ४३ ॥ निष्काम र स्वानन्दानुभव गर्ने जुन योगी मेरो आश्रय लिएर यस प्रकार योगसाधनमा लागिरहन्छ, उपलाई विघ्नले दुःख दिन्नन् ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे नेपाली भाषाटीकायां अष्टविंशोऽध्यायः ॥२८॥ ( भागवत धर्मको निरूपण र उद्धवको प्रस्थान )–उद्धव भन्दछन्–हे अच्युत ! योगचर्यालाई त म अजितेन्द्रिय व्यक्तिका लागि दुःसाध्य मान्दछु। अतः हजुर स्पष्ट तथा कुनै यस्तो उपाय आज्ञा हवस् जसले गर्दा मनुष्य अनायास सिद्धि प्राप्त गरुन् ॥१॥ हे कमललोचन ! मन एकाग्र पार्नमा लागेका योगीजन त्यसको निग्रह गर्दा हुनाले खिन्न रहन्छन् ॥२॥ अतः हे अरविन्दाक्ष ! हे विश्वेश्वर ! सारग्राही योगीजन आनायास नै आनन्ददायी चरण-कमलको आश्रय लिन्छन्। तर जो योगकर्मले गर्दा अभिमानी भइरहेका छन् ती हजुरकी मायाले भरिएका छन्। तिनलाई कहिल्यै सुख हुँदैन ॥३॥ हे सर्व सुहृद् अच्युत ! यदि हजुर आफ्ना अनन्यशरण दासको अधीन हुनुहुन्छ भने त्यसमा छक पर्ने कुरै छैन, किनकि जसका चरण-कमलमा स्वयं ब्रह्मादि लोकपाल पनि आफ्नू टल्कने मुकुट

रन्मद्व्यपाश्रयः ॥ नान्तरायैर्विहन्येत निःस्पृहः स्वसुखानुभूः ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे अष्टाविंशोऽध्यायः ॥ २८ ॥ उद्धव उवाच ॥ सुदुस्तरामिमां मन्ये योगचर्यामनात्मनः ॥ यथाञ्जसा पुमान्सिद्ध्येत्तन्मे ब्रूह्यञ्जसाच्युत ॥ १ ॥ प्रायशः पुण्डरीकाक्ष युञ्जन्तो योगिनो मनः ॥ विषीदन्त्यसमाधानान्मनोनिग्रहकर्शिताः ॥ २ ॥ अथात आनन्ददुघं पदाम्बुजं हंसाः श्रयेरन्नरविन्दलोचन ॥ सुखं नु विश्वेश्वर योगकर्मभिस्त्वन्माययामी विहता न मानिनः ॥ ३ ॥ किं चित्रमच्युत तवैतदशेषबन्धो दासेष्वनन्यशरणेषु यदात्मसात्त्वम् ॥ योऽरोचयत्सह मृगैः स्वयमीश्वराणां श्रीमत्किरीटतटपीडितपादपीठः ॥ ४ ॥ तं त्वाखिलात्मदयितेश्वरमाश्रितानां सर्वार्थदं स्वकृतविद्विसृजेत को नु ॥ को वा भजेत्किमपि विस्मृतयेनुभूत्यै किं वा भवेन्न तव पादरजोजुषां नः ॥ ५ ॥ नैवोपयन्त्यपचितिं कवयस्तवेश ब्रह्मायुषापि कृतमृद्धमुदः स्मरन्तः ॥ योऽन्तर्बहिस्तनुभृतामशुभं विधुन्वन्नाचार्यचैत्यवपुषा स्वगतिं व्यनक्ति ॥६॥ श्रीशुक उवाच ॥ इत्युद्धवेनात्यनुरक्तचेतसा पृष्टो जगत्क्रीडनकः स्वशक्तिभिः ॥

घोट्तछन्, उनै हजुर रामावतारमा वानरसित मित्रता गर्नुभयो ॥४॥ आफ्ना भक्तमा गरिएका उपकार जान्दै पनि यस्तो कुन पुरुष होला जो सबैका आत्मा, प्रियतम, ईश्वर र शरणागतलाई सर्वस्व दिने हजुरलाई बिर्सिदेला ? अथवा यस्तो कुन विचारशील होला, जुन परिणाममा मोह उत्पन्न गर्ने एवं केवल रोगका नै साधन स्वरूप तुच्छ भोग खोज्ला फेरि हजुरका चरण-रजको सेवन गर्ने हामीहरूका निम्ति दुर्लभ पनि के छ ? ॥५॥ हे ईश्वर ! जो आचार्य तथा अन्तर्यामी रूपले शरीधारीहरूको बाह्य र आन्तरिक मल नष्ट पारेर उनलाई आफ्नू स्वरूपको साक्षात्कार गराउनु हुन्छ, ती हजुरका उपकारको साटो विवेकी ब्रह्मवेत्ता ब्रह्मा समान आयु पाएर पनि तिर्न सक्तैनन्। ती हजुरका उपकार स्मरण गरेर मनमनै प्रसन्न हुने गर्दछन् ॥ ६ ॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! उद्धवले यसरी अत्यन्त प्रेमपूर्वक सोधेछि जगत् नै जसको क्रीडा-सामग्री छ, जो आफ्नी मायाले विदेशका

धारण गरेर जगत्‌को उत्पत्ति, स्थिति र प्रलय गर्दछन्, ती ईश्वरका पनि ईश्वर मुसुक्क हाँस्तै बोले ॥ ७ ॥ भगवान् भन्दछन्—हे तात ! म तिमीलाई आफ्नू अत्यन्त मङ्गलमय भागवतधर्म सुनाउँछु, जसको श्रद्धापूर्वक आचारण गर्नाले मनुष्य मृत्युलाई पनि जित्न सक्छ ॥ ८ ॥ निरन्तर मन-चित्त ममा नै लगाइरहने र जसको आत्मा र मनको मेरै धर्ममा अनुराग भएको छ, त्यो पुरुष मेरो स्मरण गर्दै आफ्ना सबै कर्म विस्तार-विस्तार मेरै निम्ति गरिरहोस् ॥ ९ ॥ जहाँ मेरा भक्तजन बस्तछन् त्यहाँ पुण्यस्थानमा बसेर देवता, असुर वा मनुष्यमा जो मेरा अनन्य भक्त छन्, तिनका आचरणको अनुकरण गर्दै रहोस् ॥ १० ॥ पर्व दिनहरूमा एक्लै अथवा संगै मिलेर नृत्य, गान, वाद्य आदि महाराजोचित ठाँट पारेर मेरो यात्राको उत्सव मनाओस् ॥ ११ ॥ निर्मल चित्त भएर सबै प्राणीमा र स्वयंमा म आत्मारामलाई नै आकाश झैं निरावरणरूपले भित्र-बाहिर व्याप्त देखोस् ॥ १२ ॥ हे उद्धव ! जो यसरी केवल ज्ञानदृष्टिको आश्रय लिएर सबै प्राणीलाई मेरो नै स्वरूप ठानेर राम्ररी सत्कार गर्दै तथा ब्राह्मण, चाण्डाल, चोर र

गृहीतमूर्तित्रय ईश्वरेश्वरो जगाद सप्रेममनोहरस्मितः ॥ ७ ॥ श्रीभगवानुवाच ॥ हन्त ते कथयिष्यामि मम धर्मान्सुमङ्गलान् ॥ यान्श्रद्धया चरन्मर्त्यो मृत्युं जयति दुर्जयम् ॥ ८ ॥ कुर्यात्सर्वाणि कर्माणि मदर्थं शनकैः स्मरन् ॥ मय्यर्पितमनश्चित्तो मद्धर्मात्ममनोरतिः ॥ ९ ॥ देशान्पुण्यानाश्रयेत मद्भक्तैः साधुभिः श्रितान् ॥ देवासुरमनुष्येषु मद्भक्ताचरितानि च ॥१०॥ पृथक्सत्रेण वा मह्यं पर्वयात्रामहोत्सवान् ॥ कारयेद्गीतनृत्याद्यैर्महाराजविभूतिभिः ॥ ११ ॥ मामेव सर्वभूतेषु बहिरन्तरपावृतम् ॥ ईक्षेतात्मनि चात्मानं यथा खममलाशयः ॥ १२ ॥ इति सर्वाणि भूतानि मद्भावेन महाद्युते ॥ सभाजयन्मन्यमानो ज्ञानं केवलमाश्रितः ॥ १३ ॥ ब्राह्मणे पुल्कसे स्तेने ब्रह्मण्येऽर्के स्फुलिङ्गके ॥ अक्रूरे क्रूरके चैव समदृक्पण्डितो मतः ॥१४ ॥ नरेष्वभीक्ष्णं मद्भावं पुंसो भावयतोऽचिरात् ॥ स्पर्धासूयातिरस्काराः साहङ्कारा वियन्ति हि ॥ १५ ॥ विसृज्य स्मयमानान्स्वान्दृशं व्रीडां च दैहिकीम् ॥ प्रणमेद्दण्डवद्भूमावाश्वचाण्डालगोखरम् ॥ १६ ॥ यावत्सर्वेषु भूतेषु मद्भावो नोपजायते ॥ तावदेवमुपासीत वाङ्मनःकायवृत्तिभिः ॥ १७ ॥ सर्वं ब्रह्मात्मकं तस्य विद्ययात्ममनीषया ॥ परिपश्यन्नुपरमेत्सर्वतो मुक्तसंशयः ॥ १८ ॥ अयं हि सर्वकल्पानां सध्रीचीनो मतो मम ॥ मद्भावः सर्वभूतेषु मनोवाक्कायवृत्तिभिः ॥ १९ ॥ न ह्यङ्गोपक्रमे ध्वंसो मद्धर्मस्योद्धवाण्वपि ॥ मया व्यवसितः सम्यङ् निर्गुणत्वादनाशिषः ॥ २० ॥

सूर्य तथा स्फुलिङ्ग अर्थात् झिल्का तथा कृपालु र क्रूरमा समान दृष्टि राख्दछ, त्यही उत्तम पण्डित कहिन्छ ॥ १३ ॥ १४ ॥ धेरै बर्ता समयसम्म सबै पुरुषमा निरन्तर मेरो नै भावना गर्नाले व्यक्तिको स्पर्धा असूया अर्थात् परनिन्दा र अहंकार आदि दोष जान्छन् ॥ १५ ॥ मेरा भक्त आफ्नू हाँसो गर्ने स्वजनलाई 'म असल, त्यो नजाति' यो देहदृष्टि र लोकलज्जा त्यागेर कुकुर, चाण्डाल, गाई र गदहालाई समान ठानेर पृथ्वीमा लम्पसार परी दण्डवत् प्रणाम गरोस् । जबसम्म सबै प्राणीहरूमा मेरो मात्र भावना हुँदैन, तबसम्म उसै गरी मन, वाणी र शरीरको सबै कृत्यले नित्य मेरै उपासना गर्दै जाओस् ॥ १६ ॥ १७ ॥ यसरी सर्वत्र आत्मबुद्धिरूपिणी ब्रह्मविद्या द्वारा उसलाई ती सबै ब्रह्ममय प्रतीत हुन थाल्दछ । यस्तो दृष्टि भइसकेपछि निःसन्देह भएर शान्त होओस् । त्यसपछि फेरि लौकिक-वैदिक कुनै पनि कर्म-झमेलामा नपरोस् ॥ १८॥ मन

वाणी र देहका वृत्तिले मैं भावना गरोस्। यही मेरो भागवत धर्म हो। यो थालेछि बाधाले फरक पार्दैन। निष्काम र यो कुरा मैले निर्गुण हुनाले स्वयं निश्चय गरेको हुँ ॥ १९ ॥ २० ॥ त्रुटिको त कुरै छैन, यदि साधक भय-शोकादि निरर्थक कर्म पनि समर्पित गर्छ भने त्यो मेरो प्रसन्नताको कारण बन्दछ ॥२१॥ विवेक र वख्याइँको पराकाष्ठा यसैमा छ कि नाशवान् देहद्वारा म अविनाशी र सत्य तत्वलाई प्राप्त गरोस्। यो ब्रह्मविद्याको रहस्य सुन्यौ। यो रहस्य बुझ्न देवतालाई पनि कठिन छ भने मनुष्यको कुरै छैन ॥२२-२३॥ मैले जुन युक्तियुक्त ज्ञानको वर्णन बारम्बार गरेको छु, त्यसको मर्म बुझ्ने साधकका संशय-ग्रन्थि छिन्न-भिन्न भई मुक्त हुन्छ ॥ २४ ॥ मैले तिम्रा प्रश्नको उत्तर दिइसकें। जो व्यक्ति हाम्रो प्रश्नोत्तर धारण गर्नेछ, त्यो वेदका पनि रहस्य परब्रह्मलाई प्राप्त गर्नेछ। जो व्यक्ति मेरा भक्तलाई राम्ररी बुझाउँछ, त्यो ज्ञानदातालाई म आफ्नू स्वरूपसम्म दिनेछु, तथा आत्मज्ञान गराइदिन्छु ॥ २५ ॥ २६ ॥ हे उद्धव ! यो हाम्रो संवाद स्वयं पवित्र छ र अरुलाई पनि मेरो दर्शन गराउन सक्ने हुनाले पवित्र हुनेछ ॥ जो एकाग्र मनले यो नित्य सुनला उसलाई मेरी पराभक्ति प्राप्त हुनेछ र कर्मबन्धनबाट मुक्त होला ॥ २७ ॥ हे सखे ! तिमीले राम्ररी ब्रह्मको स्वरूप चिन्यौ ? तिम्रो मनको शोक-मोह नष्ट भयो कि

यो यो मयि परे धर्मः कल्प्यते निष्फलाय चेत् ॥ तदायासो निरर्थः स्याद् भयादेरिव सत्तम ॥ २१ ॥ एषा बुद्धिमतां बुद्धिर्मनीषा च मनीषिणाम् ॥ यत् सत्यमनृतेनेह मर्त्येनाप्नोति मामृतम् ॥ २२ ॥ एष तेऽभिहितः कृत्स्नो ब्रह्मवादस्य संग्रहः ॥ समासव्यासविधिना देवानामपि दुर्गमः ॥ २३ ॥ अभीक्ष्णशस्ते गदितं ज्ञानं विस्पष्टयुक्तिमत् ॥ एतद् विज्ञाय मुच्येत पुरुषो नष्टसंशयः ॥२४॥ सुविविक्तं तव प्रश्नं मयैतदपि धारयेत् ॥ सनातनं ब्रह्मगुह्यं परं ब्रह्माधिगच्छति॥२५॥ य एतन्मम भक्तेषु सम्प्रदद्यात् सुपुष्कलम् ॥ तस्याहं ब्रह्मदायस्य ददाम्यात्मानमात्मना॥२६॥ य एतत् समधीयीत पवित्रं परमं शुचि ॥ स पूयेताहरहर्मां ज्ञानदीपेन दर्शयन् ॥२७॥ य एतच्छ्रद्धया नित्यमव्यग्रः शृणुयान्नरः ॥ मयि भक्तिं परां कुर्वन् कर्मभिर्न स बध्यते ॥ २८ ॥ अप्युद्धव त्वया ब्रह्म सखे समवधारितम् ॥ अपि ते विगतो मोहः शोकश्चासौ मनोभवः ॥२९॥ नैतत्त्वया दाम्भिकाय नास्तिकाय शठाय च ॥ अशुश्रूषोरभक्ताय दुर्विनीताय दीयताम् ॥ ३० ॥ एतैर्दोषैर्विहीनाय ब्रह्मण्याय प्रियाय च ॥ साधवे शुचये ब्रूयाद्भक्तिः स्याच्छूद्रयोषिताम् ॥ ३१ ॥ नैतद् विज्ञाय जिज्ञासोर्ज्ञातव्यमवशिष्यते ॥ पीत्वा पीयूषममृतं पातव्यं नावशिष्यते ॥ ३२ ॥ ज्ञाने कर्मणि योगे च वार्तायां

भएन ॥ २९ ॥ तिमी यो दाम्भिक, शठ, नास्तिक र भक्तिहीन पुरुषलाई कहिल्यै नदिनु। जो यो दोषरहित छ, प्रेमी र साधु स्वभावको छ र जसको चरित्र पवित्र छ, उसैलाई यो प्रसङ्ग सुनाउनु पर्दछ। यदि शूद्र र स्त्री पनि मेरा भक्त छन् भने उनलाई यसको उपदेश दिनुपर्दछ ॥ ३० ॥ ३१ ॥ जस्तै दिव्य अमृत पान गरिसकेपछि केही पिउन शेष रहन्न, त्यस्तै यो जानेपछि अरु केही जान्न शेष रहन्न। उद्धव ! मनुष्यलाई ज्ञान, कर्म, योग, वाणिज्य र राजदण्डादिले क्रमशः मोक्ष, धर्म, काम र अर्थरूप फल प्राप्त हुन्छन्, तर तिमी जस्ता अनन्य भक्तका निम्ति ती चारै थरिका फल केवल म नै हुँ। ।३२॥३३ ॥ जुन बेला मनुष्य सबै कर्मको त्याग गरेर मलाई आत्म समर्पण गरिदिन्छ, त्यसै बेला त्यो मेरो विशेष माननीय बन्दछ र म उसलाई उसको जीवत्वबाट छुटाएर अमृत स्वरूप मोक्ष प्राप्ति गराइदिन्छु, अनि त्यो मेरै स्वरूप बन्दछ ॥ ३४ ॥ शुकदेव भन्नुहुन्छ— हे राजन् ! अब उद्धवले योगमार्गको पूर्ण उपदेश प्राप्त गरिसकेका थिए। श्रीकृष्णको कुरा सुनेर उनका आँखाबाट आँसु बग्नलागे। प्रेमको बाढीले घाँटी अवरुद्ध भयो, मौन भएर

हात जोरेर उभिए, बोल्न सकेनन् ॥ ३५ ॥ उनको चित्त प्रेमावेशले विह्वल भइरहेथ्यो, उनले धैर्यपूर्वक रोकेर आफूलाई सौभाग्यशाली अनुभव गर्दै भगवान्का पाउमा शिर राखे र हात जोरेर प्रार्थना गरे ॥३६॥ उद्धव भन्दछन्—हे प्रभो ! हजुर माया र ब्रह्मा आदिका पनि मूल कारण हुनुहुन्छ । म मोहको महान्धकारमा भौंतारिइरहेको थिएँ । हजुरको सत्सङ्गले त्यो भागेर गयो । जो आगोको नगीचै पुग्यो, त्यसलाई जाडो, अन्धकार र त्यसद्वारा हुने भय टिक्न सक्छ ? ॥ ३७ ॥ भगवन् ! हजुरकी मोहिनी मायाले मेरो ज्ञान-दीप खोसेको थियो, तर हजुरले कृपा गरेर आफ्ना भक्तलाई फेरि फर्काइदिनुभयो । हजुरले ममाथि अनुग्रहको वर्षा गरिदिनु भयो । यस्तो को होला जो हजुरको कृपा-प्रसादको अनुभव गरेर पनि

दण्डधारणे ॥ यावानर्थो नृणां तात तावांस्तेऽहं चतुर्विधः ॥ ३३ ॥ मर्त्यो यदा त्यक्तसमस्तकर्मा निवेदितात्मा विचिकीर्षितो मे ॥ तदामृतत्वं प्रतिपद्यमानो मयाऽऽत्मभूयाय च कल्पते ॥३४॥ श्रीशुक उवाच ॥ स एवमादर्शितयोगमार्गस्तदोत्तमश्लोकवचो निशम्य ॥ बद्धाञ्जलिः प्रीत्युपरुद्धकण्ठो न किंचिदूचेऽश्रुपरिप्लुताक्षः ॥ ३५ ॥ विष्टभ्य चित्तं प्रणयावघूर्णं धैर्येण राजन् बहु मन्यमानः ॥ कृताञ्जलिः प्राह यदुप्रवीरं शीर्ष्णा स्पृशंस्तच्चरणारविन्दम् ॥ ३६ ॥ उद्धव उवाच ॥ विद्रावितो मोहमहान्धकारो य आश्रितो मे तव संनिधानात् ॥ विभावसोः किं नु समीपगस्य शीतं तमो भीः प्रभवन्त्यजाद्य ॥३७॥ प्रत्यर्पितो मे भवतानुकम्पिना भृत्याय विज्ञानमयः प्रदीपः ॥ हित्वा कृतज्ञस्तव पादमूलं कोऽन्यत् समीयाच्छरणं त्वदीयम्॥३८॥ वृक्णश्च मे सुदृढः स्नेहपाशो दाशार्हवृष्ण्यन्धकसात्वतेषु ॥ प्रसारितः सृष्टिविवृद्धये त्वया स्वमायया ह्यात्मसुबोधहेतिना ॥ ३९ ॥ नमोऽस्तु ते महायोगिन् प्रपन्नमनुशाधि माम् ॥ यथा त्वच्चरणाम्भोजे रतिः स्यादनपायिनी ॥ ४० ॥ श्रीभगवानुवाच गच्छोद्धव मयाऽऽदिष्टो बदर्याख्यं ममाश्रमम् ॥ तत्र मत्पादतीर्थोदे स्नानोपस्पर्शनैः शुचिः ॥ ४१ ॥ ईक्षयालकनन्दाया विधूताशेषकल्मषः ॥ वसानो वल्कलान्यङ्ग वन्यभुक् सुखनिःस्पृहः ॥ ४२ ॥ तितिक्षुर्द्वन्द्वमात्राणां सुशीलः संयतेन्द्रियः ॥ शान्तः समाहितधिया ज्ञानविज्ञानसंयुतः ॥ ४३ ॥ मत्तोऽनुशिक्षितं यत्त

हजुरका चरण-कमलको शरण छाडिदिओस् ? र अरु वस्तुको भर परोस् ॥३८॥ हजुरले आफ्नो मायाद्वारा सृष्टि बढाउनको लागि दाशार्ह, वृष्णि, अन्धक र सात्वतवंशी यादवहरूका साथ मलाई बलियो स्नेहपाशले बाँधिदिनुभएको थियो । आज हजुरले आत्मबोधको तीखो तरवारले त्यस बन्धनलाई सहजै काटिदिनु भयो ॥३९॥ हे महायोगेश्वर ! मेरो हजुरलाई नमस्कार छ । अब हजुर कृपा गरेर म शरणागतलाई यस्तो आज्ञा दिनु हवस् जसले हजुरका चरण-कमलमा मेरो भक्ति लागिरहोस् ॥४०॥ भगवान्ले भन्नुभयो—हे उद्धव ! अब तिमी मेरो आज्ञाले बदरी वनमा जाऊ । त्यो मेरो नै आश्रय हो त्यहाँ मेरो चरण-कमल पखालेको गंगा जल स्नान पान द्वारा सेवन गरेर तिमी पवित्र हुनेछौ ॥४१॥ अलकनन्दाको दर्शन मात्रले पनि तिम्रा

1376

सबै मनका पाप-ताप पखालिने छन्, त्यहीं वल्कल वस्त्र लगाई वनका कन्द-मूल खाएर निःस्पृहभावले सुखपूर्वक बस॥४२॥ शीतोष्णादि द्वन्द्व सहँदै सुशील र जितेन्द्रिय भएर शान्तचित्त एकाग्र-बुद्धि तथा ज्ञान र विज्ञानले युक्त रहन् ॥४३॥ मसित जे शिक्षा पायौ, त्यसको राम्ररी विचारपूर्वक अनुभव गरेर मन वाणी र चित्तलाई लगाउँदै मेरो धर्ममा नै सदैव तत्पर रहनु । यस्तो गर्दै रहनाले तिमी तीनै गुणका गति नाघेर *सिद्ध पुरुष हुनेछौ र अन्त्यमा म परब्रह्मलाई प्राप्त गर्नेछौ ॥ ४४ ॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! जसको ज्ञान संसार भय हरण गर्ने थियो, ती कृष्णचन्द्रले त्यति भने पछि उद्धवले उनको तीन प्रदक्षिणा गरेर उनका चरणमा आफ्नु मस्तक राखे। अब ती सबै द्वन्द्वबाट पर थिए, तापनि

विविक्तमनुभावयन् ॥ मय्यावेशितवाक्चित्तो मद्धर्मनिरतो भव ॥ अतिव्रज्य गतीस्तिस्रो मामेष्यसि ततः परम् ॥ ४४ ॥ श्रीशुक उवाच ॥ स एवमुक्तो हरिमेधसोद्धवः प्रदक्षिणं परिसृत्य पादयोः ॥ शिरो निधायाश्रुकलाभिरार्द्रधीर्न्यषिञ्चदद्वन्द्वपरोऽप्युपक्रमे ॥ ४५ ॥ सुदुस्त्यजस्नेहवियोग-कातरो न शक्नुवंस्तं परिहातुमातुरः ॥ कृच्छ्रं ययौ मूर्धनि भर्तृपादुके बिभ्रन्नमस्कृत्य ययौ पुनः पुनः ॥ ४६ ॥ ततस्तमन्तर्हृदि सन्निवेश्य गतो महाभागवतो विशालाम् ॥ यथोपदिष्टां जगदेकबन्धुना तपः समास्थाय हरेरगाद्गतिम् ॥ ४७ ॥ य एतदानन्दसमुद्रसम्भृतं ज्ञानामृतं भागवताय

त्यहाँबाट हिँड्ने बेलामा उद्धवको हृदय भरियो र प्रेमवश आफ्ना नेत्रका अश्रुधाराले भगवान्‌का चरण-कमल भिजाइदिए ॥ ४५ ॥ उनको स्नेह छाड्नु अत्यन्त कठिन थियो, ती श्रीकृष्णचन्द्रको वियोग हुनाले ती व्याकुल भए। उनलाई सहसा छाड्न नसक्नाले उद्धव अति आतुर भएर आफ्ना स्वामी कृष्णका चरण-पादुका लिएर तिनलाई आफ्नु शिरमा राखेर बारम्बार प्रणाम गरेपछि येन-केन-प्रकारेण आफ्नु मन मारेर त्यहाँबाट हिंडे ॥ ४६ ॥ अनि महाभाग उद्धव आफ्नु हृदयमा प्रभुका दिव्यरूप धारण गरेर बद्रिकाश्रम पुगे। त्यहाँ संसारका सुहृद श्रीहरिका आदेशानुसार तपोमय आचरण गर्दै अन्तमा उनले श्रीहरिको गति पाए ॥ ४७ ॥ योगेश्वर जसका चरणको सेवा गर्दछन्, उनै श्रीकृष्ण-

---

*उदाहरण ( सिद्ध पुरुष गुरुनानक )—गुरु नानक पञ्जाबमा मोटा महान् सन्त भएका थिए। ती हिन्दू मुसलमान एकताका समर्थक थिए। एकपल्ट सुलतानपुरका नवाबले गुरुनानकसित भने—'तिमी सन्तको, हिन्दू र मुसलमान धर्मको रहस्यमा कुनै फरक छैन्—उसो भए आज मेरो काजीसित नमाज पढ !' नानकले भने—'हुन्छ' भनि सबै जना मसजिदमा गए। त्यहाँ गुरुनानक एकातिर उभिए र काजी एवं नवाब तुरुन्त नमाज पढ्न लागे। तर ती दुवैको मन अर्कोतिर डुलिरहेको थियो। पछि नवाबले गुरुनानकसित भने—'किन उभिइरहेका ? नमाज पढ !' नानकले भने—'तिमी पनि कहाँ नमाज पढिरहेका थियौ ? तिमी काबुलमा घोडा किन्न घुमिरहेका थियौ र काजी साहेब हजार खन्न लाई दे थिए। साँचो नमाज मैले नै पढें र त्यो खुदाले कबूल गरिलिए।' गुरुनानकले दुवैका मनको कुरा बुझे भन्ने जानेर दुवै छक्क परेर गुरुनानक पाउ समातेर उनको स्तुति गर्न लागे। गुरु नानक भारतवर्षका सबै तीर्थहरूमा डुले। एकपल्ट ती मक्का शरीफको हज गर्न गए। रेल वा मोटर तब थमानामा थिएनन्—एक दिनमा पुग्नका लागि। ती धेरै दिनमा मक्का पुगे। पैदल हिँड्नाको परिश्रमले ती असाध्य थाकेका थिए। अतः राति काबातिर खुट्टा पारेर सुते। त्यहाँका काजीले रिसाएर उनलाई निकै हप्कायो, किनभने यो मुसलिम धर्मानुसार असभ्य अपराध थियो। नानकले भने—काजी साहेब। नरिसाउनु हवस ! म थाकेको छु। जतातिर खुदाको घर छैन, उतैतिर मेरो खुट्टा पारिदेऊ।' यति सुनेर काजी झन् रिसायो र उनको खुट्टा समातेर अर्कोतिर फर्काइदियो। काजीलाई मक्काको मन्दिर उतैतिर देखियो। अर्कोतिर खुट्टा सार्दा फेरि उतैतिर देखियो। काजीले भन्यो—'यस्तो किन भइरहेको छ ?' नानकले भने—'काजी साहेब ! के खुदाको घर चारैतिर छैन ? के खुदा कहाँ बस्तछ ?' काजी लज्जित भयो र उनको खुट्टा समातेर क्षमा माग्यो। (377)

चन्द्रद्वारा आनन्द-सिन्धुबाट उत्पन्न यो ज्ञानमृत आफ्ना अनन्य भक्त उद्धवलाई सुनाए । जो श्रद्धापूर्वक अलिकति पनि यसको सेवन गर्दछ, त्यो सारा सङ्गीतबाट मुक्त हुन्छ ॥४८॥ जुन वेद प्रकाशक भगवान्‌ले समस्त संसारको भय निवारणका लागि फूलको सारस्वरूप मह लिक्ने भ्रमरको समान एक त सबै वेदवेदान्तको सारस्वरूप यो ज्ञान विज्ञानको सार भागवत र अर्को क्षीरसमुद्रबाट अमृत झिके तथा आफ्ना भक्तलाई पिलाए, ती श्रीकृष्ण नामक परमश्रेष्ठ आदिपुरुषलाई प्रणाम छ ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं० गौरीशंकर कृत 'वासिष्ठी' भाषाटीकायामेकोन त्रिंशोऽध्यायः ॥ २९ ॥

( यदुवंशको संहार ) यति कथा सुनेर राजा परीक्षितले सोधे—हे ब्रह्मन् ! महाभक्त उद्धव बदरिकाश्रम गएपछि भूतभावन भगवान् श्रीकृष्णले द्वारकामा कुन-कुन के कार्य गरे ? यदुकुल भूषण भगवान् कृष्णचन्द्रले आफ्नु कुल ब्रह्मशापग्रस्त भएपछि समस्त संसारका नेत्रलाई सुख दिने भएको त्यो देह कसरी त्यागे ? जुन देहमा गाडिएका आफ्ना नेत्र

भाषितम् ॥ कृष्णेन योगेश्वरसेविताङ्घ्रिणा सच्छ्रद्धयासेव्य जगद्विमुच्यते॥ ४८॥ भवभयमपहन्तुं ज्ञानविज्ञानसारं निगमकृदुपजह्रे भृङ्गवद्वेदसारम् ॥ अमृत-मुदधितश्चापाययद्भृत्यवर्गान् पुरुषमृषभमाद्यं कृष्णसंज्ञं नतोऽस्मि ॥४९॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे एकोनत्रिंशोऽध्यायः ॥२९ ॥

राजोवाच ॥ ततो महाभागवत उद्धवे निर्गते वनम् ॥ द्वारवत्यां किमकरोद्भगवान्भूतभावनः ॥ १ ॥ ब्रह्मशापोपसंसृष्टे स्वकुले यादवर्षभः ॥ प्रेयसीं सर्वनेत्राणां तनुं स कथमत्यजत् ॥ २ ॥ प्रत्याक्रष्टुं नयनमबला यत्र लग्नं न शेकुः कर्णाविष्टं न सरति ततो यत्सतामात्मलग्नम् ॥ यच्छ्रीर्वाचां जनयति रतिं किं नु मानं कवीनां दृष्ट्वा जिष्णोर्युधि रथगतं यच्च तत्साम्यमीयुः ॥ ३ ॥ श्रीशुक उवाच ॥ दिवि भुव्यन्तरिक्षे च महोत्पातान्समुत्थितान् ॥ दृष्ट्वाऽऽसीनान् सुधर्मायां कृष्णः प्राह यदूनिदम् ॥ ४ ॥ श्रीभगवानुवाच ॥ एते घोरा महोत्पाता द्वार्वत्यां यमकेतवः ॥ मुहूर्तमपि न स्थेयमत्र नो यदुपुङ्गवाः ॥ ५ ॥ स्त्रियो बालाश्च वृद्धाश्च शङ्खोद्धारं व्रजन्त्वितः ॥ वयं प्रभास यास्यामो यत्र प्रत्यक्सरस्वती ॥ ६ ॥ तत्राभिषिच्य शुचय उपोष्य सुसमाहिताः ॥ देवताः पूजयिष्यामः स्नपनालेपनार्हणैः ॥ ७ ॥ ब्राह्मणांस्तु महाभागान्कृतस्वस्त्ययना वयम् ॥ गोभू-हिरण्यवासोभिर्गजाश्वरथवेश्मभिः ॥ ८ ॥ विधिरेष ह्यरिष्टघ्नो मङ्गलायनमुत्तमम् ॥ देवद्विजगवां पूजा भूतेषु परमो भवः ॥ ९ ॥ इति सर्वे समा-

सोझ्लन सकिहरू फर्काउन सक्तैनथे, किनकि कानबाट भित्र प्रविष्ट भएर जुन भाव सज्जनको चित्तमा गाडिन्छ, त्यो फेरि त्यहाँबाट निस्कन्न । जसको शोभा वर्णन कविहरूको मान बढाउने र तिनको वाणीलाई पनि आनन्दित पार्दछ । जसलाई अर्जुनको रथमा बसेका देखेर युद्धमा मर्ने योद्धालाई पनि उनको सारूप्य मुक्ति मिल्यो, त्यो आफ्नू अलौकिक देह—श्रीकृष्णले कसरी त्यागे ? शुकदेव भन्दछन्—हे राजन् ! कृष्णले आकाश, पृथ्वी र अन्तरिक्षमा सर्वदा हुने महान् उत्पातहरू देखेर सुधर्मा सभामा बसेका यादवहरूसित भने—हे यादवगण हो ! द्वारकापुरीमा हुने यी उत्पात यमराजको ध्वजा समान डरलाग्दो छ । अब हामीहरू यहाँ एक क्षण पनि नबसौं ? अतः तिमीहरू स्त्रीगण तथा बालकहरू र बूढा-पाका त शङ्खोद्धार क्षेत्र पठाओ र हामीहरू प्रभासक्षेत्र जाऔं, जहाँ पश्चिमवाहिनी सरस्वती विद्यमान छन् ॥ १-६ ॥ त्यो तीर्थमा स्नानले पवित्र भएर उपवास गरौंला र एकाग्र

चित्तले उत्तम सामग्रीद्वारा देवताको पूजा गरौंला ॥ ७ ॥ स्वतिवाचनपछि हामी गाई, भूमि, सुवर्ण, रत्न वस्त्र, गज, अश्व, रथ र घर आदि ब्राह्मणलाई दान दिउँला ॥ ८ ॥ किनकि यो विधि हाम्रा सबै अरिष्ट नाश गर्ने र अत्यन्त मंगलकारी हुनेछ। देवता, ब्राह्मण र गाईको पूजा नै प्राणीका जन्मको सबभन्दा ठूलो लाभ हो ॥ ९ ॥ मधुसूदन भगवान्‌को वचन अनुसार वृद्ध यादवगणले समर्थन गरेर तुरुन्त नाउद्वारा समुद्र नाघेर रथहरूमा चढी प्रभासक्षेत्रको निम्ति हिंडे ॥ १० ॥ त्यहाँ पुगेर भगवान् कृष्णको आदेशानुसार यादवहरूले भक्तिसाथ मंगल कृत्य सम्पन्न पारे ॥ ११ ॥ तर प्रारब्धवश बुद्धि भ्रष्ट भइदिनाले तिनले जे पिएपछि कसैको पनि बुद्धि ठेगानमा रहन्न, त्यो 'मैरेय' नामको मदिरा पिए ॥ १२ ॥ त्यो तीव्र रक्सीको मातले उन्मत्त र श्रीकृष्णको मायाले मोहित ती अभिमानी यादव वीरमा परस्पर ठूलो संघर्ष उपस्थित हुन गयो ॥१३॥ अतिशय क्रोधावेशले ती आततायी यादव धनुष-वाण, खड्ग, भाला, गदा, तोमर आदि नाना थरिका अस्त्र-शस्त्रले त्यहीं समुद्रतटमा लड्न लागे ॥१४॥ हल्लिरहेको ध्वजा-पताकायुक्त

कर्ण्य यदुवृद्धा मधुद्विषः ॥ तथेति नौभिरुत्तीर्य प्रभासं प्रययू रथैः ॥ १० ॥ तस्मिन्भगवतादिष्टं यदुदेवेन यादवाः ॥ चक्रुः परमया भक्त्या सर्वश्रेयोपबृंहितम् ॥ ११ ॥ ततस्तस्मिन्महापानं पपुर्मैरेयकं मधु ॥ दिष्टविभ्रंशितधियो यद्द्रवैर्भ्रश्यते मतिः ॥ १२ ॥ महामानाभिमत्तानां वीराणां दृप्तचेतसाम् ॥ कृष्णमायाविमूढानां संघर्षः सुमहानभूत् ॥ १३ ॥ युयुधुः क्रोधसंरब्धा वेलायामाततायिनः ॥ धनुर्भिरसिभिर्भल्लैर्गदाभिस्तोमरर्ष्टिभिः ॥१४॥ पतत्पताकै रथकुञ्जरादिभिः खरोष्ट्रगोभिर्महिषैर्नरैरपि ॥ मिथः समेत्याश्वतरैः सुदुर्मदा न्यहञ्छरैर्दद्भिरिव द्विपा वने ॥ १५ ॥ प्रद्युम्नसाम्बौ युधि रूढमत्सरावक्रूरभोजावनिरुद्धसात्यकी ॥ सुभद्रसंग्रामजितौ सुदारुणौ गदौ सुमित्रासुरथौ समीयतुः ॥ १६ ॥ अन्ये च ये निशठोल्मुकादयः सहस्रजिच्छतजिद्भानुमुख्याः ॥ अन्यान्यमासाद्य मदान्धकारिता जघ्नुर्मुकुन्देन विमोहिता भृशम् ॥ १७ ॥ दाशार्हवृष्ण्यन्धकभोजसात्वता मध्वर्बुदा माथुरशूरसेनाः ॥ विसर्जनाः कुकुराः कुन्तयश्च मिथस्ततस्तेऽथ विसृत्य सौहृदम् ॥ १८ ॥ पुत्रा अयुध्यन्पितृभिर्भ्रातृभिश्च स्वस्रीयदौहित्रपितृव्यमातुलैः ॥ मित्राणि मित्रैः सुहृदः सुहृद्भिर्ज्ञातींस्त्वहञ्ज्ञातय एव मूढाः ॥ १९ ॥ शरेषु क्षीयमाणेषु भज्यमानेषु धन्वसु ॥ शस्त्रेषु क्षीयमाणेषु

रथ, हात्ती, गदहा, ऊँट, राँगो, खच्चर र मनुष्यका साथ परस्पर लडेर ती मतवाला यादव वनमा परस्पर दन्त-प्रहार गरेर जुध्ने हात्तीहरू झैं आपसमा लड्न लागे ॥ १५ ॥ त्यस बन्धु-युद्धमा प्रद्युम्न, साम्ब, अक्रूर, भोज, अनिरुद्ध, सात्यकि, दारुण योद्धा सुभद्र, संग्रामजित, गद, सुमित्र र सुरथ—यी सबै वीर परस्पर अत्यन्त आवेशले भिड्दा भए ॥१६॥ यी बाहेक निशठ, उल्मुक, सहस्रजित, शतजित र भानु आदि जो अरु वीर थिए, ती पनि भगवान्‌की मायाले मोहित र मदले अन्धा भएर यौटाले अर्कोलाइ मार्न लागे ॥ १७ ॥ दाशार्ह, वृष्णि, अन्धक, भोजन, सात्वत, मधु, अर्बुद, माथुर, शूरसेन, विसर्जन, कुकुर र कुन्ति आदि कुलका पनि स्नेह त्यागेर लड्न लागे ॥१८॥ त्यस बेला मदिरा-पानले उन्मत्त भएर पिता-पुत्र सित, दाजू भाइसित, हजुरबाबा नानीसित, काका भतीजासित, मामा भान्जासित लड्न लागे। त्यसै गरी मित्रसित मित्र र बन्धुसित बन्धुजन भिडेर सबै सजाती आफना सजातिसित हानाहान गर्न लागे ॥ १९ ॥ लड्दा-लड्दा जब बाण सकिए, धनु भाँचिए र सबै शस्त्र समाप्त भए, तब तिनले मुठिमा भरि-भरिकन समुद्र तटमा मुसलको

1379

धूलोले उत्पन्न 'एरक' नामको झार उखेले ॥२०॥ तिनको मुठीमा पएर ती झार लौहदण्ड तथा वज्र झैं कठोर भए। रोषमा भरिएका यादव त्यसैले प्रहार गर्न लागे र जब श्रीकृष्णचन्द्रले तिनलाई रोके तब ती उनलाई पनि मार्न उद्यत भए ॥२१॥ हे राजन् ! ती मूढबुद्धि आततायीहरूले बलरामजीलाई पनि आफ्नू शत्रु मानेर ती उनलाई पनि मार्नका उल्टो विचारले हमला गरे ॥२२॥ हे कुरुनन्दन ! अनि कृष्ण र बलदेव पनि क्रोधमा भरिएर युद्धमा छेकारो मार्दै, छल्दै त्यो तरवारे मारझो मुष्टिकारूपी लौहदण्डले उनीमाथि प्रहार गर्न लागे ॥ २३ ॥ जस्तै बाँसको वन दावानलले पोलेर खरानी पार्दछ,त्यस्तै ब्रह्मशापले ग्रस्त र श्रीकृष्णकी मायाले मोहित ती यादवहरूको स्पर्धा जायमान रिसले तिनलाई ध्वस्त पाऱ्यो ॥ २४ ॥ आफ्ना सबै स्वजन नष्ट भइसकेपछि भगवानूले ठान्नुभयो—अब पृथ्वीको शेषभार पनि हलुगियो ॥ २५ ॥ उता बलरामले त्यहीं समुद्रतटमा परम-पुरुषको चिन्तनरूपी योगको आश्रय लिएर आफ्नू आत्माको आत्मा अर्थात् त्यसको शुद्धस्वरूपमा स्थिर गरेर मानव शरीर त्यागिदिए॥२६॥बलरामले परमपद प्राप्त गरेका देखेर श्रीकृष्ण पनि देदीप्यमान

मुष्टिभिर्जहुरेरकाः ॥ २० ॥ ता वज्रकल्पा ह्यभवन्परिघा मुष्टिना भृताः ॥ जघ्नुर्द्विषस्तैः कृष्णेन वार्यमाणास्तु तं च ते ॥ २१ ॥ प्रत्यनीकं मन्यमाना बलभद्रं च मोहिताः ॥ हन्तुं कृतधियो राजन्नापन्ना आततायिनः ॥ २२ ॥ अथ तावपि संक्रुद्धावुद्यम्य कुरुनन्दन ॥ एरकामुष्टिपरिघौ चरन्तौ जघ्नतुर्युधि ॥ २३ ॥ ब्रह्मशापोपसृष्टानां कृष्णमायावृतात्मनाम् ॥ स्पर्धाक्रोधः क्षयं निन्ये वैणवोऽग्निर्यथा वनम् ॥ २४ ॥ एवं नष्टेषु सर्वेषु कुलेषु स्वेषु केशवः ॥ अवतारितो भुवो भार इति मेनेऽवशेषितः ॥ २५ ॥ रामः समुद्रवेलायां योगमास्थाय पौरुषम् ॥ तत्याज लोकं मानुष्यं संयोज्यात्मानमात्मनि ॥ २६ ॥ रामनिर्याणमालोक्य भगवान् देवकीसुतः ॥ निषसाद धरोपस्थे तूष्णीमासाद्य पिप्पलम् ॥ २७ ॥ बिभ्रच्चतुर्भुजं रूपं भ्राजिष्णु प्रभया स्वया ॥ दिशो वितिमिराः कुर्वन्विधूम इव पावकः ॥ २८ ॥ श्रीवत्साङ्कं घनश्यामं तप्तहाटकवर्चसम् ॥ कौशेयाम्बरयुग्मेन परिवीतं सुमङ्गलम् ॥ २९ ॥ सुन्दरस्मितवक्त्राब्जं नीलकुन्तलमण्डितम् ॥ पुण्डरीकाभिरामाक्षं स्फुरन्मकरकुण्डलम् ॥ ३० ॥ कटिसूत्रब्रह्मसूत्रकिरीटकटकाङ्गदैः ॥ हारनूपुरमुद्राभिः कौस्तुभेन विराजितम् ॥ ३१ ॥ वनमालापरीताङ्गं मूर्तिमद्भिर्निजायुधैः ॥ कृत्वोरौ दक्षिणे पादमासीनं पङ्कजारुणम् ॥ ३२ ॥ मुसलावशेषायः खण्डकृतेषुर्लुब्धको जरा ॥ मृगास्याकारं तच्चरणं विव्याध मृगशङ्कया ॥ ३३ ॥ चतुर्भुजं तं पुरुषं दृष्ट्वा स कृत-

चतुर्भुज रूप धारण गरेर आफ्नू दिव्य कान्तिले दसै दिशाहरू आलोकित पार्दै र धूम्रविहीन अग्नि झैं सुशोभित हुँदै पीटा ठूलो पीपलको वृक्ष मुनि भूमिमै शान्तभावले एकदम चुपचाप बसे ॥ २७ ॥ २८ ॥ भगवानूको त्यो मंगलमय स्वरूप जलपूर्ण मेघको समान श्यामवर्ण, श्रीवत्स चिह्नले सुशोभित एवं रेशमी पीताम्बरले विभूषित हुनाले तताएको सुवर्णसमान देदीप्यमान भइरहेको थियो ॥ २९ ॥ उनको स्वरूप मनोहर मुसकान युक्त मुखकमल हुने, नीलो अलकावलीले सुशोभित, कमलदल झैं अत्यन्त सुन्दर नेत्रयुक्त तथा झलमलाउँदो मकराकृति कुण्डल सहित थियो ॥ ३० ॥ भगवानूको त्यो मंगलमय शरीर कन्धनी, यज्ञोपवीत, मुकुट, कङ्कण, भुजबन्द, हार, नूपुर, औंठी वनमाला, कौस्तुभमणिले सुशोभित थियो॥३१॥ भगवानूको सर्वाङ्गमा वनमाला शोभित थियो र शङ्ख, चक्र, गदा, पद्म आदि आयुध मूर्तिमान भएर सेवामा उपस्थित थिए। त्यसवेला भगवान् आफ्नू रक्तकमल

सदृश बायाँ चरण दाहिने तिघ्रामा राखेर पल्टेका थिए ॥३२॥ उसै बेला जरा नामको व्याधा जसले माछाको पेटबाट प्राप्त मुसलको शेष टुक्राले आफ्नू वाणको टुप्पा बनाएको थियो- मृगको मुख झैं आकार हुने भगवान्‌को चरणलाई मृग ठानेर त्यही बाणले हिर्कायो ॥३३॥ नजीकै पुगेपछि ती चतुर्भुज रूपधारी कृष्णलाई देखेर आफूलाई अपराधी ठानेर डरले काम्दै दैत्य-दलन भगवान्‌का चरणमा लम्पसार पर्‍यो ॥ ३४ ॥ उसले भन्यो–'हे मधुसूदन ! म पापीले थाहा नपाएर धेरै ठूलो अपराध गरिदिएँ । हे उत्तम श्लोक ! हे अनघ ! म हजुरको अपराधी हुँ, हजुर कृपा गरेर मलाई क्षमा गरिदिनोस् ॥३५॥ हे प्रभो ! जसको स्मरण मनुष्यको अज्ञानान्धकार नाशक कहिन्छ । अरे ! उनै हजुरलाई मैले यस्तो अहित गरें ॥३६॥ हे वैकुण्ठनाथ ! म निरपराध मृगको बधिक र महापापी हुँ । हजुर शीघ्र मलाई मारिदिनोस्-जसले फेरि मद्वारा अन्य महापुरुषको कुनै अपराध नहोओस् ॥३७॥ आत्मयोगले रचित जसको सृष्टि ब्रह्मा र उनका पुत्र रुद्रादि पनि जो सबै विद्याका पारदर्शी छन्, जान्दैनन् । किनकि उनको दृष्टि पनि हजुरको मायाले आवृत रहन्छ । अनि म त स्वभावैले पापी हुँ–

किल्बिषः ॥ भीतः पपात शिरसा पादयोरसुरद्विषः ॥ ३४ ॥ अजानता कृतमिदं पापेन मधुसूदन ॥ क्षन्तुमर्हसि पापस्य उत्तमश्लोक मेऽनघ ॥३५॥ यस्यानुस्मरणं नृणामज्ञानध्वान्तनाशनम् ॥ वदन्ति तस्य ते विष्णो मयाऽसाधु कृतं प्रभो ॥३६॥ तन्माऽऽशु जहि वैकुण्ठ पाप्मानं मृगलुब्धकम् ॥ यथा पुनरहं त्वेवं न कुर्यां सदतिक्रमम् ॥३७॥ यस्यात्मयोगरचितं न विदुर्विरिञ्चो रुद्रादयोऽस्य तनयाः पतयो गिरां ये ॥ त्वन्मायया पिहितदृष्टय एतदञ्जः किं तस्य ते वयमसद्गतयो गृणीमः ॥ ३८ ॥ श्रीभगवानुवाच ॥ मा भैर्जरे त्वमुत्तिष्ठ काम एष कृतो हि मे ॥ याहि त्वं मदनुज्ञातः स्वर्गं सुकृतिनां पदम् ॥ ३९ ॥ श्रीशुक उवाच ॥ इत्यादिष्टो भगवता कृष्णेनेच्छाशरीरिणा ॥ त्रिः परिक्रम्य तं नत्वा विमानेन दिवं ययौ ॥ ४० ॥ दारुकः कृष्णपदवीमन्विच्छन्नधिगम्य ताम् ॥ वायुं तुलसिकामोदमाघ्रायाभिमुखं ययौ ॥ ४१ ॥ तं तत्र तिग्मद्युभिरायुधैर्वृतं ह्यश्वत्थमूले कृतकेतनं पतिम् ॥ स्नेहप्लुतात्मा निपपात पादयो रथादवप्लुत्य स वाष्पलोचनः ॥ ४२ ॥ अपश्यतस्त्वच्चरणाम्बुजं प्रभो दृष्टिः प्रणष्टा तमसि प्रविष्टा ॥ दिशो न जाने न लभे च शान्तिं यथा निशायामुडुपे प्रणष्टे ॥ ४३ ॥ इति ब्रुवति सूते वै रथो गरुडलाञ्छनः ॥ खमुत्पपात

अनि म त्यसको विषयमा के भन्न सक्छु ? ॥ ३८ ॥ भगवान्‌ले भन्नुभयो–ए जरा ! तँ नडरा, उठ, यो सबै मेरै इच्छाले भएको हो । अब तँ मेरो आज्ञाले पुण्यजनलाई प्राप्य स्थान स्वर्ग जा ॥ ३९ ॥ श्रीशुकदेव भन्नुहुन्छ–स्वेच्छा शरीर धारी भगवान्‌को यस्तो आदेश पाएर जरा व्याधाले प्रभुको तीन परिक्रमा गर्‍यो र उनलाई प्रणाम गरेपछि त्यो विमानमा बसेर स्वर्गधाम गयो ॥४०॥ यता भगवान् कृष्णका सारथि दारुक उनका चरण-चिह्न खोज्दै-हेर्दै पत्ता पाएर तुलसीको बास्नाले युक्त वायुलाई सामुन्ने तान्दै उतैतिर आइपुग्यो ॥४१॥ आफ्ना स्वामीलाई पीपल अश्वत्थ-वृक्षको तल आसन जमाई तीव्र तेजोमय मूर्तिमान् विविध आयुधले घेरिएका देखेर दारुक रथबाट तल ओर्लिए । उनका आँखामा आँसु भरिए र ऊ प्रेम विवश भएर प्रभुका चरणमा लम्पसार भए ॥४२॥ उनले भने—'हे प्रभो ! रात्रिको बेला चन्द्रमा अस्ताएपछि संसारको जुन दशा हुन्छ, त्यस्तै हजुरका चरण-कमल देख्न र उनले मेरो दृष्टि नष्ट भइरहेको छ र घोर अन्धकारले ढाकिएको छ । म दिशाहरू बिर्सिरहेको छु र मलाई शान्ति प्राप्त भइरहेको छैन' ॥४३॥ हे राजेन्द्र ! जब सारथि दारु कयति भन्दै थियो,

उसै बेला गरुड चिह्नले सुशोभित भगवान्‌को रथ–घोडाहरू समेत उनले देख्दा-देख्दै आकाशमा उडेर गयो ॥ ४४ ॥ त्यसैको पछि-पछि दिव्य आयुधहरू पनि गए । त्यो देखेर निकै छक्क परेको सारथिसित श्रीकृष्णचन्द्रले भन्नुभयो–॥४५॥ हे सूत ! अब तिमी द्वारकापुरी जाऊ र हाम्रा बन्धु-बान्धवहरूलाई यादवहरूको विध्वंस, बलरामको परमगति तथा मेरो दुर्दशाको सबै हालत सुनाऊ ॥४६॥ अब तिमीहरू पनि आफ्ना बन्धु-बान्धवसहित द्वारकामा नबस्नु, किनकि मैले त्यागेकी यदुपुरीलाई समुद्र शीघ्र बगाएर लैजाने छ ॥४७। अतः सबै जना आ-आफ्ना धन, कुटुम्ब, माता-पिता सबैलाई लिई अर्जुनद्वारा रक्षित भएर इन्द्रप्रस्थ जाओ ॥ ४८ ॥ तिमी मेरो भागवत धर्मको पालन गर्दै ज्ञाननिष्ठ तथा निरपेक्ष भएर यो सम्पूर्ण प्रपञ्च मेरी मायाको रचना जान र शान्ति प्राप्त गर ॥४९॥ भगवान्‌को वचन सुनेर दारुकले बारम्बार उनको परिक्रमा गरेर चरणमा मस्तक राखी प्रणाम गरेपछि अतिशय खिन्न मनले द्वारकापुरी फर्किए ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं० गौरीशंकर वसिष्ठकृत नेपाली भाषाटीकायां त्रिंशोऽध्यायः ॥३० ।

राजेन्द्र सार्क्ष्यध्वज उदीक्षतः ॥ ४४ ॥ तमन्वगच्छन्दिव्यानि विष्णुप्रहरणानि च ॥ तेनातिविस्मितात्मानं सूतमाह जनार्दनः ॥४५॥ गच्छ द्वारवतीं सूत ज्ञातीनां निधनं मिथः ॥ सङ्कर्षणस्य निर्याणं बन्धुभ्यो ब्रूहि मद्दशाम् ॥ ४६ ॥ द्वारकायां च न स्थेयं भवद्भिश्च स्वबन्धुभिः ॥ मया त्यक्तां यदुपुरीं समुद्रः प्लावयिष्यति ॥ ४७ ॥ स्वं स्वं परिग्रहं सर्वे आदाय पितरौ च नः ॥ अर्जुनेनाविताः सर्व इन्द्रप्रस्थं गमिष्यथ ॥ ४८ ॥ त्वं तु मद्धर्ममास्थाय ज्ञाननिष्ठ उपेक्षकः ॥ मन्मायारचनामेतां विज्ञायोपशमं व्रज ॥ ४९ ॥ इत्युक्तस्तं परिक्रम्य नमस्कृत्य पुनः पुनः ॥ तत्पादौ शीर्ष्ण्युपाध्याय दुर्मनाः प्रययौ पुरीम् ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे त्रिंशोऽध्यायः ॥ ३० ॥

श्रीशुक उवाच ॥ अथ तत्रागमद्ब्रह्मा भवान्या च समं भवः॥ महेन्द्रप्रमुखा देवा मुनयः सप्रजेश्वराः ॥१॥ पितरः सिद्धगन्धर्वाविद्याधरमहोरगाः ॥ चारणा यक्षरक्षांसि किन्नराप्सरसो द्विजाः ॥२॥ द्रष्टुकामा भगवतो निर्याणं परमोत्सुकाः ॥ गायन्तश्चगृणन्तश्च शौरेः कर्माणि जन्म च ॥३॥ववृषुः पुष्पवर्षाणि विमानावलिभिर्नभः ॥ कुर्वन्तः संकुलं राजन्भक्त्या परमया युताः ॥ ४ ॥ भगवान्पितामहं वीक्ष्य विभूतीरात्मनो विभुः ॥ संयोज्यात्मनि

( श्री भगवान्‌को स्वधाम प्रस्थान ) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! त्यसपछि ब्रह्माजी, भवानी सहित भगवान् शङ्कर, लोकपाल आदि देवता, प्रजापतिहरू समेत अनेक मुनिजन, पितर, सिद्ध, गन्धर्व, विद्याधर, नाग, चारण, यक्ष, राक्षस, किन्नर, अप्सरा तथा द्विजगण भगवान्‌को परमधाम-गमन हेर्नको निम्ति परम उत्सुक भएर उनको जन्म-कर्मको गान गर्दै त्यहाँ उपस्थित भए। ती आफ्ना विमानद्वारा सारा नभमण्डल परिपूर्ण पार्दै ठूलो भक्तिले भगवान्‌माथि पुष्पवर्षा गर्न लागे ॥१-४॥ अनि सर्वव्यापक भगवान् कृष्णले पितामह ब्रह्माजी तथा आफ्ना अन्यान्य विभूति देखेर आफ्नू आत्मालाई स्वरूपमा स्थित गरेर आँखा चिम्लनुभयो ॥ ५ ॥ धारणा र ध्यानको निम्ति अतिशय मङ्गलमय

आफ्नु लोकाभिराम दिव्य देहलाई योगाग्निले भस्म पारेर भगवान् आफ्नु वैकुण्ठ लोकमा प्रवेश गर्नुभयो ॥६॥ त्यस वेला स्वर्गलोकमा नगरा बज्न लागे र आकाशबाट पुष्पवर्षा हुनलाग्यो । हे राजन ! श्रीकृष्ण भगवान्को पछि-पछि यस लोकबाट सत्य, धर्म, धैर्य, कीर्ति र श्रीदेवी पनि गइन् ॥७॥ भगवान श्रीकृष्णको गति मन र वाणीले पनि नभेट्टाउने छ, त्यसैले त जब भगवान् आफ्नु धाममा प्रवेश गर्नलागे तब ब्रह्मादि देवताले पनि उनलाई देख्न पाएनन् । यस घटनाले उनलाई निकै ठूलो विस्मय भयो ॥ ८ ॥ जस्तै बिजुली जब मेघमण्डललाई छाडेर आकाशमा प्रवेश गर्दछ, तब मनुष्य त्यसको गति देख्न पाउन्नन्, त्यस्तै—ठूला-ठूला देवताले पनि प्रभुको सम्बन्धमा केही जान्न सकेनन् ॥ ९ ॥ ब्रह्मा र शङ्कर आदि देवता भगवानको यो परमोपयोगी गति देखेर आश्चर्य मान्दै उसको प्रशंसा गर्दै आफआफ्नु लोकमा फर्किए ॥ १० ॥ हे परीक्षित् ! जस्तै नट अनेक थरिका रूप-स्वाँग बनाउँछ, तर आफू त्यसबाट निर्लिप्त रहन्छ, त्यस्तै भगवान्ले मनुष्यको समान जन्म लिनु, लीला गर्नु र फेरि उसलाई संवरण पार्नु उनको मायाको विस्तार मात्र हो—अभिन

चात्मानं पद्मनेत्रे न्यमीलयत् ॥५॥ लोकाभिरामां स्वतनुं धारणाध्यानमङ्गलाम् ॥ योगधारणयाग्नेय्या दग्ध्वा धामाविशत्स्वकम् ॥६॥ दिवि दुन्दुभयो नेदुः पेतुः सुमनसश्च खात् ॥ सत्यं धर्मो धृतिर्भूमेः कीर्तिः श्रीश्चानु तं ययुः ॥ ७ ॥ देवादयो ब्रह्ममुख्या न विशन्तं स्वधामनि ॥ अविज्ञातगतिं कृष्णं ददृशुश्चातिविस्मिताः ॥ ८ ॥ सौदामन्या यथाऽऽकाशे यान्त्या हित्वाभ्रमण्डलम् ॥ गतिर्न लक्ष्यते मर्त्यैस्तथा कृष्णस्य दैवतैः ॥ ९ ॥ ब्रह्म-रुद्रादयस्ते तु दृष्ट्वा योगगतिं हरेः ॥ विस्मितास्तां प्रशंसन्तः स्वं स्वं लोकं ययुस्तदा ॥ १० ॥ राजन् परस्य तनुभृज्जननाप्ययेहा मायाविडम्बनमवेहि यथा नटस्य ॥ सृष्ट्वाऽऽत्मनेदमनुविश्य विहृत्य चान्ते संहृत्य चात्ममहिमोपरतः स आस्ते ॥११॥ मर्त्येन यो गुरुसुतं यमलोकनीतं त्वां चानयच्छरणदः परमास्त्रदग्धम् ॥ जिग्येऽन्तकान्तकमपीशमसावनीशः किं स्वावने स्वरनयन्मृगयुं सदेहम् ॥ १२ ॥ तथाप्यशेषस्थितिसम्भवाप्ययेष्वनन्यहेतुर्यदशेष-शक्तिधृक् ॥ नैच्छत् प्रणेतुं वपुरत्र शेषितं मर्त्येन किं स्वस्थगतिं प्रदर्शयन् ॥ १३ ॥ य एतां प्रातरुत्थाय कृष्णस्य पदवीं पराम् ॥ प्रयतः कीर्तयेद्

मात्र हो ! ती स्वयं यस जगत्को सृष्टि गरेर यसमा प्रवेश गरी विहार गर्दछन् र अन्त्यमा संहार-लीला गरेर आफ्नु अनन्त महिमामय स्वरूपमा नै स्थित हुन्छन ॥ ११ ॥ सान्दीपनी गुरुका पुत्र यमपुरी गएका थिए, तर उसलाई मनुष्य देहले फर्काए ल्याए । तिम्रो नै देह ब्रह्मास्त्रले डढिसकेको थियो, तर उनले तिमीलाई जीवित पारिदिए । वास्तवमा उनको शरणागतवत्सलता यस्तै छ । बरो के भनौं—उनले कालका पनि महाकाल शंकरलाई पनि युद्धमा जिते र अत्यन्त अपराधी आफ्नै देहमा प्रहार गर्ने व्याधालाई पनि सदेह स्वर्ग पठाए भने के ती आफ्नु शरीर यहाँ राख्न सक्तैनथे—अवश्य सक्थे ॥ १२ ॥ यद्यपि श्रीकृष्ण जगत्को स्थिति, उत्पत्ति र संहारका निरपेक्ष कारण हुन र सर्व शक्तिहरू धारण गर्न हुन्, तर उनले आफ्नो शरीर यस संसारमा बचाइराख्ने इच्छा गरेनन् । यसले यो दर्शाए—यो मनुष्य देहले मलाई के प्रयोजन छ ॥ १३ ॥ जो व्यक्ति बिहानै उठेर यो भगवान्को

परमधाम गमनको कथा भन्छ वा सुन्दछ, उसलाई प्रभुका पदमरद प्राप्त हुन्छ ॥१४॥ यता दारुक श्रीकृष्णको विरहले व्याकुल भएर द्वारका आयो र वसुदेव तथा उग्रसेनका पाउमा न्यूरेर आँसुले उनका पाउ पखाल्न लाग्यो ॥१५॥ उसले धैर्य धारण गरेर यदुवंशीहरूको विनाश सुनायो। त्यो सुनेर अनेक व्यक्ति शहले मूर्च्छा परे ॥ १६ ॥ श्रीकृष्णको विरहले विह्वल भएर छाती र शिर ठटाउँदै वहाँ पुगे–जहाँ तिनका बन्धु निष्प्राण ढलिरहेका थिए ॥१७॥ देवकी, रोहिणी रवसुदेव प्रियपुत्र राम र कृष्णलाई नदेखेर पीडाले बेहोश भए ॥१८॥ तिनले प्रभुको विरहमा त्यहीं प्राण छाडिदिए। स्त्रीहरूले आफ्आफ्ना पतिको शव चिनेर उनैसित गए ॥ १९ ॥ बलरामकी पत्नीहरू, वसुदेवका समस्त स्त्रीहरू, भगवानका बुहारीहरू आफ्आफ्ना पतिको देह सहित अग्नि-प्रवेश गरे। भगवानका रुक्मिणी आदि रानीहरू उनैलाई सम्झी अग्निमा पसे ॥ २० ॥ हे राजन् ! अर्जुन आफ्ना प्रियतम श्रीकृष्णको

भक्त्या तामेवाप्नोत्यनुत्तमाम् ॥१४॥दारुकोद्वारकामेत्य वसुदेवोग्रसेनयोः॥ पतित्वा चरणावस्रैर्न्यषिञ्चत् कृष्णविच्युतः॥१५॥ कथयामास निधनं वृष्णीनां कृत्स्नशो नृप ॥ तच्छ्रुत्वोद्विग्नहृदया जनाः शोकविमूर्च्छिताः ॥ १६ ॥ तत्र स्म त्वरिता जग्मुः कृष्णविश्लेषविह्वलाः ॥ व्यसवः शेरते यत्र ज्ञातयो घ्नन्त आननम्॥१७॥ देवकी रोहिणी चैव वसुदेवस्तथा सुतौ ॥ कृष्णरामावपश्यन्तः शोकार्ता विजहुः स्मृतिम् ॥१८॥ प्राणांश्च विजहुस्तत्र भगव- द्विरहातुराः ॥ उपगुह्य पतींस्तात चितामारुरुहुः स्त्रियः ॥ १९ ॥ रामपत्न्यश्च तद्देहमुपगुह्याग्निमाविशन् ॥ वसुदेवपत्न्यस्तद्गात्रं प्रद्युम्नादीन् हरेः स्नुषाः ॥ कृष्णपत्न्योऽविशन्नग्निं रुक्मिण्याद्यास्तदात्मिकाः ॥२०॥ अर्जुनः प्रेयसः सख्युः कृष्णस्य विरहातुरः ॥ आत्मानं सान्त्वयामास कृष्ण- गीतैः सदुक्तिभिः ॥ २१ ॥ बन्धूनां नष्टगोत्राणामर्जुनः साम्परायिकम् ॥ हतानां कारयामास यथावदनुपूर्वशः ॥२२॥ द्वारकां हरिणा त्यक्तां समुद्रो- ऽप्लावयत्क्षणात् ॥ वर्जयित्वा महाराज श्रीमद्भगवदालयम् ॥ २३ ॥ नित्यं संनिहितस्तत्र भगवान् मधुसूदनः ॥ स्मृत्याशेषाशुभहरं सर्वमङ्गल- मङ्गलम् ॥ २४ ॥ स्त्रीबालवृद्धानादाय हतशेषान् धनंजयः ॥ इन्द्रप्रस्थं समावेश्य वज्रं तत्राभ्यषेचयत् ॥२५॥ श्रुत्वा सुहृद्वधं राजन्नर्जुनात्ते पितामहाः

वियोगले व्याकुल भए पनि उनकै गीताको उपदेश स्मरण गरेर आफूलाई सम्हाले ॥ २१ ॥ यदुवंशमा मरेका जतिको पिण्ड दिने जनको कोही थिएन, तिनको श्राद्ध विधिपूर्वक अर्जुनले गराए। भगवान् नरहेपछि समुद्रले श्रीकृष्णको निवासस्थान द्वारका एक क्षण मैं डुबाइदियो ॥ २२ ॥ २३ ॥ भगवान अझ पनि त्यहाँ निवास गर्दछन्। त्यस स्थानको स्मरणले पनि पाप ताप नाश हुन्छ। हे राजन् ! पिण्डदानपछि बाँचेका स्त्री, बाल, वृद्ध सबैलाई लिएर अर्जुन इन्द्रप्रस्थ आए। त्यहाँ सबैलाई यथा-यथा स्थान बसालेर अनिरुद्धको छोरो वज्रलाई राज्याभिषेक गरिदिए ॥ २४॥२५॥ हे राजन् ! युधिष्ठिरादि पाण्डवलाई अर्जुन द्वारा नै यदुवंशीहरूको संहार थाहा भयो। अनि उनले आफ्नू वंशधर तिमीलाई राज्य-

पदमा अभिषिक्त गरेर हिमालयको वीरयात्रा गरे ।' २६ ।। मैले तिमीलाई देवताहरूका पनि आराध्यदेव भगवान श्रीकृष्णको जन्मलीला सुनाएँ। जो मनुष्य भक्तभयहारी निखिल सौन्दर्यमाधुर्यनिधि श्रीकृष्णचन्द्रका अवतार सम्बन्धी रुचिर पराक्रम र यो श्रीमद्भागवत महापुराणमा तथा अन्य पुराणहरूमा वर्णित परमानन्दमयी बाललीला, कैशोर लीला आदिको

त्वां तु वंशतरं कृत्वा जग्मुः सर्वे महापथम् ॥२६॥ य एतद् देवदेवस्य विष्णो कर्मा कर्माणि जन्म च ॥ कीर्तयेच्छ्रद्धया मर्त्यः सर्वपापैः प्रमुच्यते ॥ २७ ॥ इत्थं हरेर्भगवतो रुचिरावतारवीर्याणि बालचरितानि च शंतमानि ॥ अन्यत्र चेह च श्रुतानि गृणन् मनुष्यो भक्तिं परां परमहंसगतौ लभेत ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्त्र्यां पारमहंस्यां संहितायामेकादशस्कन्धे एकत्रिंशोऽध्यायः ॥ ३१ ॥

संकीर्तन गर्दछ, त्यो परमहंस मुनीन्द्रहरूको अन्तिम प्राप्तव्य श्रीकृष्णका चरणको पराभक्ति प्राप्त गर्दछ ॥ २७ ॥ इति श्रीमद्भागवते महापुराणे एकादशस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां एकत्रिंशोऽध्यायः ॥३१॥

॥ इत्येकादशः स्कन्धः समाप्तः ॥



1385

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते एकादशः स्कन्धः "समाप्तः"

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते द्वादशः स्कन्धः प्रारभ्यते ।

श्री हरिः। ( कलियुगका भावी राजवंशको विस्तार ) राजा परीक्षितले सोधे—हे मुने ! यदुवंश विभूषण भगवान् कृष्ण स्वधाम जानुभएपछि पृथ्वीतलमा कसको वंश शासनारूढ भयो, भन्नुहवस् ॥ १ ॥ शुकदेवजी भन्नलागे—हे राजन् ! राजा बृहद्रथको वंश। जो पुरञ्जय नामको अन्तिम नरेश हुनेछ, उसको मन्त्री शुनक आफ्नू स्वामीको वध गरेर उसैको स्थानमा आफ्नू छोरा प्रद्योतलाई राजा तुल्याउने छ। प्रद्योतको छोरो पालक, त्यसको विशाखयूप, विशाखयूपको राजक र राजकको पुत्र नन्दिवर्धन होला। यी पाँचै प्रद्योतवंशी राजाहरू एक सय अड़तीस वर्षसम्म पृथ्वीको राज्य गर्नेछन्॥२-४॥ अनि शिशुनाग नामक राजा हुनेछ। शिशुनागको काकवर्ण, उसको क्षेमवर्मा र क्षेमधर्माको क्षेत्रज्ञ छोरो होला॥५॥ क्षेत्रज्ञको पुत्र विधिसार, उसको अजातशत्रु, अजातशत्रुको दर्भक, दर्भकको अजय पुत्र होला ॥६॥ अजयको नन्दिवर्धन र उसको पुत्र महानन्दी होला। यी शिशुनागवंशी दस राजाहरू

श्रीगणेशाय नमः ॥ ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच ॥ स्वधामानुगते कृष्णे यदुवंशविभूषणे ॥ कस्य वंशोऽभवत्पृथ्व्यामेतदाचक्ष्व मे मुने ॥ १ ॥ श्रीशुक उवाच ॥ योऽन्त्यः पुरञ्जयो नाम भाव्यो बार्हद्रथो नृपः ॥ यस्यामात्यस्तु शुनको हत्वा स्वामिनमात्मजम् ॥ २ ॥ प्रद्योतसंज्ञं राजानं कर्ता यत्पालकः सुतः ॥ विशाखयूपस्तत्पुत्रो भविता राजकस्ततः ॥ ३ ॥ नन्दिवर्धनस्तत्पुत्रः पञ्च प्रद्योतना इमे ॥ अष्टत्रिंशोत्तरशतं भोक्ष्यन्ति पृथिवीं नृपाः ॥ ५ ॥ शिशुनागस्ततो भाव्यः काकवर्णस्तु तत्सुतः ॥ क्षेमधर्मा तस्य सुतः क्षेत्रज्ञः क्षेमधर्मजः ॥ ५ ॥ विधिसारः सुतस्तस्याजातशत्रुर्भविष्यति ॥ दर्भकस्तत्सुतो भावी दर्भकस्याजयः स्मृतः ॥ ६ ॥ नन्दिवर्धन आजेयो महानन्दिः सुतस्ततः ॥ शिशुनागा दशैवैते षष्ठ्युत्तरशतत्रयम् ॥ ७ ॥ समा भोक्ष्यन्ति पृथिवीं कुरुश्रेष्ठाः कलौ नृपाः ॥ महानन्दिसुतो राजञ्छूद्रीगर्भोद्भवो बली ॥८॥ महापद्मपतिः कश्चिन्नन्दः क्षत्रविनाशकृत् ॥ ततो नृपा भविष्यन्ति शूद्रप्रायास्त्वधार्मिकाः ॥ ६ ॥ स एकच्छत्रां पृथिवीमनुल्लङ्घितशासनः ॥ शासिष्यति महापद्मो द्वितीय इव भार्गव ॥ १० ॥ तस्य चाष्टौ भविष्यन्ति सुमाल्यप्रमुखाः सुताः ॥ य इमां भोक्ष्यन्ति महीं राजानः स्म शतं समाः ॥११॥ नव नन्दान्द्विजः कश्चित्प्रपन्नानुद्धरिष्यति ॥ तेषामभावे जगतीं मौर्या भोक्ष्यन्ति वै कलौ ॥ १२ ॥ स एव चन्द्रगुप्तं वै द्विजो राज्येऽभिषेक्ष्यति ॥ तत्सुतो वारिसारस्तु ततश्चाशोकवर्धनः ॥ १३ ॥ सुयशा भविता तस्य सङ्गतः सुयशः सुतः ॥ शालिशूकस्ततस्तस्य सोमशर्मा भविष्यति ॥१४॥

कलिमा तीनसय साठी वर्षसम्म पृथ्वीको राज्य गर्नेछन्। हे राजन् ! त्यसपछि शूद्राको गर्भबाट उत्पन्न महापद्मसंख्यक धनको अधिपति महानन्दीको छोरो महाबली नन्द क्षत्रियहरूको नाशक हुनेछ। त्यसपछिका सबै राजा शूद्रप्राय र अधार्मिक हुनेछन् ॥७-९॥ हे राजन् ! त्यो महापद्मको स्वामी नन्द अर्को परशुराम झैं क्षत्रियहरूको नाशक होला र पृथिवीको एकछत्र राज्य गर्नेछ। कोही पनि उसको आज्ञा उल्लंघन गर्न सक्नेछैन॥१०॥ सुमाल्यादि उसका आठ पुत्र हुनन् जो राजा भएर सय वर्षसम्म पृथ्वीको शासन गर्नेछन् ॥११॥ आफूमा विश्वास गर्ने ती नौ नन्दलाई चाँडा ( चाणक्य ) ब्राह्मणले समूल नष्ट पार्नेछ। तिनको उच्छेदनपछि यस पृथ्वीमा कलियुगमै मौर्यवंशी राजा राज्य गर्नेछन् ॥ १२ ॥ त्यो ब्राह्मण नै चन्द्रगुप्त मौर्यलाई राज्य सिंहासनमा बसाल्ने छ। चन्द्रगुप्तको पुत्र वारिसार र वारिसारको पुत्र अशोकवर्धन होला। अशोकवर्धनको सुयश, सुयशको संगत, संगतको शालिशूक,

1388

शालिशूकको सोमशर्मा, सोमशर्माको शतधन्वा र शतधन्वाको बृहद्रथ पुत्र हुनेछ । हे राजा परीक्षित् ! यी मौर्यवंशी राजा कलिमा एक सय तीस वर्षसम्म पृथिवीको राज्य भोग्नेछन् । बृहद्रथको पुत्र अग्निमित्र, उसको पुत्र सुज्येष्ठ हुनेछ ॥ १३–१६ ।. अनि क्रमशः वसुमित्र, भद्रक र पुलिन्द नामका राजा हुनन् । पुलिन्दका घोष, घोषका वज्रमित्र, उनका भागवत र भागवतका पुत्र देवभूति हुनन् । यी दस शुंगवंशी राजा सय वर्षभन्दा पनि बढी समयसम्म पृथ्वीको राज्य गर्न छन् ॥१७॥१८॥ हे राजन् ! त्यसपछि यो भूमि अल्पगुणी कण्वसंज्ञक राजाहरूको हातमा जानेछ । हे राजन् ! आफ्नो स्त्री लम्पट स्वामी शुङ्गवंशी राजा देवभूतिलाई मारेर उसको बुद्धिमान् मन्त्री वसुदेवकण्व स्वयं राज्य गर्नेछ । वसुदेवको पुत्र भूमित्र, भूमित्रको छोरो नारायण र नारायणको पुत्र सुशर्मा नाम प्रख्यात हुनेछ ॥ १९ ॥ २० ॥ यी चार कण्ववंशी राजा कलिमा तीन सय पैंतालीस वर्ष पृथ्वीको

शतधन्वा ततस्तस्य भविता तद्बृहद्रथः ॥ मौर्या ह्येते दश नृपाः सप्तत्रिंशच्छतोत्तरम् ॥ १५ ॥ समा भोक्ष्यन्ति पृथिवीं कलौ कुरुकुलोद्वह ॥ अग्निमित्रस्ततस्तस्मात्सुज्येष्ठोऽथ भविष्यति ॥ १६ ॥ वसुमित्रो भद्रकश्च पुलिन्दो भविता ततः ॥ ततो घोषः सुतस्तस्माद्वज्रमित्रो भविष्यति ॥ १७ ॥ ततो भागवतस्तस्माद्देवभूतिरिति श्रुतः ॥ शुङ्गा दशैते भोक्ष्यन्ति भूमिं वर्षशताधिकम् ॥ १८ ॥ ततः कण्वानियं भूमिर्यास्यत्यल्पगुणान्नृप ॥ शुङ्गं हत्वा देवभूतिं कण्वोऽमात्यस्तु कामिनम् ॥ १९ ॥ स्वयं करिष्यते राज्यं वसुदेवो महामतिः ॥ तस्य पुत्रस्तु भूमित्रस्तस्य नारायणः सुतः ॥ नारायणस्य भविता सुशर्मा नाम विश्रुतः ॥ २० ॥ काण्वायना इमे भूमिं चत्वारिंशच्च पञ्च च ॥ शतानि त्रीणि भोक्ष्यन्ति वर्षाणां च कलौ युगे ॥ २१ ॥ हत्वा कण्वं सुशर्माणं तद्भृत्यो वृषलो बली ॥ गां भोक्ष्यत्यन्ध्रजातीयः कञ्चित्कालमसत्तमः ॥२२॥ कृष्णनामाथ तद्भ्राता भविता पृथिवीपतिः ॥ श्रीशान्तकर्णस्तत्पुत्रः पौर्णमासस्तु तत्सुतः ॥ २३ ॥ लम्बोदरस्तु तत्पुत्रस्तस्माच्चिबिलको नृपः ॥ मेघस्वातिश्चिबिलकादटमानस्तु तस्य च ॥ २४ ॥ अनिष्टकर्मा हालेयस्तलकस्तस्य चात्मजः ॥ पुरीषभीरुस्तत्पुत्रस्ततो राजा सुनन्दनः ॥ २५ ॥ चकोरो नवमो यत्र शिवस्वातिररिन्दम ॥ तस्यापि गोमतीपुत्रः पुरीमान्भविता ततः ॥ २६ ॥ मेदःशिराः शिवस्कन्दो यज्ञश्रीस्तत्सुतस्ततः ॥ विजयस्तत्सुतो भाव्यश्चन्द्रविज्ञः सलोमधिः ॥ २७ ॥ एते त्रिंशन्नृपतयश्चत्वार्यब्दशतानि च ॥ षट्पञ्चाशच्च पृथिवीं भोक्ष्यन्ति कुरुनन्दन ॥ २८ ॥

भोग गर्नेछन् ॥२१॥ हे राजन् ! तब ती कण्ववंशी राजा सुशर्मालाई मारेर उसको सेवक आन्ध्रजातीय बलि नामक दुष्ट शूद्र केही दिन स्म स्वयं पृथ्वीको राज्य गर्नेछ ॥२२॥ अनि उसको भाई कृष्ण राजा होला । कृष्णको पुत्र शान्तकर्ण र शान्तकर्णको छोरो पौर्णमास हुनेछ ॥ २३ ॥ पौर्णमासको लम्बोदर, उसको राजा चिबिलक, त्यसको मेघस्वाती, मेघस्वातिको अटमान, उसको अनिष्टकर्मा, अनिष्टकर्माका हालेय, पुत्र हुनन् । अनि उसका तलक, तलकका पुरुषभीरु र उनका राजा सुनन्द नामक पुत्र हुनन् ॥२४॥ २५ ॥ हे शत्रुदमन ! सुनन्दका पुत्र चकोर हुनन् र चकोरका नौ पुत्र जन्मनन्, जसमा नवौं पुत्र शिवस्वाति हुनेछन् । ती शिवस्वातिका गोमती तथा उनका पुरीमान नामक पुत्र हुनन् । पुरीमान्‌का मेदः उसका शिवस्कन्द, तिनका यज्ञश्री, यज्ञश्रीका विजय, विजयका चन्द्रविज्ञ, उनका सलोमधि नामका पुत्र हुन्न् ॥ २६ ॥ २७ ॥

1389

हे कुरुनन्दन ! यी तीस राजा चार सय छपन्न वर्षसम्म राज्य गर्नेन् ॥२८॥ अनि अवभृतिपुरीका निवासी अत्यन्त लोभी सात अभीर, दस गर्दभी र सोह्र कङ्क जातका राना हुनन् ॥२९॥ आठ यवन, चौद्ध तुरुष्क, दस गुरुण्ड र एघार मौनजातिका राजा हुनन् ॥३०॥ मौनहरू बाहेक सबै राजा एक हजार उनान्सय वर्ष पृथिवीको भोग गर्नेछन् । मौनहरूको अन्त्य भएपछि किलकिला नामक नगरीमा भूतनन्द, वङ्गिरीको भाई शिशुनन्दि र यशोनन्दि, प्रवीरक—यी राजा एक सय छ वर्षसम्म राज्य गर्नेन् ॥ ३१-३३ ॥ इनका बाह्लिक नामक तेह्र पुत्र हुनन् । अनि पुष्यमित्र नामक क्षत्रिय र उसको पुत्र दुर्मित्र पृथिवीको भोग गर्नेछ ॥ ३४ ॥ हे राजन् ! बाह्लिकवंशी राजाहरूमध्ये एकैपल्ट सात देशका अधिपति हुनन् र केही विदूरपति, केही निषधदेशका राजा हुनन् ॥ ३५ ॥ मगधदेशमा विश्वस्फूर्जि नामक यौटा राजा होला । यही पूर्वोक्त पुरंजय बाहेक अर्को पुरंजयको नामले प्रख्यात

सप्ताभीरा आवभृत्या दश गर्दभिनो नृपाः ॥ कङ्काः षोडश भूपाला भविष्यन्त्यतिलोलुपाः ॥ २९ ॥ ततोऽष्टौ यवना भाव्याश्चतुर्दश तुरुष्ककाः ॥ भूयो दश गुरुण्डाश्च मौना एकादशैव तु ॥ ३० ॥ एते भोक्ष्यन्ति पृथ्वीं दशवर्षशतानि च ॥ नवाधिकां च नवतिं मौना एकादश क्षितिम् ॥ ३१ ॥ भोक्ष्यन्त्यब्दशतान्यङ्ग त्रीणि तैः संस्थिते ततः किलिकिलायां नृपतयो भूतनन्दोऽथ वङ्गिरिः ॥ ३२ ॥ शिशुनन्दिश्च तद्भ्राता यशोनन्दिः प्रवीरकः ॥ इत्येते वैवर्षशतं भविष्यन्त्यधिकानिषट् ॥ ३३ ॥ तेषां त्रयोदश सुता भवितारश्च बाह्लिकाः ॥ पुष्पमित्रोऽथ राजन्योदुर्मित्रोऽस्य तथैव च ॥ ३४ ॥ एककाला इमे भूपाः सप्तान्ध्राः सप्त कोशलाः ॥ विदूरपतयो भाव्या निषधास्तत एव हि ॥ ३५ ॥ मगधानां तु भविता विश्वस्फूर्जिः पुरंजयः करिष्यपरो वर्णान्पुलिन्दयदुमद्रकान् ॥ ३६ ॥ प्रजाश्चाब्रह्मभूयिष्ठाः स्थापयिष्यति दुर्मतिः ॥ वीर्यवान्क्षत्रमुत्साद्य पद्मावत्यां स वै पुरि ॥ अनुगङ्गामाप्रयागं गुप्तां भोक्ष्यति मेदिनीम् ॥ ३७ ॥ सौराष्ट्रावन्त्याभीराश्च शूरा अर्बुदमालवाः ॥ व्रात्या द्विजा भविष्यन्ति शूद्रप्राया जनाधिपाः ॥ ३८ ॥ सिन्धोस्तटं चन्द्रभागां कौन्तीं काश्मीरमण्डलम् ॥ भोक्ष्यन्ति शूद्रा व्रात्याद्या म्लेच्छाश्च ब्रह्मवर्चसः ॥ ३९ ॥ तुल्यकाला इमे राजन्म्लेच्छप्रायाश्च भूभृतः ॥ एतेऽधर्मानृतपराः फल्गुदास्तीव्रमन्यवः ॥ ४० ॥ स्त्रीबालगोद्विजघ्नाश्च परदारधनादृताः उदितास्तमितप्राया अल्पसत्त्वाल्पकायुषः ॥ ४१ ॥ असंस्कृताः क्रियाहीना रजसा तमसा तमसावृताः ॥ प्रजास्ते भक्षयिष्यन्ति म्लेच्छा राजन्यरूपिणः

हुनेछ । ऊ पुलिन्द, यदु र मद्रदेश निवासी ब्राह्मणादि उच्चवर्णलाई भ्रष्ट पारेर सबैलाई म्लेच्छ तुल्याउला । ३६॥ त्यो बलवान् राजा सबै क्षत्रियलाई धपाएर पद्मावतीपुरीमा ब्राह्मणको संख्या घटाई शूद्रप्रजा स्थापित गर्ला र हरिद्वार देखि प्रयागसम्मको भूमि राम्ररी सुरक्षित पार्दै भोग्नेछ ॥३७॥ तब सुराष्ट्र, अवन्ती, आभीर, शूद्र, अर्बुद र मालवदेशीय ब्राह्मण संस्कार शून्य हुनन् र सबै राजा शूद्रप्राय हुनन् ॥३८॥ सिन्धुतट, चन्द्रभागा, कौन्तीपुरी र काश्मीर मण्डललाई शूद्र, संस्कार शून्य तथा ब्रह्मतेजहीन विप्र र म्लेच्छादि भोग्नेछन् । हे राजन् ! म्लेच्छ प्राय राजा यौटै समयमा हुनन् । ती सबै अधर्म र असत्यमा अत्यन्त तत्पर, दानहीन र क्रोधी हुनन् ॥ ३९-४० ॥ ती सबै स्त्री, बालक, गाई र विप्रलाई मार्ने, परस्त्री र परधनका लोभी छिन-छिनमा खुसी र क्रोधित हुने अल्पवीर्य, अल्पायु, संस्कार शून्य, क्रियारहित, रजोगुण र तमोगुणले भरिएका हुनन् । ती राजरूपधारी प्रजालाई लुटेर खानन्

1390

॥ ४१-४२ ॥ त्यस्ता राजाको अधिकारमा बस्ने तथा त्यस्तै आचरण र व्यवहार गर्ने देश एवं त्यहाँका निवासी परस्पर यौटा अर्कोसित र राजाहरूद्वारा पीडित भएर नाशिनन् ॥४३॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायां प्रथमोऽध्यायः ॥१॥

( कलि-धर्म ) शुकदेव भन्नुहुन्छ—हे राजन् ! कलिमा प्रबल कालको प्रभावले दिन-दिनै धर्म, सत्य, शौच, क्षमा, दया, आयु, बल र स्मृतिको नाश हुन लाग्छ ॥ १ ॥ यो कलिमा धन नै मनुष्यको कुलीनता, आचार र गुणोदयको कारण बन्नेछ र बल नै धर्म एवं न्याय-व्यवस्थाको कारण मानिने छ ॥ २ ॥ अनि दाम्पत्य-धर्ममा परस्पर अरुचि, व्यवहारमा कपट, स्त्री तथा पुरुषको श्रेष्ठतामा रतिचातुर्य र ब्राह्मणत्वमा यज्ञोपवीत नै प्रधान उपकरण हुनेछ ॥ ३ ॥ भिन्न भिन्न आश्रमको चिन्ह र एक आश्रमबाट अर्को आश्रममा जान ती आश्रमका चिह्न नै हेतु मानिने छन् । धूस दिनमा असमर्थ भए न्यायमा हार खानु पर्नेछ र वाणीको चपलता नै पाण्डित्य मानिने छ ॥ ४ ॥ त्यसै गरी धनहीनता

॥ ४२ ॥ तत्राथास्ते जनपदास्तच्छीलाचारवादिनः ॥ अन्योन्यतो राजभिश्च क्षयं यास्यन्ति पीडिताः ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे प्रथमोऽध्यायः ॥ १ ॥ श्रीशुक उवाच ॥ ततश्चानुदिनं धर्मः सत्यं शौचं क्षमा दया ॥ कालेन बलिना राजन्नङ्क्ष्यत्यायुर्बलं स्मृतिः ॥ १ ॥ वित्तमेव कलौ नॄणां जन्माचारगुणोदयः ॥ धर्मन्यायव्यवस्थायां कारणं बलमेव हि ॥ २ ॥ दाम्पत्येऽभिरुचिर्हेतुर्मायैव व्यावहारिके ॥ स्त्रीत्वे पुंस्त्वे च हि रतिर्विप्रत्वे सूत्रमेव हि ॥ ३ ॥ लिङ्गमेवाश्रमख्यातावन्योन्यापत्तिकारणम् ॥ अवृत्त्या न्यायदौर्बल्यं पाण्डित्ये चापलं वचः ॥ ४ ॥ अनाढ्यतैवासाधुत्वे साधुत्वे दम्भ एव तु ॥ स्वीकार एव चोद्वाहे स्नानमेव प्रसाधनम् ॥ ५ ॥ दूरे वार्ययनं तीर्थं लावण्यं केशधारणम् ॥ उदरम्भरता स्वार्थः सत्यत्वे धाष्टर्यमेव हि ॥ ६ ॥ दाक्ष्यं कुटुम्बभरणं यशोऽर्थे धर्मसेवनम् ॥ एवं प्रजाभिर्दुष्टाभिराकीर्णे क्षितिमण्डले ॥ ७ ॥ ब्रह्मविट्क्षत्रशूद्राणां यो बली भविता नृपः ॥ प्रजा हि लुब्धै राजन्यैर्निर्घृणैर्दस्युधर्मभिः ॥ ८ ॥ आच्छिन्नदारद्रविणा यास्यन्ति गिरिकाननम् ॥ शाकमूलामिषक्षौद्रफलपुष्पाष्टिभोजनाः ॥ ९ ॥ अनावृष्ट्या विनङ्क्ष्यन्ति दुर्भिक्षकरपीडिताः ॥ शीतवातातपप्रावृड्हिमैरन्योन्यतः प्रजाः ॥ १० ॥ क्षुत्तृड्भ्यां व्याधिभिश्चैव सन्तप्स्यन्ते च चिन्तया ॥ त्रिंशद्विंशतिवर्षाणि परमायुः कलौ नृणाम् ॥११॥ क्षीयमाणेषु देहेषु देहिनां कलिदोषतः ॥

असाधुताको, दम्भ साधुत्वको स्वीकार गरिलिनु नै विवाहको र केवल स्नान गर्नु नै देह सजाउने साधन बन्नेछ ॥ ५ ॥ त्यस बेला परका जलाशय तीर्थ मानिने छन्, कपाल रुम्याउनु नै सौन्दर्य होला, पेट पाल्नुनै स्वार्थ होला र धृष्टता नै सत्यताको चिह्न मानिने छ ॥ ६ ॥ आफ्ना कुटुम्बको पालन बठ्याइँ हुनेछ र यशको निम्ति नै धर्मको सेवा गरिने छ । यसरी सारा भूमण्डल दुष्ट प्रजाले भरिने छ र ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रमा जो बलियो होला, उही राजा हुनेछ । त्यस बेला लोभी, क्रूर र पापी झैं आचरण गर्ने राजाहरूद्वारा धन र स्त्री हरिनाले प्रजाजन पर्वत तथा वनमा जानेछन् र त्यहाँ शाक, मूल, मासु, फल-फूल तथा कोयाको गुदी खाएर जीवन निर्वाह गर्नेछन् ॥ ७-९ ॥ तीमध्ये अनेक प्रजाजन अतिवृष्टि, अनावृष्टि, अकाल र राजाका अनेक थरिका करहरूले सारा प्रजा पीडित भएर, धेरै प्रजा शीत, वायु, घाम, वर्षा, हिउँले र

आपुसमा लडेर सदाको निम्ति नष्ट हुनेछन् ॥१०॥ हे राजन् ! भोक, प्यास, रोग, चिन्ता र दुःखमा परिरहनाले कलियुगका अनेक मनुष्यहरूको परमायु केवल बीस अथवा तीस वर्षको हुनेछ ॥११॥ यसरी कलिको दोषले सबै देहधारीहरूको शरीर पुड्को हुन लाग्नेछ र वर्णाश्रमधर्मको वेदमार्ग लुप्त हुनेछ । त्यस बेला सनातन धर्ममा पाखण्डको प्रधानता होला । राजा चोर झैं हुने छन् । मानिस चोरी, असत्य र व्यर्थ हिंसादि विविध कुकर्मले आफ्नू आजीविका चलाउने छन् ॥ १२ ॥ १३ ॥ अनि चारै वर्ण शूद्र प्राय हुनेछन् । गाई बाख्रा झैं साना हुनन् । सबै आश्रम गृहस्थ झैं आचरण गर्नन् र स्त्रीका सम्बन्धी नै आफ्ना सम्बन्धी मानिने छन् ॥ १४ ॥ सबै वृक्ष तथा वनस्पतिहरू साना-

वर्णाश्रमवतां धर्मे नष्टे वेदपथे नृणाम् ॥ १२ ॥ पाखण्डप्रचुरे धर्मे दस्युप्रायेषु राजसु ॥ चौर्यानृतवृथाहिंसानानावृत्तिषु वै नृषु ॥१३॥ शूद्रप्रायेषु वर्णेषुच्छागप्रायासु धेनुषु ॥ गृहप्रायेष्वाश्रमेषु यौनप्रायेषु बन्धुषु ॥ १४ ॥ अणुप्रायास्वोषधीषु शमीप्रायेषु स्थास्नुषु ॥ विद्युत्प्रायेषु मेघेषु शून्यप्रायेषु सद्मसु ॥ १५ ॥ इत्थं कलौ गतप्राये जने तु खरधर्मिणि ॥ धर्मत्राणाय सत्त्वेन भगवानवतरिष्यति ॥ १६ ॥ चराचरगुरोर्विष्णोरीश्वरस्याखिलात्मनः ॥ धर्मत्राणाय साधूनां जन्मकर्मापनुत्तये ॥ १७ ॥ शम्भलग्राममुख्यस्य ब्राह्मणस्य महात्मनः ॥ भवने विष्णुयशसः कल्किः प्रादुर्भविष्यति ॥ १८ ॥ अश्वमाशुगमारुह्य देवदत्तं जगत्पतिः ॥ असिनासाधुदमनमष्टैश्वर्यगुणान्वितः ॥ १९ ॥ विचरन्नाशुना क्षोण्यां हयेनां-

साना हुनन् । सबै वृक्ष शमीवृक्ष झैं साना हुनेछन् । मेघमा बिजुली नै बर्ता रहनेछ र घर शून्यप्राय हुनेछन् ॥ १५ ॥ यस प्रकार जब सबै व्यक्ति संसारका हरूमा असह्य गर्दभ धर्मको प्रवृत्ति गर्ने कलिको अन्त्य समय हुनेछ, अनि भगवान् धर्मको रक्षा र प्रजालाई सुखी पार्नको निम्ति सत्वगुण-युक्ति भएर धरातलमा फेरि अवतार लिनेछन् ॥१६॥ अखिल चराचरका गुरु र सर्वेश्वर भगवान्को अवतार सधैं धर्मको रक्षा र साधु जनलाई जन्म-कर्मको बन्धनबाट मुक्त पार्न नै हुन्छ ॥ १७ ॥ ती कल्कि भगवान् सम्भलग्राम निवासी विप्र विष्णुयश कहाँ अवतार लिनेछन् ॥ १८ ॥ अणिमादि अष्ट ऐश्वर्ययुक्त कल्कि भगवान् देवदत्त नामको यौटा द्रुतगामी घोडामा चढेर आफ्नू तीक्ष्ण तरवाले संसारका दुष्टहरूको

---

* उदाहरण ( मेरा प्रजा सुखी छन् )—सम्राट अशोकले आफ्नू जन्म दिनमा राज्यका सबै सुबेदारहरूलाई डाकेर भने—'म यस वर्ष सबभन्दा राम्रो काम गर्ने सुबेदारलाई आजै इनाम दिन्छु । सबै जना आफ्ना आफ्ना प्रान्तको हाल सुनाउनू ।' उत्तरी प्रदेशको सुबेदारले भन्यो—'सरकार ! मैले यस वर्ष आफ्नू प्रान्तको आमदानी तेब्बर गराएँ ।' दक्षिणको सुबेदारले भन्यो—'राज्यको ढुकुटीमा प्रतिवर्ष भन्दा दुगुन पठाइन्थ्यो, यस वर्ष तिन गुना भन्दा दोब्बर पठाएको छु ।' पूर्वको सुबेदारले भन्यो—'महाराज ! पूर्वका पहाडमा प्रजालाई मैले थिचिदिएँ । अब ती कहिल्यै हजुरको सामुन्ने ठाडको ठाडो शिर उठाएर हेर्न सक्दैनन् ।' पश्चिमको सुबेदारले भन्यो—'मैले प्रजामाथि लिइने कर बढाइ दिएको छु र राज्यका सेवको नयाँ पदाएर उनमा निकै उन्नति गरेको छु । अझै यो कुरा मान्नुपर्छ ।' अन्त्यमा मध्यप्रान्तको सुबेदारले भन्यो—'महाराज ! मैले यस वर्ष राज्यको आमदानीमा वृद्धि गर्न सकिन । उल्टो राज्यको खजानामा प्रतिवर्ष भन्दा थोरै पनि पठाएको छु, किनकि आफ्नू प्रदेशमा मैले हजुरका प्रजालाई शिक्षित पार्न नयाँ-नयाँ स्कूल खोलेको छु । कृषकहरूको सुविस्ताका लागि अनेक कुवा खन्न लगाएँ । सार्वजनिक धर्मशाला र औषधालय बनाउनमा पनि धेरै धन खर्च भएको छ ।' मध्य प्रान्तका सुबिदारको आफ्नू प्रजाप्रति यस्तो राम्रो सुनेर सम्राट्ले उसैलाई इनाम दियो । अनि सबै सुबिदारहरूलाई सम्बोधन गरेर भने—'मलाई तीन गुना दुन र चार गुना आमदानी चाहिएको छैन । मलाई आफ्ना प्रजाको स्वतन्त्रता खोस्ने मन छैन । प्रजामा कर बढाएर तथा नोकरी गर्नेहरूको वेतन घटाएर आमदानी बढाउने पाप पनि म गर्दिनँ । परमात्माले मलाई राज्यको व्यवस्थापक बनाएका छन् । अतः प्रजाको धन प्रजाकै कल्याणार्थ उपयोगमा ल्याएर उनलाई सुखी पार्नुपर्छ । मध्यप्रान्तको सुबिदारले यही काम गरेको छ । तिमीहरूले पनि यसै गर्नसके म प्रसन्न हुनेछु ।'

1392

दमन गर्छन् ॥१९॥ ती भगवान् अतुलित तेजस्वी हुनन र त्यस अश्वमा चढेर पृथ्वीमा डुल्दै नृपरूपमा लुकेका करोडौं दस्युहरूलाई मार्नेछन् ॥२०॥ यसरी सबै दस्युहरू मारेपछि वासुदेव भगवान्का अङ्गमा लागेका अङ्गरागको पवित्र गन्धले सुवासित वायुको स्पर्शले ती सबै पुरवासी र जनपद निवासीको चित्त निर्मल हुनेछ ॥ २१ ॥ त्यसपछि ती सत्त्वमूर्ति भगवान् वासुदेव स्वयं हृदयमा विराजमान भएपछि तिनका सन्तति उत्तरोत्तर स्थूलकाय हुन लाग्नेछन् ॥२२॥ जब धर्मरक्षक हरि भगवान् कल्कि अवतार लिनन्, उसैबेलादेखि फेरि सत्ययुगको आरम्भ हुनेछ र प्रजाको सन्तति सात्त्विक हुन थाल्नेछन् ॥ २३ ॥ जब सूर्य-चन्द्र, पुष्य नक्षत्र र बृहस्पति–यी चारै यौटै राशिमा स्थित हुन्छन्, अनि सत्ययुगको समावेश हुन्छ ॥२४॥ हे राजन् ! सूर्य तथा चन्द्रवंशमा जुन-जुन राजा पहिले भइसके र अहिले छन् तदा भविष्यमा हुने छन्, ती सबैको हाल मैले संक्षेपमा सुनाइदिएँ ॥ २५ ॥

प्रतिमद्युतिः ॥ नृपलिङ्गच्छदो दस्यून्कोटिशो निहनिष्यति ॥ २० ॥ अथ तेषां भविष्यन्ति मनांसि विशदानि वै ॥ वासुदेवाङ्गरागातिपुण्यगन्धानिलस्पृशाम् ॥ पौरजानपदानां वै हतेष्वखिलदस्युषु ॥ २१ ॥ तेषां प्रजाविसर्गश्च स्थविष्ठः सम्भविष्यति ॥ वासुदेवे भगवति सत्त्वमूर्तौ हृदि स्थिते ॥ २२ ॥ यदावतीर्णो भगवान्कल्किर्धर्मपतिर्हरिः ॥ कृतं भविष्यति तदा प्रजासूतिश्च सात्त्विकी ॥ २३ ॥ यदा चन्द्रश्च सूर्यश्च तथा तिष्यबृहस्पती ॥ एकराशौ समेष्यन्ति तदा भवति तत्कृतम् ॥ २४ ॥ येऽतीता वर्तमाना ये भविष्यन्ति च पार्थिवाः ॥ ते त उद्देशतः प्रोक्ता वंशीयाः सोमसूर्ययोः ॥ २५ ॥ आरभ्य भवतो जन्म यावन्नन्दाभिषेचनम् ॥ एतद्वर्षसहस्रं तु शतं पंचदशोत्तरम् ॥ २६ ॥ सप्तर्षीणां तु यौ पूर्वौ दृश्येते उदितौ दिवि ॥ तयोस्तु मध्ये नक्षत्रं दृश्यते यत्समं निशि ॥ २७ ॥ तेनैता ऋषयो युक्तास्तिष्ठन्त्यब्दशतं नृणाम् ॥ ते त्वदीये द्विजाः काले अधुना चाश्रिता मघाः ॥ २८ ॥ विष्णोर्भगवतो भानुः कृष्णाख्योऽसौ दिवं गतः ॥ तदाविशत् कलिर्लोकं पापे यद्रमते जनः ॥ २९ ॥ यावत्स पादपद्माभ्यां स्पृशन्नास्ते रमापतिः ॥ तावत्कलिर्वै पृथिवीं पराक्रान्तुं न चाशकत् ॥ ३० ॥ यदा देवर्षयः सप्त मघासु विचरन्ति हि ॥ तदा प्रवृत्तस्तु कलिर्द्वादशाब्दशतात्मकः ॥ ३१ ॥ यदा मघाभ्यो यास्यन्ति पूर्वाषाढां महर्षयः ॥ तदा नन्दात्प्रभृत्येष कलिर्वृद्धिं गमिष्यति ॥ ३२ ॥ यस्मिन्कृष्णो दिवं यातस्तस्मिन्नेव तदाहनि ॥ प्रतिपन्नं कलियुगमिति प्राहुः पुराविदः ॥ ३३ ॥ दिव्याब्दानां सहस्रान्ते चतुर्थे तु पुनः कृतम् ॥

तिम्रो जन्मदेखि राजा नन्दको राज्याभिषेक सम्म एघार सय पन्ध्र वर्ष तिर्नेछन् ॥ २६ ॥ आकाशको सप्तर्षिहरूमा जुन दुइटिर उदित हुन्छन्, तिनको दक्षिणोत्तर रेखामा समभागमा अश्विनी आदिबाट जुन यौटा नक्षत्र देखिन्छ, त्यो सहित यी सप्तर्षि मनुष्यको सय वर्षसम्म त्यही स्थितिमा रहन्छन् । द्विजो आज तिम्रो समयमा ती सप्तर्षि मघा नक्षत्रको आश्रय लिएर स्थित छन् ॥२७॥२८॥ जब भगवान् विष्णुको कृष्ण नामक शुद्ध सत्त्वमय शरीर परमधाम गएको थियो, उसै बेलादेखि मनुष्य पापपरायण भएर कलि संसारमा प्रविष्ट भयो ॥ २९ ॥ जबसम्म भगवान् कृष्ण आफ्ना पाउले पृथ्वीको स्पर्श गर्नन, तबसम्म कलि पृथ्वीमा आफ्नू पराक्रम प्रकट गर्न सकेको थिएन ॥ ३० ॥ जबदेखि सप्तर्षि मघा नक्षत्रमा आएका छन्, उसै बेलादेखि बाह्र सय दिव्यवर्षसम्म रहने कलि प्रवृत्त भएको छ ॥३१॥ जब सप्तर्षि पूर्वाषाढा नक्षत्रमा जानन्, तब राजा नन्दको राज्यकालरहनेछ, उसैबेलादेखि यो

1393

कलि वृद्धिमा प्राप्त हुन थाल्नेछ ॥३२॥ पुराविद्हरूको भनाइ छ—जुन दिन कृष्ण आफ्नू दिव्यधाम पाल्नुभयो, त्यसै दिनदेखि संसारमा कलियुगको आगमन भएको छ ॥३३॥ हे राजन् ! एक हजार दिव्यवर्ष बितेपछि चतुर्थ कलिको अन्त्य भइसकेपछि जब मनुष्यको चित्त आत्मास्वरूपको प्रकाशक भइसक्ने छ, अनि फेरि सत्ययुग आउनेछ॥३४॥ हे राजन् ! जसरी लोकमा मनुवंशको गणना गरिन्छ, उसै गरी युग-युगमा वैश्य, शूद्र र ब्राह्मणका वंशको पनि परम्परा जान्नुपर्दछ।३५। जसको केवल कथामात्र शेष रहेको छ, त्यस्ता केवल नामले चिह्न सकिने यी महात्माहरूको पृथ्वीमा अब केवल कीर्ति नै स्थिर छ ॥ ३६ ॥ यस बेला शान्तनुका भाई देवापि एवं इक्ष्वाकुकुलोत्पन्न महाराज मरु आफ्नू योगबलले सम्पन्न भएर कलाप ग्राममा बस्तछन् ॥ ३७ । यी दुवै महात्मा कलिको अन्त्यमा यहाँ आएर वासुदेवको प्रेरणाले संसारमा पहिले झैं वर्णाश्रमयुक्त धर्मको स्थापना गर्नेछन् ॥ ३८ ॥ सत्ययुग,

भविष्यति यदा नृणां मन आत्मप्रकाशकम् ॥ ३४ ॥ इत्येष मानवो वंशो यथा संख्यायते भुवि ॥ तथा विट्शूद्रविप्राणां तास्ता ज्ञेया युगे युगे ॥ ३५ ॥ एतेषां नामलिङ्गानां पुरुषाणां महात्मनाम् ॥ कथामात्रावशिष्टानां कीर्तिरेव स्थिता भुवि ॥ ३६ ॥ देवापिः शन्तनोर्भ्राता मरुश्चेक्ष्वाकुवंशराजः ॥ कलापग्राम आसाते महायोगबलान्वितौ ॥ ३७ ॥ ताविहैत्य कलेरन्ते वासुदेवानुशिक्षितौ ॥ वर्णाश्रमयुतं धर्मं पूर्ववत्प्रथयिष्यतः ॥ ३८ ॥ कृतं त्रेता द्वापरं च कलिश्चेति चतुर्युगम् ॥ अनेन क्रमयोगेन भुवि प्राणिषु वर्तते ॥ ३९ ॥ राजन्नेते मया प्रोक्ता नरदेवास्तथापरे ॥ भूमौ ममत्वं कृत्वान्ते हित्वेमां निधनं गताः ॥ ४० ॥ कृमि विड्भस्मसंज्ञान्ते राजनाम्नोऽपि यस्य च ॥ भूतध्रुक् तत्कृते स्वार्थं किं वेद निरयो यतः ॥ ४१ ॥ कथं सेयमखण्डा भूः पूर्वैर्मे पुरुषैर्धृता ॥ मत्पुत्रस्य च पौत्रस्य मत्पूर्वा वंशजस्य वा ॥ ४२ ॥ तेजोऽबन्नमयं कायं गृहीत्वात्मतया बुधाः ॥ महीं ममतया चोभौ हित्वान्तेऽदर्शनं गताः ॥ ४३ ॥ ये भूमिपतयो राजन्भुञ्जते भुवमोजसा ॥ कालेन ते कृताः सर्वे कथामात्राः कथासु च ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे द्वितीयोऽध्याय ॥ २ ॥ श्रीशुक उवाच ॥ दृष्ट्वात्मनि जये व्यग्रान्नृपान्हसति भूरियम् ॥ अहो मा विजिगीषन्ति मृत्योः क्रीडनका नृपाः ॥ १ ॥ काम एष नरेन्द्राणां मोघः स्याद्विदुषामपि ॥ येन फेनोपमे पिण्डे येऽतिविश्रम्भिता नृपाः

त्रेता, द्वापर, कलि—यी चारैं युग पृथ्वीमा यही क्रमले बराबर आई-गई रहने छन् ॥ ३९ ॥ हे राजन ! मैले भनेका यी सबै राजा तथा अन्य राजाहरू पनि यस पृथ्वीमा ममता गरेर अन्त्यमा यसलाई छाडेर नष्ट भएका छन् ॥ ४० ॥ अहो ! जुन देहको नाम राजा छ र जसको अन्त्यमा कीरा, विष्ठा र भस्म संज्ञा बन्दछ, त्यो अकिञ्चन शरीरका लागि जो प्राणी अन्य प्राणीहरूसित द्रोह गर्दै हिंड्दछन् के त्यो आफ्नू सच्चा स्वार्थ जान्दछ ? जान्दैन। अन्त्यमा यसले त उसलाई नरकगामी नै हुनुपर्दछ ॥ ४१ ॥ जुन अखण्ड भूमण्डललाई मेरा पूर्वजले शासित गरेका थिए, त्यो यससहित मेरा वंशधर छोरा र नातीहरूका हातमा कसरी रहला ? ॥ ४२ ॥ यसरी तेज, जल र अन्नमा विकाररूप यस देहलाई आत्मा मानेर र पृथ्वीलाई आफ्नो ठान्दै ती मूढ राजाहरू यी दुवैलाई छाडेर सदाका निम्ति विलीन भए ॥ ४३ ॥ हे राजन ! जुन-जुन ठूला राजा यस भूमण्डललाई उत्साहले भोग गर्दथे,

ती रुचैलाई कालले कथाहरूमा नाममात्र शेष राखेको छ ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः ॥ २ ॥ ( राजमदको दोष, चारै युगमा धर्म तथा कलिकालमा हरिनामकीर्तनको महात्म्य) शुकदेव भन्नुहुन्छ—हे राजन् ! आफूलाई जित्न व्यग्र राजाहरूलाई देखेर यी पृथ्वी हाँस्तै भन्दछिन्—अहो ! मृत्युका खेलौना-रूपी राजाहरू मलाई जित्ने इच्छुक छन् !' ॥१॥ विद्वान् राजालाई पनि व्यर्थ नै विजय-कामना हुने गर्दछ । जसको वशीभूत भएर ती राजाहरू पानीको फोकासमान अत्यन्त अस्थिर यस शरीरमा विश्वास गर्दछन् ॥२॥ 'म पहिले षड्वर्गलाई जित्नेछु, अनि राजमन्त्रीलाई आफ्नू अधीन पारेर विजयका विरोधी अमात्य, पुरवासी, आप्तजन र गजराजहरूमाथि अधिकार जमाउँछु॥ ३ ॥ यसै गरी क्रमशः समुद्रले घेरिएकी सम्पूर्ण पृथ्वीलाई जित्नेछु ।' हृदयमा यसै प्रकारका अनेक आशा बाँधेर यी आफ्नो समीपवर्ती काललाई पनि देख्न पाउँदैनन् ॥४॥

॥ २ ॥ पूर्वं निर्जित्य षड्वर्गं जेष्यामो राजमन्त्रिणः ॥ ततः सचिवपौराप्तकरीन्द्रानस्य कण्टकान् ॥ ३ ॥ एवं क्रमेण जेष्यामः पृथ्वीं सागरमेखलाम् ॥ इत्याशाबद्धहृदया न पश्यन्त्यन्तिकेऽन्तकम् ॥ ३ ॥ समुद्रावरणां जित्वा मां विशन्त्यब्धिमोजसा ॥ कियदात्मजयस्यैतन्मुक्तिरात्मजये फलम् ॥ ५ ॥ यां विसृज्यैव मनवस्तत्सुताश्च कुरूद्वह ॥ गता यथागतं युद्धे तां मां जेष्यन्त्यबुद्धयः ॥ ६ ॥ मत्कृते पितृपुत्राणां भ्रातृणां चापि विग्रहः ॥ जायते ह्यसतां राज्ये ममताबद्धचेतसाम् ॥ ७ ॥ ममैवेयं मही कृत्स्ना न ते मूढेति वादिनः ॥ स्पर्धमाना मिथो घ्नन्ति म्रियन्ते मत्कृते नृपाः ॥ ८ ॥ पृथुः पुरूरवा गाधिर्नहुषो भरतोऽर्जुनः ॥ मान्धाता सगरो रामः खट्वाङ्गो धुन्धुहा रघुः ॥९॥ तृणबिन्दुर्ययातिश्च शर्यातिः शन्तनुर्गयः ॥ भगीरथः कुवलयाश्वः ककुत्स्थो नैषधो नृगः ॥१०॥ हिरण्यकशिपुर्वृत्रो रावणो लोकरावणः ॥ नमुचिः शम्बरो भौमो हिरण्याक्षोऽथ

यी मध्ये केही राजा त म समुद्रले घेरएकी पृथ्वी जितेर फेरि ठूलो उत्साहले समुद्र पारी तर्दछन् तर आफ्नू मन विजयको समक्ष पृथ्वी-विजयको के महत्व छ ? किनकि मनलाई जितेपछि मुक्ति पाउन सकिन्छ ॥ ५ ॥ हे कुरुनन्दन ! पृथ्वी भन्दछिन्—'जसलाई त्यागेर मनु र मनुपुत्र पनि जसरी आएका थिए उसै गरी रित्तो हात फर्किए, उही यी मन्दमति राजा युद्धमा जित्न खोज्दछन् ॥६॥ जसको चित्त राज्यमा आसक्त रहन्छ, ती दुष्ट मेरै निम्ति पिता-पुत्र र दाजू-भाई लडाई गर्न तत्पर हुन्छन् ॥७। हे मूढ हो ! यी सम्पूर्ण पृथिवी मेरी नै हुन् तेरी होइनन् यस्तो भनेर बारम्बार यौटा अर्कोसित स्पर्धा गर्दै ती राजाहरू आपसमा मेरै निम्ति प्रहार गर्दछन् र मारिन्छन् ॥ ८ ॥ पृथु, पुरूरवा, गाधि, नहुष, भरत,

* दृष्टान्त ( चाहिए भन्दा बढी राख, शेष खर्च गर ) कुनै राजाको रत्न भण्डारमा हीरा, मोती, पन्ना, नीलम आदि भरि-भरिका अमूल्य जवाहरात भरिएका थिए । कुनै चाड-पर्वमा प्रजाहरू पनि त्यो भण्डार हेर्न पाउँथे । एकपल्ट कुनै एक परदेशी त्यहाँ पुग्यो । राजाले उसलाई आफ्नू खजाना देखाए । त्यो देखेर परदेशीले राजासित भन्यो—महाराज ! यी रत्नले हजुरको के आमदानी हुन्छ ?' राजाले भने—'केको आमदानी ? उल्टो यिनको रखवाली र सुरक्षामा सिपाही आदिको खर्च बोक्नुपर्दछ ।' परदेशीले भन्यो—'राजन ! करोडौं रुपियाँ खर्च गरेर यी मूल्यवान ढुङ्गा जम्मा पार्नु भयो, तैपनि केही आमदानी हुँदैन ? यो त आश्चर्यको कुरा छ । हजुर हैं जान्ने राजाले यसको कुनै राम्रो प्रबन्ध गर्नुपर्दछ । मेरो घर नजीक यौटी विधवा बस्तछे, त्यसले जाँतोको दुइटा ढुङ्गा किनेकी छ । त्यसैको उपयोग गरेर आफ्नू जीविका चलाउँछे । त्यति मात्र होइन त्यो उसैको आयले आफ्नू छोरो पढाउँछे, यी सारा प्रजा हजुरका हुन् । त्यो विधवा झैं यो ढुङ्गाहरू बेचेर प्रजालाई शिक्षादि दिने काममा लगाउनु भए कति असल हुन्थ्यो ? राजा विद्वान् र बुद्धिमान हुनाले मुसाफिरका वचन हृदयङ्गम गरेर अलि अलि गर्दै केही रत्न राखेर शेष सबै रत्न बेची त्यसबाट आएको सबै पैसा प्रजाको कल्याणमा खर्च गरिदिए । आजका राजा यदि त्यो पाजीको भनाई ध्यानमा राख्न त देशको दुर्दशा हराएर जान्थ्यो ।

1375

सहस्रार्जुन, मान्धाता, सगर, राम, खट्वाङ्ग, धुन्धुमार, रघु ॥ ९ ॥ तृणबिन्दु, ययाति, शर्याति, गय, भगीरथ, कुवलयाश्व, ककुत्स्थ, नैषध ( नल ), नृग ॥ १० ॥ हिरण्यकशिपु वृत्रासुरः सबैलाई रुवाउने रावण, नमुचि, शम्बर, भौमासुर, हिरण्याक्ष र तारक ॥११॥ यो बाहेक अरु पनि धेरै दैत्य तथा राजाहरू जुन सबै ठूला सम्पन्न सर्वज्ञ, शूरवीर, सबैलाई जित्नसक्ने र कसैसित पनि पराजित नहुने थिए ॥ १२ ॥ ती सबै मरणधर्मा राजाहरूले ममाथि अत्यन्त ममता गरेका थिए, तर कराल कालले तिनका मनोरथ पूर्ण हुनुभन्दा पहिल्यै तिनलाई आफ्नू मुखमा राखिलियो—अब तिनको कथा मात्र शेष छ ॥ १३ ॥ हे राजन् ! जो संसारमा आफ्नू कीर्ति फिँजाएर मरे ती महापुरुषहरूको यो कथा मैले ज्ञान-वैराग्यको वर्णन गर्ने इच्छाले नै तिमीलाई सुनाएको हुँ । तर यो सबै वाणीको विलास मात्र हो, यसमा परमार्थ केही छैन ॥ १४ ॥ यस लोकमा उत्तमश्लोक भगवान्को निरन्तर गीयमान गुणानुवाद नै सबै अमङ्गल नष्ट पार्दछ । असलाई भगवान् कृष्णको निर्मल भक्ति प्राप्त होस्,त्यो नित्यप्रति त्यही सुनोस् ॥१५॥ राजा परीक्षितले सोधे–हे भगवन् ! हे मुने ! कलियुगमा

तापकः ॥ ११ ॥ अन्ये च बहवो दैत्या राजानो ये महेश्वराः ॥ सर्वे सर्वविदः शूराः सर्वे सर्वजितोऽजिताः ॥ १२ ॥ ममतां मय्यवर्तन्त कृत्वोच्चैर्मर्त्यधर्मिणः ॥ कथावशेषाः कालेन ह्यकृतार्थाः कृता विभो ॥ १३ ॥ कथा इमास्ते कथिता महीयसां विताय लोकेषु यशः परेयुषाम् ॥ विज्ञान वैराग्यविवक्षया विभो वचोविभूतीर्न तु पारमार्थ्यम् ॥ १४ ॥ यस्तूत्तमश्लोकगुणानुवादः संगीयतेऽभीक्ष्णममङ्गलघ्नः ॥ तमेव नित्यं शृणुयाद भीक्ष्णं कृष्णेऽमलां भक्तिमभीप्समानः ॥ १५ ॥ राजोवाच ॥ केनोपायेन भगवन्कलेर्दोषान्कलौ जनाः ॥ विधमिष्यन्त्युपचितांस्तन्मे ब्रूहि यथा मुने ॥ १६ ॥ युगानि युगधर्मांश्च मानं प्रलयकल्पयोः ॥ कालस्येश्वररूपस्य गतिं विष्णोर्महात्मनः ॥ १७ ॥ श्रीशुक उवाच ॥ कृते प्रवर्तते धर्मश्चतुष्पात्तज्जनैर्धृतः ॥ सत्यं दया तपो दानमिति पादा विभोर्नृप ॥ १८ ॥ सन्तुष्टाः करुणा मैत्राः शान्ता दान्तास्तितिक्षवः ॥ आत्मारामाः समदृशः प्रायशः श्रमणा जनाः ॥ १९ ॥ त्रेतायां धर्मपादानां तुर्यांशो हीयते शनैः ॥ अधर्मपादैरनृतहिंसासन्तोषविग्रहैः ॥ २० ॥ तदा क्रियातपोनिष्ठा नातिहिंस्रा न लम्पटाः ॥ त्रैवर्गिकास्त्रयीवृद्धा वर्णा ब्रह्मोत्तरा नृप ॥ २१ ॥ तपः सत्यदयादानेष्वर्धं ह्रसति द्वापरे ॥ हिंसातुष्ट्यनृतद्वेषैर्धर्मस्याधर्मलक्षणैः ॥ २२ ॥ यशस्विनो महाशीलाः स्वाध्यायाध्ययने रताः ॥ आढ्याः कुटुम्बिनो हृष्टा वर्णाः क्षत्रद्विजोत्तराः ॥ २३ ॥

बढेको कलिको पाप मनुष्य कसरी नष्ट पार्लान्, त्यो मलाई भन्नुहवस् ॥ १६ ॥ यो बाहेक युग-युगका धर्म, प्रलय तथा स्थिति कालको प्रमाण र भगवान् विष्णुको कालमूर्तिको स्वरूप पनि वर्णन गर्नोस् ॥ १७ ॥ शुकदेव भन्नुहुन्छ–हे राजन् ! सत्ययुगमा मनुष्यहरू द्वारा धारण गरिएको धर्म चार-चरणले युक्त रहन्छ । सत्य, दया, तप र दान यिनै धर्मका चार चरण कहिएका छन् ॥ १८ ॥ त्यस बेलाका सबै पुरुष सन्तोषी, कारुणिक, सुहृद्, शान्त, जितेन्द्रिय, सहनशील, आत्माराम, समदर्शी तथा प्रायः आत्माभ्यासमा लागिरहने हुन्छन् ॥१९॥ त्रेतामा अधर्मको असत्य, हिंसा, असन्तोष तथा विग्रह—यी चार चरणले विस्तार-विस्तार धर्मका चरणको चतुर्थांश क्षीण हुने गर्दछ ॥ २० ॥ हे राजन् ! त्यस समयका ब्राह्मण-प्रधान सबै वर्ण कर्मकाण्ड तथा तपस्यामा तत्पर, अत्यन्त हिंसा तथा लम्पटताले रहित अर्थ, धर्म र कामरूप त्रिवर्गको सेवन गर्ने र वैदिक मार्गमा कुशल हुने गर्दछन् ॥२१॥

द्वापरमा हिंसा, असन्तोष असत्य तथा द्वेष—अधर्मका यी चार चरणले तप, सत्य, दया एवं दानको आधा-आधा भाग क्षीण हुने गर्दछ ॥ २२ ॥ त्यस समयका सबै क्षत्रिय र ब्राह्मण प्रधान वर्ण हुला यशस्वी, उदार, स्वाध्याय तथा अध्ययनमा तत्पर, धनी, कुटुम्बी र प्रसन्न-चित्त हुन्छन् ॥ २३ ॥ तर कलियुगमा बढ्दो अधर्मले गर्दा धर्मका चरणको चतुर्थांश मात्र शेष रहन्छ र त्यो पनि क्षीण हुँदा-हुँदा अन्त्यमा एकदम नष्ट भएर जान्छ ॥२४॥यस युगमा शूद्र र दासप्रधान प्रजा बढी लोभी, दुराचारिणी, निर्दयी, व्यर्थ शत्रुता गर्ने, अभागिनी र बढी कामनायुक्त हुन्छन् । सबै पुरुषमा सत्व, रज र तम—यी तीन गुण देखिन्छन् र ती कालको प्रेरणाले चित्तमा परिवर्तित हुँदै रहन्छन् ॥२५-२६॥ जब मन, बुद्धि र इन्द्रिय सत्वमा स्थित हुन्छन्, तब सत्यको भोगकाल हुन्छ, जसले व्यक्तिमा ज्ञान र तपको रुचि हुन्छ ॥२७॥ हे बुद्धिमन् ! जब शरीरीहरूको प्रीति धर्म, अर्थ र काममा हुन्छ, तब रजःप्रधान त्रेता

कलौ तु धर्महेतूनां तुर्यांशोऽधर्महेतुभिः ॥ एधमानैः क्षीयमाणो ह्यन्ते सोऽपि विनङ्क्ष्यति ॥ २४ ॥ तस्मिंल्लुब्धा दुराचारा निर्दयाः शुष्कवैरिणः ॥ दुर्भगा भूरितर्षाश्च शूद्रदासोत्तराः प्रजाः ॥ २५ ॥ सत्त्वं रजस्तम इति दृश्यन्ते पुरुषे गुणाः ॥ कालसञ्चोदितास्ते वै परिवर्तन्त आत्मनि ॥ २६ ॥ प्रभवन्ति यदा सत्त्वे मनोबुद्धीन्द्रियाणि च ॥ तदा कृतयुगं विद्याज्ज्ञाने तपसि यद्रुचिः ॥ २७ ॥ यदा धर्मार्थकामेषु भक्तिर्भवति देहिनाम् ॥ तदा त्रेता रजोवृत्तिरिति जानीहि बुद्धिमन् ॥ २८ ॥ यदा लोभस्त्वसन्तोषो मानो दम्भोऽथ मत्सरः ॥ कर्मणां चापि काम्यानां द्वापरं तद्रजस्तमः ॥ २९ ॥ यदा मायानृतंतन्द्रा निद्राहिंसा विषादनम् ॥ शोको मोहो भयं दैन्यं सकलिस्तामसः स्मृतः ॥ ३० ॥ यस्मात्क्षुद्रदृशा मर्त्याः क्षुद्रभाग्या महाशनाः ॥ कामिनो वित्तहीनाश्च स्वैरिण्यश्च स्त्रियोऽसतीः ॥ ३१ ॥ दस्यूत्कृष्टा जनपदा वेदाः पाखण्डदूषिताः ॥ राजानश्च प्रजाभक्षाः शिश्नोदरपरा द्विजाः ॥ ३२ ॥ अव्रता बटवोऽशौचा भिक्षवश्च कुटुम्बिनः ॥ तपस्विनो ग्रामवासा न्यासिनोऽत्यर्थलोलुपाः ॥ ३३ ॥ ह्रस्वकाया महाहारा भूर्यपत्या गतह्रियः ॥ शश्वत्कटुकभाषिण्यश्चौर्यमायोरुसाहसाः ॥ ३४ ॥ पणयिष्यन्ति वै क्षुद्राः किराटाः कूटकारिणः ॥ अनापद्यपि मंस्यन्ते वार्तां साधुजुगुप्सिताम् ॥ ३५ ॥ पतिं त्यक्ष्यन्ति निर्द्रव्यं भृत्या अप्यखिलोत्तमम् ॥ भृत्यं विपन्नं पतयः कौलं गाश्चापय-

युगको प्रवृत्ति हुन्छ ॥२८॥ जब लोभ, असन्तोष, मान दम्भ र मत्सरादिको राज्य हुन्छ र काम्य कर्मको प्रवृत्ति रहन्छ, तब रजस्तमःप्रधान द्वापरयुगको प्रवृत्ति आउँछ ॥२९॥ जब कपट, असत्य निद्रा, हिंसा विवाद, शोक, मोह, भय र दीनताको प्रसार रहन्छ तब तमोमय कलिको प्रवृत्ति आउँछ ॥३०॥ यसको राज्यमा लोभ, मन्ददृष्टि, मन्दभाग्य, बहुभोजी, कामी र धनहीन हुनेछन्, स्त्रीहरू स्वेच्छाचारिणी तथा असाध्वी बन्नेछन् ॥३२॥सबै देशमा लुटाहा बढ्नेछन् । वेद पाखण्ड-मार्गले दूषित हुनेछ । राजा प्रजाको भक्षण गर्न लाग्नेछ र संन्यासीहरू अर्थलोलुप हुनेछन् ॥३३॥ नारीहरू पुड्का शरीरको, बढी खाने, अनेक सन्तानवती र निर्लज्ज, सदैव कटुभाषण गर्ने चोर, कपटी र अत्यन्त दुःसाहसी हुनेछन् ॥ ३४ ॥ बनियाँ नीच विचारका

1377

भएर अरुलाई ठगेर किन्ने-बेच्ने काम गर्नेछन् । तीं आपत्तिकाल नहुँदा पनि निन्दित जीविकालाई श्रेष्ठ मान्नेछन् ॥ ३५ ॥ सेवक धनहीन भएपछि आफ्ना सान्है राम्रा, दयालु स्वामीलाई पनि त्याग्नेछन् र स्वामी रोगादिले गर्दा काम गर्न असमर्थ भए पनि आफ्नू कुलपरम्परादेखि राखेको सेवकलाई निकालि दिन्छन् । त्यसै गरी दूध नदिने गाईलाई पनि घरबाट धपाइदिनन् ॥ ३६ ॥ हे राजन् ! कलियुगमा मैथुनमैं प्रीति राख्ने र स्त्री परायण दीनपुरुष आफ्ना पिता, दाजू-भाई र सबै बन्धुजनहरूलाई त्यागेर साली र सालासित सल्लाह लिनन् ॥३७॥ शूद्र तपस्वीको वेषले जीवन-निर्वाह गर्दै दान लिनेछन् र धर्मबाट अनभिज्ञ व्यक्ति अग्लो आसनमा बसेर श्रोतालाई धर्मको उपदेश दिनन् ॥३८॥ हे राजन् ! यस कलिमा पृथ्वीमा अन्नको अभाव भएपछि अनावृष्टिको डरले व्याकुल दुर्भिक्ष र राजाहरूले पीडित भएर नित्य उद्विग्न मन, प्रजा, अन्न-वस्त्र, जल, शयन, मैथुन, स्नान र भूषणादिले रहित भएर पिशाच जस्ता देखिने छन् ॥ ३९ ॥ ४० ॥ कलिमा मनुष्य थोरै धनको निम्ति पनि झगडा गरेर सौहार्दभावलाई तिलाञ्जलि दिई आफ्ना सम्बन्धीहरूलाई

स्विनीः ॥ ३६ ॥ पितृभ्रातृसुहृज्ज्ञातीन्हित्वा सौरतसौहृदाः ॥ ननान्दृश्यालसंवादाः दीनाः स्त्रैणाः कलौ नराः ॥ ३७ ॥ शूद्राः प्रतिग्रहीष्यन्ति तपोवेषोपजीविनः ॥ धर्मं वक्ष्यन्त्यधर्मज्ञा अधिरुह्योत्तमासनम् ॥ ३८ ॥ नित्यमुद्विग्नमनसो दुर्भिक्षकरकर्शिताः ॥ निरन्ने भूतले राजन्ननावृष्टिभयातुराः ॥ ३९ ॥ वासोऽन्नपानशयनव्यवायस्नानभूषणैः ॥ हीनाः पिशाचसन्दर्शा भविष्यन्ति कलौ प्रजाः ॥ ४० ॥ कलौ काकिणिकेऽप्यर्थे विगृह्य त्यक्तसौहृदाः ॥ त्यक्ष्यन्ति च प्रियान्प्राणान्हनिष्यन्ति स्वकानपि ॥ ४१ ॥ न रक्षिष्यन्ति मनुजाः स्थविरौ पितरावपि ॥ पुत्रान्सर्वार्थकुशलान्क्षुद्राः शिश्नोदरम्भराः ॥ ४२ ॥ कलौ न राजञ्जगतां परं गुरुं त्रिलोकनाथानतपादपङ्कजम् ॥ प्रायेण मर्त्या भगवन्तमच्युतं यक्ष्यन्ति पाखण्डविभिन्नचेतसः ॥ ४३ ॥ यन्नामधेयं म्रियमाण आतुरः पतन्स्खलन्वा विवशो गृणन्पुमान् ॥ विमुक्तकर्मार्गल उत्तमां गतिं प्राप्नोति यक्ष्यन्ति न तं कलौ जनाः ॥ ४४ ॥ पुंसां कलिकृतान्दोषान्द्रव्यदेशात्मसम्भवान् ॥ सर्वान्हरति चित्तस्थो भगवान्पुरुषोत्तमः ॥ ४५ ॥ श्रुतः सङ्कीर्तितो ध्यातः पूजितश्चादृतोऽपि वा ॥ नृणां धुनोति भगवान्हृत्स्थो जन्मायुताशुभम् ॥ ४६ ॥ यथा हेम्नि स्थितो वह्निर्दुर्वर्णं हन्ति धातुजम् ॥ एवमा-

पनि मार्नेन र आफ्नू प्रिय प्राण पनि त्यागिदिनन् ॥४१॥ कलिका सबै क्षुद्राशय व्यक्ति शिश्नोदरपरायण भएर आफ्ना वृद्ध आमा-बाबुलाई पनि त्याग्नन् र पिता आफ्नू सबै काममा कुशल छोरोलाई सम्हाल्न सक्ने छैनन् ॥ ४२ ॥ हे राजन् ! यस कलिमा वेद-विरुद्ध पाखण्ड-मार्गले विक्षिप्तचित्त पुरुष प्रायः जसका चरणकमलमा इन्द्रादि त्रिलोकका अधिपति शिर न्युराउँछन्, ती संसारमा गुरु अच्युत भगवान्को पूजा गर्ने छैनन् ॥४३॥ मर्ने बेलामा अत्यन्त आतुर पुरुष पराधीन भएर लड्दै-पड्दै पनि जसको नाम स्मरण गर्नाले सबै प्रकारका कर्मबन्धनबाट छुटेर उत्तम गति पाउँछ, ती भगवान्को पूजा गर्ने छैनन् ॥४४॥ हे राजन् ! आफ्नू अन्तःकरणमा स्थित पुरुषोत्तम भगवान् सबै मनुष्यका द्रव्य, देश या अन्तःकरणद्वारा हुने सबै कलिका कल्मष पखालिदिन्छ ॥ ४५ ॥ भगवान् आफ्नू श्रवण, कीर्तन, ध्यान, पूजन र आदर गरेपछि हृदयमा स्थित हुन्छन् र मनुष्यका दश हजार जन्महरूका सबै दोष पाप नष्ट गरिदिन्छन् ॥ ४६ ॥ जस्तै—सुवर्णमा प्रविष्ट अग्नि तामा आदि अन्य धातुका संसर्गले प्राप्त उसका दुर्वर्ण अर्थात् मल नष्ट पारिदिन्छ, त्यस्तै नै चित्तमा प्रकटित

विष्णु भगवान् योगी जनका अशुभ-वासनाहरू नष्ट पारिदिन्छन् ॥ ४७ ॥ मानव-हृदयमा अनन्त भगवान् विराजमान भएरहि चित्त जति शास्त्रले शुद्ध हुन्छ, त्यति शुद्ध विद्या, तप, प्राणायाम, मैत्री, तीर्थस्नान, व्रत, दान र जप आदि गर्नाले पनि शुद्ध हुन सक्तैन। अतः हे राजन्! अब मरणकालमा तिमी सावधान भएर सबै प्रकारले केशवलाई आफ्नू हृदय-मन्दिरमा बसाल। यसले तिमीलाई परमगति प्राप्त हुनेछ ॥४९॥ हे तात! मुमुक्षु पुरुषको कर्तव्य हो—भगवान् परमेश्वरको नै ध्यान गरोस्। यसले ती सर्वाधार तथा सर्वात्मा श्रीहरि उसलाई आफ्नू शरीरमा लीन गरिलिने गर्दछन् ॥ ५० ॥ हे राजन्! दोषहरूको भण्डारस्वरूप यस कलिमा यही ठूलो गुण छ—यसमा श्रीकृष्ण भगवान्को कीर्तन मात्र गर्नाले पुरुष सबै बन्धनबाट छुटेर साक्षात् परमात्मालाई प्राप्त गर्दछ ॥ ५१ ॥ सत्ययुगमा विष्णु भगवान्का ध्यानले, त्रेतामा यज्ञादि द्वारा उनको यजन गर्नाले र द्वापरमा विष्णुको पूजा गर्नाले जुन फल मिल्दछ, त्यो कलिमा हरिकीर्तनले नै प्राप्त हुन्छ ॥५२॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषा-टीकायां तृतीयोऽध्यायः ॥३॥ (चार प्रकारको प्रलय

त्मगतो विष्णुर्योगिनामशुभाशयम् ॥ ४७ ॥ विद्यातपः प्राणनिरोधमैत्रीतीर्थाभिषेकव्रतदानजप्यैः ॥ नात्यन्तशुद्धिं लभतेऽन्तरात्मा यथा हृदिस्थे भगवत्यनन्ते ॥ ४८ ॥ तस्मात्सर्वात्मना राजन्हृदिस्थं कुरु केशवम् ॥ म्रियमाणो ह्यवहितस्ततो यासि परां गतिम् ॥ ४९ ॥ म्रियमाणैरभिध्येयो भगवान्परमेश्वरः ॥ आत्मभावं नयत्यङ्ग सर्वात्मा सर्वसंश्रयः ॥ ५० ॥ कलेर्दोषनिधे राजन्नस्ति ह्येको महान्गुणः ॥ कीर्तनादेव कृष्णस्य मुक्तसङ्गः परं व्रजेत् ॥ ५१ ॥ कृते यद्ध्यायतो विष्णुं त्रेतायां यजतो मखैः ॥ द्वापरे परिचर्यायां कलौ तद्धरिकीर्तनात् ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे तृतीयोऽध्यायः ॥ ३ ॥ श्रीशुक उवाच ॥ कालस्ते परमाण्वादिर्द्विपरार्धावधिर्नृप ॥ कथितो युगमानं च शृणु कल्पलयावपि ॥ १ ॥ चतुर्युगसहस्रं च ब्रह्मणो दिनमुच्यते ॥ स कल्पो यत्र मनवश्चतुर्दश विशांपते ॥ २ ॥ तदन्ते प्रलयस्तावान्ब्राह्मी रात्रिरुदाहृता ॥ त्रयो लोका इमे तत्र कल्पन्ते प्रलयाय हि ॥ ३ ॥ एष नैमित्तिकः प्रोक्तः प्रलयो यत्र विश्वसृक् ॥ शेतेऽनन्तासनो विश्वमात्मसात्कृत्य चात्मभूः ॥ ४ ॥ द्विपरार्धे त्वतिक्रान्ते ब्रह्मणः परमेष्ठिनः ॥ तदा प्रकृतयः सप्त कल्पन्ते प्रलयाय वै ॥ ५ ॥ एष प्राकृतिको राजन्प्रलयो यत्र लीयते ॥ आण्डकोशस्तु सङ्घातो विघात उपसादिते ॥ ६ ॥ पर्जन्यः शतवर्षाणि भूमौ राजन्न वर्षति ॥ तदा निरन्ने ह्यन्योन्यं भक्ष्यमाणाः क्षुधार्दिता ॥ ७ ॥ क्षयं

वर्णन) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! मैले परमाणुदेखि परार्ध कालसम्म चारै युगका प्रमाणको वर्णन पहिल्यै अर्थात् तृतीय स्कन्धमा गरिसकें। अब कल्प तथा प्रलयका वृत्तान्त पनि सुन ॥१॥ हे राजन्! ब्रह्माको दिन एक हजार चतुर्युगको हुन्छ। यही कल्प कहिन्छ र त्यसमा चौध मनु व्यतीत हुन्छन् ॥२॥ कालको अन्त्यमा त्यति नै प्रमाणको प्रलय हुन्छ, जसलाई ब्रह्माको रात्रि भन्दछन् र त्यही रात्रिमा तीनै लोकको प्रलय भइरहदछ ॥ ३ ॥ यसलाई नैमित्तिक प्रलय भन्दछन्। यसमा विश्वस्रष्टा र स्वायम्भू सहित भगवान् शेषशायी नारायण समस्त विश्वलाई आफूमा समेटेर सुत्दछन् ॥ ४ ॥ परमेष्ठी ब्रह्माजीका आयुष्यका दुइपरार्ध बितेपछि महत्तत्त्व, अहङ्कार तथा पञ्चतन्मात्रा यी सात प्रकृति पनि उनैमा लीन हुन्छन् ॥ ५ ॥ हे राजन्! यही प्राकृत प्रलय हो। यसमा प्रलयको कारण उपस्थित भइसकेपछि सबै प्राणीहरूको संघात ब्रह्माण्ड प्रकृतिमा गएर लीन हुन्छ ॥ ६ ॥

राजन् ! त्यस प्रलयकालमा मेघगण सय वर्षसम्म पृथ्वीमा पानी पार्दैनन् । अन्नको अभाव हुन्छ, प्रजाजन भोकले व्याकुल भएर भोकाले अर्कालाई मार्दै खाँदै आँदा विस्तार-विस्तार कालकृत उपद्रवले पीडित भएर क्षीण हुन्छन् । अनि प्रलयकालको सूर्य आफ्ना प्रचण्ड किरणले समुद्र, शरीर र पृथ्वीको सारा रस सुखाइदिन्छ र त्यसलाई छाड्दैन । त्यसपछि शेषजी को मुखबाट निस्कने संवर्तक अग्नि वायुको वेगले बढेर जनशून्य तल-अतलादि सारा भूविवरलाई डढाइदिन्छ । त्यसै वेला सूर्य र अग्निको ज्वालाले तल-माथि सबैतिर दग्ध ब्रह्माण्ड बलेको अगुल्टो झस्तै देखिन्छ । अनि धूवाँले व्याप्त आकाशमा सय वर्षभन्दा पनि बर्ता समयसम्म अति प्रचण्ड प्रलयकालीन वायु चल्न थाल्दछ र अनेक थरिका चित्र-विचित्र मेघ बारम्बार गर्जेर सय वर्षसम्म वर्षा गर्दै भयङ्कर शब्दले गर्जन्दै रहन्छन् । उस वेला यस ब्रह्माण्ड विवर भित्र सम्पूर्ण विश्वमा पानी नै पानी देखिन थाल्दछ ॥ ७-१३ ॥ यसरी जल प्रलय भइसकेपछि पृथिवीको गुण गन्धलाई जलले लिन्छ । गन्ध गएपछि पृथिवीको लय हुन्छ ॥१४॥ त्यसपछि जलको गुण रस र तेजमा लीन भएर जान्छ र रसहीन भएर जल पनि

यास्यन्ति शनकैः कालेनोपद्रुताः प्रजाः ॥ सामुद्रं दैहिकं भौमं रसं सांवर्तको रविः ॥ ८ ॥ रश्मिभिः पिबते घोरैः सर्वं नैव विमुञ्चति ॥ ततः संवर्तको वह्निः सङ्कर्षणमुखोत्थितः ॥ ९ ॥ दहत्यनिलवेगोत्थः शून्यान्भूविवरानथ ॥ उपर्यधः समन्ताच्च शिखाभिर्वह्निसूर्ययोः ॥ १० ॥ दह्यमानं विभात्यण्डं दग्धगोमयपिण्डवत् ॥ ततः प्रचण्डपवनो वर्षाणामधिकं शतम् ॥ ११ ॥ परः सांवर्तको वाति धूम्रं खं रजसावृतम् ॥ ततो मेघकुला न्यङ्ग चित्रवर्णान्यनेकशः ॥ १२ ॥ शतं वर्षाणि वर्षन्ति नदन्ति रभसस्वनैः ॥ तत एकोदकं विश्वं ब्रह्माण्डविवरान्तरम् ॥ १३ ॥ तदा भूमेर्गन्ध गुणं ग्रसन्त्याप उपप्लवे ॥ ग्रस्तगन्धा तु पृथिवी प्रलयत्वाय कल्पते ॥ १४ ॥ अपां रसमथो तेजस्ता लीयन्तेऽथ नीरसाः ॥ ग्रसते तेजसो रूपं वायुस्तद्रहितं तदा ॥१५॥ लीयते चानिले तेजो वायोः खं ग्रसते गुणम् ॥ स वै विशति खं राजंस्ततश्च नभसो गुणम् ॥ १६ ॥ शब्दं ग्रसहि भूता-दिर्नभस्तमनुलीयते ॥ तैजसश्चेन्द्रियाण्यङ्ग देवान्वैकारिको गुणैः ॥ १७ ॥ महान्ग्रसत्यहङ्कारं गुणाः सत्त्वादयश्च तम् ॥ ग्रसतेऽव्याकृतं राजन्गुणान्का-लेन चोदितम् ॥१८॥ न तस्य कालावयवैः परिणामादयो गुणाः ॥ अनाद्यनन्तमव्यक्तं नित्यं कारणमव्ययम् ॥१९॥ न यत्र वाचो न मनो न सत्वं तमो रजो वा महदादयोऽमी ॥ न प्राणबुद्धीन्द्रियदेवता वा न सन्निवेशः खलु लोककल्पः ॥ २० ॥ न स्वप्नजाग्रन्न च तत्सुषुप्तं न खं जलं भूर-

नष्ट हुने गर्दछ । तेजको गुण-रूपलाई वायुले लिन्दछ र तेज रूपरहित भएर वायुमा लीन हुने गर्दछ । अनि वायुको गुण जति आकाशले ग्रसित पार्दछ र त्यो गुण आकाशमा लीन भएर जान्छ । त्यसपछि हे राजन् ! आकाशका गुण-शब्दलाई भूतादि कारणस्वरूप तामस अहङ्कार आफूमा लीन पारिलिन्छ । अतएव आकाश उसैमा लय भएर जान्छ । यसै गरी इन्द्रियहरूलाई तिनका वृत्तिहरू समेत तैजस अहङ्कार तथा इन्द्रियाधिष्ठातृ देवताहरूलाई वैकारिक अहङ्कारले ग्रस्तछ ॥ १५-१७ ॥ अनि विविध अहङ्कारहरूलाई महत्तत्त्व, महत्तत्त्वलाई सत्त्वादि गुण र काल प्रेरित अव्याकृत ती गुणलाई निलिदिन्छ ॥ १८ ॥ त्यो अव्यक्त, अनादि, अनन्त, नित्य सबैको कारण तथा अविनाशी छ । उसमा कालको अवयवरूपी दिन-रात आदिद्वारा परिणामादि विकार उत्पन्न हुँदैनन् ॥ १९ ॥ उसमा वाणी, मन, सत्वगुण, रजोगुण, तमोगुण र महत्तत्त्वादि विकार प्राण, बुद्धि इन्द्रिय र देवता तथा यो सम्पूर्ण

1400

लोक-रचना आदि केही पनि रहन्नथ्यो ॥२०॥ जहाँ स्वप्न, जाग्रत् र सुषुप्ति—यी तीन अवस्था रहन्नन् र आकाश, जल, पृथिवी, वायु, अग्नि एवं सूर्यको पनि अभाव रहन्छ र त्यो निद्राएको समान शून्य जस्तै तथा अचिन्तनीय छ । विज्ञजन त्यही अव्यक्तलाई यस जगत्को मूल तत्त्व हो भन्दछन् ॥२१॥ यो प्रकार प्राकृत प्रलय उसै बेला हुन्छ, जब कालद्वारा तिरस्कृत पुरुष तथा प्रकृतिका शक्तिहरू विवश भएर विलीन हुने गर्दछन् ॥२२॥ त्यसपछि मोक्षरूपी आत्यन्तिक प्रलयको वर्णन गर्दै भन्दछन्—बुद्धि, इन्द्रिय र विषयरूपमा तिनको अधिष्ठान ज्ञान नै भासमान भइरहन्छ । जुनसुकै वस्तु पनि अन्त्ययुक्त छ, त्यो सत्य होइन । किनकि त्यो दृश्यमान छ र आफ्नू अधिष्ठानबाट अलग्ग उसको कुनै सत्ता छैन ॥२३॥ जस्तै—दृष्टी, नेत्र र रूप तेजबाट पृथक् हुन्नन्, त्यस्तै बुद्धि, इन्द्रिय र तिनका तन्मात्राहरू आफूभन्दा धेरै पृथक् अधिष्ठान सत्यस्वरूप ब्रह्मदेखि भिन्न रहन्न ॥२४॥ हे राजन् ! जाग्रत् स्वप्न, सुषुप्ति—यी तीन अवस्था बुद्धिको नै मानिएका छन् । अतः अन्तरात्मामा जुन विश्व, तैजस र प्राज्ञरूपी नानात्व छ, त्यो ब्रह्ममा मायामात्र छ, अरु केही छैन ॥२५॥ जस्तै—आकाशमा

निरर्कोऽग्निरर्कः ॥ संसुप्तवच्छून्यवदप्रतर्क्यं तन्मूलभूतं पदमामनन्ति ॥ २१ ॥ लयः प्राकृतिको ह्येष पुरुषाव्यक्तयोर्यदा ॥ शक्तयः सम्प्रलीयन्ते विवशाः कालविद्रुताः ॥ २२ ॥ बुद्धीन्द्रियार्थरूपेण ज्ञानं भाति तदाश्रयम् ॥ दृश्यत्वाव्यतिरेकाभ्यामाद्यन्तवदवस्तु यत् ॥ २३ ॥ दीपश्चक्षुश्च रूपं च ज्योतिषो न पृथग्भवेत् ॥ एवं धीः खानि मात्राश्च न स्युरन्यतमादृतात् ॥ २४ ॥ बुद्धेर्जागरणं स्वप्नः सुषुप्तिरिति चोच्यते ॥ मायामात्रमिदं राजन्नानात्वं प्रत्यगात्मनि ॥ २५ ॥ यथा जलधरा व्योम्नि भवन्ति न भवन्ति च ॥ ब्रह्मणीदं तथा विश्वमवयव्युदयाप्ययात् ॥ २६ ॥ सत्यं ह्यवयवः प्रोक्तः सर्वावयविनामिह ॥ विनार्थेन प्रतीयेरन्पटस्येवाङ्ग तन्तवः ॥ २७ ॥ यत्सामान्यविशेषाभ्यामुपलभ्येत स भ्रमः ॥ अन्योन्यापाश्रयात्सर्वमाद्यन्तवदवस्तु यत् ॥ २८ ॥ विकारः ख्यायमानोऽपि प्रत्यगात्मानमन्तरा ॥ न निरूप्योऽस्त्यणुरपि स्याच्चेच्चित्सम आत्मवत् ॥ २९ ॥ न हि सत्यस्य नानात्वमविद्वान्यदि मन्यते ॥ नानात्वं छिद्रयोर्यद्वज्ज्योतिषोर्वातयोरिव ॥ ३० ॥ यथा हिरण्यं बहुधा समीयते नृभिः क्रियाभि-

मेघ कहिले रहन्छ र कहिले रहन्न पनि, त्यसै गरी ब्रह्ममा यो सावयव जगत् उत्पत्ति र प्रलयको क्रमले कहिले हुन्छ, कहिले हुँदैन पनि ॥ २६ ॥ हे तात ! यस जगत्मा सबै सावयव पदार्थका कारणरूपी अवयव सत्य मानिएका छन् । किनकि लुगाको कारणभूत तन्तुहरू झैं कार्यरूपी अवयवभन्दा पृथक् पनि कारण अवयव देखापर्छन् ॥२७॥ सामान्य र विशेषरूपले जुन भेद देखिन्छन्, ती परस्पर यी दुवै अर्कोमा आश्रित रहनाले भ्रमरूप हुन्छन् । किनकि जुन पदार्थको आदि-अन्त्य हुन्छ, त्यो सबै मिथ्या नै हुन्छ ॥२८॥ यद्यपि यो प्रपञ्च विकार प्रतीत हुन्छ, तापनि प्रत्यगात्माबाट भिन्न अणुमात्र पनि यसको सत्ताको प्रतिपादन हुन सक्तैन । यसको सत्ता यदि मानौं भने पनि यो चिद्रूप आत्मा झैं यथार्थरूपका सत्य सिद्ध हुन्छ ॥२९॥ तर वस्तुमा अनेकता रहन्न यदि कोही अज्ञ पुरुष उसलाई अनेक मान्दछ भने त्यसको मान्नु घटाकाश, महाकाशमा आकाशस्थित सूर्य एवं जलमा प्रतिबिम्बित सूर्यमा वा आन्तरिक वायु र बाह्य वायुमा नानात्व मान्ने समान नै छ ॥३०॥ जस्तै—व्यवहारमा सुवर्ण भिन्न-भिन्न रचनाको भेदले कुण्डलादि विविधरूपले मनुष्यहरू द्वारा गरिन्छ त्यस्तै मानिय अर्थ क्षत्र लौकिक

तथा वैदिक वाक्यद्वारा थरि-थरिका व्याख्या गर्ने गर्दछन् ॥ ३१ ॥ जस्तै—सूर्यबाट उत्पन्न र सूर्यबाटै प्रकाशित मेघ सूर्यका अंशभूत नेत्रका निम्ति सूर्यदर्शनमा प्रतिबन्धक भइदिने गर्दछ, त्यस्तै ब्रह्मको कार्य ब्रह्मद्वारा नै प्रकाशित हुने अहङ्कारको अंशभूत आत्माको निम्ति ब्रह्मदर्शनमै प्रतिबन्धक हुन्छ ॥ ३२ ॥ जब सूर्यबाट प्रकट भएको मेघ छिन्न-भिन्न भएर फाट्तछ तब आफ्नू स्वरूपभूत सूर्यलाई देख्दछ । त्यस्तै—जुन बेला आत्माको उपाधिस्वरूप अहङ्कार विचारले नष्ट भएर जान्छ, अनि आफ्नू स्वरूपको स्मृति हुने गर्दछ ॥ ३३ ॥ हे प्रिय ! यसरी जब विवेकरूपी खड्गले यो जीव आफ्नू अहङ्काररूपी मायामय बन्धन काटेर ब्रह्मात्मभावमा स्थित हुन्छ, तब त्यस अवस्थालाई नै मानिस यस प्रपञ्चको आत्यन्तिक प्रलय भन्दछन् ॥३४॥ अनि नित्य प्रलयको वर्णन गर्दै भन्दछन् – हे शत्रुदमन ! केही सूक्ष्म विचारका ज्ञाता मानिस ब्रह्मादि समस्त भूतहरूको सर्वदा उत्पत्ति र प्रलय भइरहने कुरा भन्दछन् ॥ ३५ ॥ जस्तै—नदीको वेग र दीपशिखा आदि परिणामशील पदार्थका क्षण-क्षणमा साटिने स्थितिहरू उनका पल-पलमा हुने जन्म तथा नाशको कारण

व्यवहारवर्त्मसु ॥ एवं वचोभिर्भगवानधोक्षजो व्याख्यायते लौकिकवैदिकैर्जनैः ॥ ३१ ॥ यथा घनोऽर्कप्रभवोऽदर्शितो ह्यर्कांशभूतस्य च चक्षुष-स्तमः ॥ एवं त्वहं ब्रह्मगुणस्तदीक्षितो ब्रह्मांशकस्यात्मन आत्मबन्धनः ॥ ३२ ॥ घनो यदार्कप्रभवो विदीर्यते चक्षुःस्वरूपं रविमीक्षते तदा ॥ यदा ह्यहङ्कार उपाधिरात्मनो जिज्ञासया नश्यति तर्ह्यनुस्मरेत् ॥ ३३ ॥ यदैवमेतेन विवेकहेतिना मायामयाहङ्करणात्मबन्धनम् ॥ छित्त्वाच्युतात्मानुभवो-ऽवतिष्ठते तमाहुरात्यन्तिकमङ्गसम्प्लवम् ॥ ३४ ॥ नित्यदा सर्वभूतानां ब्रह्मादीनां परन्तप ॥ उत्पत्तिप्रलयावेके सूक्ष्मज्ञाः सम्प्रचक्षते ॥ ३५ ॥ कालस्रोतोजवेनाशु ह्रियमाणस्य नित्यदा ॥ परिणामिनामवस्थास्ता जन्मप्रलयहेतवः ॥ ३६ ॥ अनाद्यन्तवतानेन कालेनेश्वरमूर्तिना ॥ अवस्था नैव दृश्यन्ते वियति ज्योतिषामिव ॥ ३७ ॥ नित्यो नैमित्तिकश्चैव तथा प्राकृतिको लयः ॥ आत्यन्तिकश्च कथित कालस्य गतिरीदृशी ॥ ३८ ॥ एताः कुरुश्रेष्ठ जगद्विधातुर्नारायणस्याखिलसत्त्वधाम्नः ॥ लीलाकथास्ते कथिताः समासतः कार्त्स्न्येन नाजोऽप्यभिधातुमीशः ॥ ३९ ॥ संसार-सिन्धुमतिदुस्तरमुत्तितीर्षोर्नान्यः प्लवो भगवतः पुरुषोत्तमस्य ॥ लीलाकथारसनिषेवणमन्तरेण पुंसो भवेद्विविधदुःखदवार्दितस्य ॥ ४० ॥ पुराण-संहितामेतामृषिर्नारायणोऽव्ययः ॥ नारदाय पुरा प्राह कृष्णद्वैपायनाय सः ॥ ४१ ॥ स वै मह्यं महाराज भगवान्बादरायणः ॥ इमां भागवतीं

हुन्छन् । त्यसै गरी कालस्रोतको वेगले क्षीण हुने देहादि पनि क्षण-क्षणमा बन्दै र बिग्रन्दै रहन्छन् ॥ ३६ ॥ आकाशमा हिड्ने ताराहरूको गति समान ती अवस्थाहरू भगवानको स्वरूपभूत तथा आदि-अन्त्यरहित कालले गर्दा देखिन्दैनन् ॥ ३७ ॥ यसरी मैले तिमीसित नित्य, नैमित्यिक प्राकृत र आत्यन्तिक चारै थरिका प्रलयहरूको वर्णन गरेर सुनाएँ । हे राजन् ! यो कालको गति यस्तै नै छ ॥ ३८ ॥ हे कुरुश्रेष्ठ ! सर्वान्तर्यामी विश्वविधाता श्रीनारायणको यो लीला-कथा मैले संक्षेपमा तिमीलाई सुनाइदिएँ । यसको पूर्णकथा वर्णन गर्न स्वयं ब्रह्माजी पनि समर्थ छैनन् ॥ ३९ ॥ हे राजन् ! अत्यन्त दुस्तर संसार-सागरबाट पारी तर्न इच्छुक र थरि-थरिका दुःखरूप दावानलले सन्तप्त व्यक्तिका लागि भगवानका लीला-कथामृतको सेवन गर्नु बाहेक अरु कुनै उपाय छैन ॥ ४० ॥ यस पुराण-संहितालाई पहिले ऋषिवर नारायणले स्वयं नारदजीसित भने र नारदले श्रीकृष्ण द्वैपायन व्यासलाई

सुनाए ॥५१॥ हे महाराज ! अनि व्यासजीले यो वेदानुकूल संहितालाई अत्यन्त प्रसन्न भएर भनित भने ॥४२॥ हे कुरुश्रेष्ठ ! अब भविष्यमा नैमिषारण्य-क्षेत्रमा दीर्घकालीन यज्ञ ले अवसरमा ऋषिहरूले सोधेपछि सूतजीले यो शौनकादि ऋषिहरूलाई सुनाउने छन् ॥ ४३ ॥ इति श्रीमद्भागवते द्वादशस्कन्धे नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥ ४ ॥ ( परमार्थ निरावरण ) शुकदेवजी भन्दछन्—यस महापुराणमा बारम्बार विश्वात्मा भगवान् हरिको नै वर्णन गरिएको छ, जसको रजोगुणी-वृत्तिरूपिणी प्रसन्नताले ब्रह्मा र तमोगुणरूपी क्रोधले रुद्रको जन्म भएको छ ।।१।। हे राजन् ! 'म मर्नेछु' यो पशुबुद्धिलाई त्यागिदेऊ, किनकि देह जस्तै तिमी पहिले थिएनौ र अब उत्पन्न भएका छौ, यो कुरा पनि होइन । यसै निमित्त तिमी कहिल्यै पनि नाशमा प्राप्त हुँदैनौ ।।२।। जस्तै बीजबाट अङ्कुर र अङ्कुरबाट बीज उत्पन्न हुन्छ, त्यसै गरी तिमी पनि यस बाबत उत्पन्न भएर अब पुत्र-पुत्रादिको रूपमा फेरि उत्पन्न हुने

प्रीतः संहितां वेदसम्मिताम् ॥ ४२ ॥ एतां वक्ष्यत्यसौ सूत ऋषिभ्यो नैमिषालये ॥ दीर्घसत्रे कुरुश्रेष्ठ सम्पृष्टः शौनकादिभिः ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ श्रीशुक उवाच ॥ अत्रानुवर्ण्यतेऽभीक्ष्णं विश्वात्मा भगवान् हरिः ॥ यस्य प्रसादजो ब्रह्मा रुद्रः क्रोधसमुद्भवः ॥ १ ॥ त्वं तु राजन्मरिष्येति पशुबुद्धिमिमां जहि ॥ न जातः प्रागभूतोऽद्य देहवत्त्वं न नङ्क्ष्यसि ॥ २ ॥ न भविष्यसि भूत्वा त्वं पुत्रपौत्रादिरूपवान् ॥ बीजांकुरवद्देहादेर्व्यतिरिक्तो यथानलः ॥ ३ ॥ स्वप्ने यथा शिरश्छेदं पञ्चत्वाद्यात्मनः स्वयम् ॥ यस्मात्पश्यति देहस्य तत आत्मा ह्यजोऽमरः ॥ ४ ॥ घटे भिन्ने यथाकाश आकाशः स्याद्यथा पुरा ॥ एवं देहे मृते जीवो ब्रह्म सम्पद्यते पुनः ॥ ५ ॥ मनः सृजति वै देहान्गुणान्कर्माणि चात्मनः ॥ तन्मनः सृजते माया ततो जीवस्य संसृतिः ॥ ६ ॥ स्नेहाधिष्ठानवर्त्यग्निसंयोगो यावदीयते ॥ ततो

छैनौ ? किनकि देहबाट त देह नै उत्पन्न हुन्छ, आत्मा जन्मन्दैन । तिमी त काठमा व्याप्त अग्निको समान शरीरमा व्याप्त भएर पनि शरीरबाट एकदम भिन्न आत्मा हौ ।।३।। जस्तै मनुष्य स्वप्नमा आफ्नू टाउको काटिनु र मृत्यु आदि देख्दछ, त्यस्तै यो जाग्रत अवस्थामा पनि यो देहको मरणादि देख्दै रहन्छ । यसैले भनिन्छ—त्यो अजन्मा तथा अमर छ ।।४।। जस्तै घटा फुटेपछि घटाकाश पहिले जस्तै फेरि महाकाशरूपमा परिणत हुन्छ, त्यस्तै यो देह नष्ट भएपछि जीव ब्रह्मरूप हुने गर्दछ ।।५।। यस आत्माको निमित्त एकमात्र मन नै देह, गुण तथा कर्मादि रचना गर्छ र त्यस मनलाई मायाले रच्दछ । त्यस मायारूप उपाधिको कारण नै जीवलाई जन्म-मरणरूपी संसार प्राप्त हुन्छ ।।६।। जबसम्म तेल, तेलपात्र, बत्ती

---

* उदाहरण ( मनको मनमै रह्यो )—धेरै धनी सेठका चार छोरा थिए । सबै ठूला भएपछि सेठले केही सम्पत्ति सबैलाई समान रूपमा बाँडिदिए । केही अंश दान पुण्य गर्नका लागि आफ्नै राखे । उनले विचार गरे—आगामी वर्ष अमुक संस्था खोल्नेछु, यति रुपियाँ अमुक गौशालामा दान दिन्छु, पाठशाला स्थापित गर्दछु र अस्पताल बनाउन लगाउँछु । आफ्ना मित्रहरूसित [illegible] गर्थे । [illegible] सेठ अकस्मात् बिरामी पर्यो । मित्रहरू आएर भने—'सेठ ! अब अन्त्य समय छ । तिमीले धेरै कमाएका छौ । यसबाट अलिकति दान-पुण्य गरेर आफ्नू परलोक सुधार ।' [illegible] मित्रसित संकेत गरेर छोराहरूलाई भने—'यसैमा मेरो रुपियाँ गाडेको छ ।' यो ठिक पुत्रहरूले बुझे तर आफ्नू स्वार्थको निमित्त सबैसित भने—'बाबा भन्दैछन्—[illegible]' सेठले यति सुनेपछि कागज र कलम मागे । त्यसमा पुत्रहरूले भने—'बाबालाई त्रिदोष भइसकेको छ ।' यसले सेठको हृदयमा ठूलो धक्का लाग्यो र त्यहीं बिपत्ति [illegible] मनको इच्छा मनमै रह्यो ।

1403

भएर अरूलाई ठगेर किन्ने-बेच्ने काम गर्ने छन् । ती आपत्तिकाल नहुँदा पनि निन्दित जीविकालाई श्रेष्ठ मान्नेछन् ॥ ३५ ॥ सेवक धनहीन भएपछि आफ्ना साह्रै राम्रा, दयालु स्वामीलाई पनि त्याग्नेछन् र स्वामी रोगादिले गर्दा काम गर्न असमर्थ भए पनि आफ्नू कुलपरम्परादेखि राखेको सेवकलाई निकालि दिन्छन् । त्यसै गरी दूध नदिने गाईलाई पनि घरबाट धपाइदिनन् ॥ ३६ ॥ हे राजन् ! कलियुगमा मैथुनमै प्रीति राख्ने र स्त्री परायण दीनदुरुष आफ्ना पिता, दाजु-भाई र सबै बन्धुजनहरूलाई त्यागेर साली र सालासित सल्लाह लिनन् ॥३७॥ शूद्र तपस्वीको वेषले जीवन-निर्वाह गर्दै दान लिनेछन् र धर्मबाट अनभिज्ञ व्यक्ति अग्लो आसनमा बसेर श्रोतालाई धर्मको उपदेश दिनन् ॥३८॥ हे राजन् ! यस कलिमा पृथ्वीमा अन्नको अभाव भएपछि अनावृष्टिको डरले व्याकुल दुर्भिक्ष र राजाहरूले पीडित भएर नित्य उद्विग्न मन, प्रजा, अन्न-वस्त्र, जल, शयन, मैथुन, स्नान र भूषणादिले रहित भएर पिशाच जस्ता देखिने छन् ॥ ३९ ॥ ४० ॥ कलिमा मनुष्य थोरै धनको निम्ति पनि झगडा गरेर सौहार्दभावलाई तिलाञ्जलि दिई आफ्ना सम्बन्धीहरूलाई

स्विनीः ॥ ३६ ॥ पितृभ्रातृसुहृज्ज्ञातीन्हित्वा सौरतसौहृदाः ॥ ननान्दृश्यालसंवादाः दीनाः स्त्रैणाः कलौ नराः ॥ ३७ ॥ शुद्राः प्रतिग्रहीष्यन्ति तपोवेषोपजीविनः ॥ धर्मं वक्ष्यन्त्यधर्मज्ञा अधिरुह्योत्तमासनम् ॥ ३८ ॥ नित्यमुद्विग्नमनसो दुर्भिक्षकरकर्शिताः ॥ निरन्ने भूतले राजन्ननावृष्टि-भयातुराः ॥ ३९ ॥ वासोऽन्नपानशयनव्यवायस्नानभूषणैः ॥ हीनाः पिशाचसन्दर्शा भविष्यन्ति कलौ प्रजाः ॥ ४० ॥ कलौ काकिणिकेऽप्यर्थे विगृह्य त्यक्तसौहृदाः ॥ त्यक्ष्यन्ति च प्रियान्प्राणान्हनिष्यन्ति स्वकानपि ॥ ४१ ॥ न रक्षिष्यन्ति मनुजाः स्थविरौ पितरावपि ॥ पुत्रान्सर्वार्थकुशलान्क्षुद्राः शिश्नोदरम्भराः ॥ ४२ ॥ कलौ न राजञ्जगतां परं गुरुं त्रिलोकनाथानतपादपङ्कजम् ॥ प्रायेण मर्त्या भगवन्तमच्युतं यक्ष्यन्ति पाषण्डविभिन्नचेतसः ॥ ४३ ॥ यन्नामधेयं म्रियमाण आतुरः पतन्स्खलन्वा विवशो गृणन्पुमान् ॥ विमुक्तकर्मार्गल उत्तमां गतिं प्राप्नोति यक्ष्यन्ति न तं कलौ जनाः ॥ ४४ ॥ पुंसां कलिकृतान्दोषान्द्रव्यदेशात्मसम्भवान् ॥ सर्वान्हरति चित्तस्थो भगवान्पुरुषोत्तमः ॥ ४५ ॥ श्रुतः सङ्कीर्तितो ध्यातः पूजितश्चादृतोऽपि वा ॥ नृणां धुनोति भगवान्हृत्स्थो जन्मायुताशुभम् ॥ ४६ ॥ यथा हेम्नि स्थितो वह्निर्दुर्वर्णं हन्ति धातुजम् ॥ एवमा-

पनि मार्नेछन् र आफ्नू प्रिय प्राण पनि त्यागिदिनन् ॥४१॥ कलिका सबै क्षुद्राशय व्यक्ति शिश्नोदरपरायण भएर आफ्ना वृद्ध आमा-बाबुलाई पनि त्याग्नन् र पिता आफ्नू सबै कामका कुशल छोरोलाई रुग्हाल्न सक्ने छैनन् ॥ ४२ ॥ हे राजन् ! यस कलिमा वेद-विरुद्ध पाखण्ड-मार्गले विक्षिप्तचित्त पुरुष प्रायः जसका चरणकमलमा इन्द्रादि त्रिलोकका अधिपति शिर न्युराउँछन्, ती संसारमा गुरु अच्युत भगवान्को पूजा गर्ने छैनन् ॥४३॥ मर्ने बेलामा अत्यन्त आतुर पुरुष पराधीन भएर लड्दै-पड्दै पनि जसको नाम स्मरण गर्नाले सबै प्रकारका कर्मबन्धनबाट छुटेर उत्तम गति पाउँछ, ती भगवानको पूजा गर्ने छैनन् ॥४४॥ हे राजन् ! आफ्नू अन्तःकरणमा स्थित पुरुषोत्तम भगवान् सबै मनुष्यका द्रव्य, देश या अन्तःकरणद्वारा हुने सबै कलिका कल्मष पखालिदिन्छ ॥ ४५ ॥ भगवान् आफ्नू श्रवण, कीर्तन, ध्यान, पूजन र आदर गरेपछि हृदयमा स्थित हुन्छन् र मनुष्यका दश हजार जन्महरूका समस्त दोष पाप नष्ट गरिदिन्छन् ॥ ४६ ॥ जस्तै—सुवर्णमा प्रविष्ट अग्नि तामा आदि अन्य धातुका संसर्गले प्राप्त उसका दुर्वर्ण अर्थात् मल नष्ट पारिदिन्छ, त्यसै नै चित्तमा प्रकटित

1404

विष्णु भगवान् भोगी जनका अशुभ-वासनाहरू नष्ट पारिदिन्छन् ॥ ४७ ॥ मानव-हृदयमा अनन्त भगवान् विराजमान भएपछि चित्त जति राम्री शुद्ध हुन्छ, त्यति शुद्ध विद्या, तप, प्राणायाम, मैत्री, तीर्थस्नान, व्रत, दान र जप आदि गर्दैमा पनि शुद्ध हुन सक्तैन । अतः हे राजन् ! अब मरणकालमा तिमी सावधान भएर सबै प्रकारले केशवलाई आफ्नू हृदय-मन्दिरमा बसाल । यसले तिमीलाई परमगति प्राप्त हुनेछ ॥४९॥ हे तात ! मुमुक्षु पुरुषको कर्तव्य हो—भगवान् परमेश्वरको नै ध्यान गरोस् । यसले ती सर्वाधार तथा सर्वात्मा श्रीहरि उसलाई आफ्नू शरीरमा लीन गरिलिने गर्दछन् ॥ ५० ॥ हे राजन् ! दोषहरूको भण्डारस्वरूप यस कलिमा यही यौटा ठूलो गुण छ—यसमा श्रीकृष्ण भगवान्को कीर्तन मात्र गर्नाले पुरुष सबै बन्धनबाट छुटेर साक्षात् परमात्मालाई प्राप्त गर्दछ ॥ ५१ ॥ सत्ययुगमा विष्णु भगवान्को ध्यानले, त्रेतामा यज्ञादि द्वारा उनको यजन गर्नाले र द्वापरमा विष्णुको पूजा गर्नाले जुन फल मिल्दछ, त्यो कलिमा हरिकीर्तनले नै प्राप्त हुन्छ ॥५२॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषा-टीकायां तृतीयोऽध्यायः ॥३॥ (चार प्रकारको प्रलय

त्मगतो विष्णुर्योगिनामशुभाशयम् ॥ ४७ ॥ विद्यातपः प्राणनिरोधमैत्रीतीर्थाभिषेकव्रतदानजप्यैः ॥ नात्यन्तशुद्धिं लभतेऽन्तरात्मा यथा हृदिस्थे भगवत्यनन्ते ॥ ४८ ॥ तस्मात्सर्वात्मना राजन्हृदिस्थं कुरु केशवम् ॥ म्रियमाणो ह्यवहितस्ततो यासि परां गतिम् ॥ ४९ ॥ म्रियमाणैरभिध्येयो भगवान्परमेश्वरः ॥ आत्मभावं नयत्यङ्ग सर्वात्मा सर्वसंश्रयः ॥ ५० ॥ कलेर्दोषनिधे राजन्नस्ति ह्येको महान्गुणः ॥ कीर्तनादेव कृष्णस्य मुक्तसङ्गः परं व्रजेत् ॥ ५१ ॥ कृते यद्ध्यायतो विष्णुं त्रेतायां यजतो मखैः ॥ द्वापरे परिचर्यायां कलौ तद्धरिकीर्तनात् ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे तृतीयोऽध्यायः ॥ ३ ॥ श्रीशुक उवाच ॥ कालस्ते परमाण्वादिर्द्विपरार्धावधिर्नृप ॥ कथितो युगमानं च शृणु कल्पलयावपि ॥ १ ॥ चतुर्युगसहस्रं च ब्रह्मणो दिनमुच्यते ॥ स कल्पो यत्र मनवश्चतुर्दश विशांपते ॥ २ ॥ तदन्ते प्रलयस्तावान्ब्राह्मी रात्रिरुदाहृता ॥ त्रयो लोका इमे तत्र कल्पन्ते प्रलयाय हि ॥ ३ ॥ एष नैमित्तिकः प्रोक्तः प्रलयो यत्र विश्वसृक् ॥ शेतेऽनन्तासनो विश्वमात्मसात्कृत्य चात्मभूः ॥ ४ ॥ द्विपरार्धे त्वतिक्रान्ते ब्रह्मणः परमेष्ठिनः ॥ तदा प्रकृतयः सप्तकल्पन्ते प्रलयाय वै ॥ ५ ॥ एष प्राकृतिको राजन्प्रलयो यत्र लीयते ॥ आण्डकोशस्तु सङ्घातो विघात उपसादिते ॥ ६ ॥ पर्जन्यः शतवर्षाणि भूमौ राजन्न वर्षति ॥ तदा निरन्ने ह्यन्योन्यं भक्षमाणाः क्षुधार्दिता ॥ ७ ॥ क्षयं

वर्णन) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! मैले परमाणुदेखि परार्ध कालसम्म चारै युगका प्रमाणको वर्णन गरिसकें अर्थात् तृतीय स्कन्धमा गरिसकें । अब कल्प तथा प्रलयको वृत्तान्त पनि सुन ॥१॥ हे राजन् ! ब्रह्माको दिन एक हजार चतुर्युगको हुन्छ । यही कल्प कहिन्छ र त्यसमा चौध मनु व्यतीत हुन्छन् ॥२॥ कालको अन्त्यमा त्यति नै प्रमाणको प्रलय हुन्छ, जसलाई ब्रह्माको रात्रि भन्दछन् र त्यही रात्रिमा तीनै लोकको प्रलय भइरहदछ ॥ ३ ॥ यसलाई नैमित्तिक प्रलय भन्दछन् । यसमा विश्वस्रष्टा र स्वायम्भू सहित भगवान् शेषशायी नारायण समस्त विश्वलाई आफूमा समेटेर सुत्दछन् ॥ ४ ॥ परमेष्ठी ब्रह्माजीको आयुष्यको दुइपरार्ध बितेपछि महत्तत्त्व, अहङ्कार तथा पञ्चतन्मात्रा यी सात प्रकृति पनि उनैमा लीन हुन्छन् ॥ ५ ॥ हे राजन् ! यही प्राकृत प्रलय हो । यसमा प्रलयको कारण उपस्थित भइसकेपछि सबै प्राणीहरूको संघातरूप ब्रह्माण्ड प्रकृतिमा गएर लाम हुन्छ ॥ ६ ॥ हे

राजन् ! त्यस प्रलयकालमा मेघगण सय वर्षसम्म पृथ्वीमा पानी पार्दैनन् । अन्नको अभाव हुन्छ, प्रजाजन भोकले व्याकुल भएर यताले अर्कालाई मार्दै खाँदै जाँदा विस्तार-विस्तार कालकृत उपद्रवले पीडित भएर क्षीण हुन्छन् । अनि प्रलयकालको सूर्य आफ्नू प्रचण्ड किरणले समुद्र, शरीर र पृथ्वीको सारा रस सुखाइदिन्छ र त्यसलाई छाड्दैन । त्यसपछि शेषजी को मुखबाट निस्कने संवर्तक अग्नि वायुको वेगले बढेर जनशून्य तल-अतलादि सारा भूविवरलाई डढाइदिन्छ । त्यसै वेला सूर्य र अग्निको ज्वालाले तल-माथि सबैतिर दग्ध ब्रह्माण्ड बलेको अगुल्टो जस्तै देखिन्छ । अनि धूवाँले व्याप्त आकाशमा सय वर्षभन्दा पनि बढी समयसम्म अति प्रचण्ड प्रलयकालीन वायु चल्न थाल्दछ र अनेक थरिका चित्र-विचित्र मेघ बारम्बार गर्जेर सय वर्षसम्म वर्षा गर्दै भयङ्कर शब्दले गर्जंदै रहन्छन् । उस वेला यस ब्रह्माण्ड विवर भित्र सम्पूर्ण विश्वमा पानी नै पानी देखिन थाल्दछ ॥ ७-१३ ॥ यसरी जल प्रलय भइसकेपछि पृथिवीको गुण गन्धलाई जलले लिन्छ । गन्ध गएपछि पृथिवीको लय हुन्छ ॥१४॥ त्यसपछि जलको गुण रस र तेजमा लीन भएर जान्छ र रसहीन भएर जल पनि

यास्यन्ति शनकैः कालेनोपद्रुताः प्रजाः ॥ सामुद्रं दैहिकं भौमं रसं सांवर्तको रविः ॥ ८ ॥ रश्मिभिः पिबते घोरैः सर्वं नैव विमुञ्चति ॥ ततः संवर्तको वह्निः सङ्कर्षणमुखोत्थितः ॥ ९ ॥ दहत्यनिलवेगोत्थः शून्यान्भूविवरानथ ॥ उपर्यधः समन्ताच्च शिखाभिर्वह्निसूर्ययोः ॥ १० ॥ दह्यमानं विभात्यण्डं दग्धगोमयपिण्डवत् ॥ ततः प्रचण्डपवनो वर्षाणामधिकं शतम् ॥ ११ ॥ परः सांवर्तको वाति धूम्रं खं रजसावृतम् ॥ ततो मेघकुलान्यङ्ग चित्रवर्णान्यनेकशः ॥ १२ ॥ शतं वर्षाणि वर्षन्ति नदन्ति रभसस्वनैः ॥ तत एकोदकं विश्वं ब्रह्माण्डविवरान्तरम् ॥ १३ ॥ तदा भूमेर्गन्धगुणं ग्रसन्त्याप उपप्लवे ॥ ग्रस्तगन्धा तु पृथिवी प्रलयत्वाय कल्पते ॥ १४ ॥ अपां रसमथो तेजस्ता लीयन्तेऽथ नीरसाः ॥ ग्रसते तेजसो रूपं वायुस्तद्रहितं तदा ॥१५॥ लीयते चानिले तेजो वायोः खं ग्रसते गुणम् ॥ स वै विशति खं राजंस्ततश्च नभसो गुणम् ॥ १६ ॥ शब्दं ग्रसति भूतादिर्नभस्तमनुलीयते ॥ तैजसश्चेन्द्रियाण्यङ्ग देवान्वैकारिको गुणैः ॥ १७ ॥ महान्ग्रसत्यहङ्कारं गुणाः सत्त्वादयश्च तम् ॥ ग्रसतेऽव्याकृतं राजन्गुणान्कालेन चोदितम् ॥१८॥ न तस्य कालावयवैः परिणामादयो गुणाः ॥ अनाद्यनन्तमव्यक्तं नित्यं कारणमव्ययम् ॥१९॥ न यत्र वाचो न मनो न सत्त्वं तमो रजो वा महदादयोऽमी ॥ न प्राणबुद्धीन्द्रियदेवता वा न सन्निवेशः खलु लोककल्पः ॥ २० ॥ न स्वप्नजाग्रन्न च तत्सुषुप्तं न खं जलं भूर-

नष्ट हुने गर्दछ । तेजको गुण-रूपलाई वायुले लिन्दछ र तेज रूपरहित भएर वायुमा लीन हुने गर्दछ । अनि वायुको गुण जति आकाशले ग्रसित पार्दछ र त्यो गुण आकाशमा लीन भएर जान्छ । त्यसपछि हे राजन् ! आकाशका गुण-शब्दलाई भूतादिका कारणस्वरूप तामस अहङ्कार आफूमा लीन पारिदिन्छ । अतएव आकाश उसैमा लय भएर जान्छ । यसै गरी इन्द्रियहरूलाई तिनका वृत्तिहरू समेत तैजस अहङ्कार तथा इन्द्रियाधिष्ठात् देवताहरूलाई वैकारिक अहङ्कारले ग्रस्तछ ॥ १५-१७ ॥ अनि विविध अहङ्कारहरूलाई महत्तत्त्व, महत्तत्त्वलाई सत्वादि गुण र काल प्रेरित अव्याकृत ती गुणलाई निलिदिन्छ ॥ १८ ॥ त्यो अव्यक्त, अनादि, अनन्त, नित्य सबैको कारण तथा अविनाशी छ । उसमा कालको अवयवरूपी दिन-रात आदिद्वारा परिणामादि विकार उत्पन्न हुँदैनन् ॥ १९ ॥ जसमा वाणी, मन, सत्वगुण, रजोगुण, तमोगुण र महत्तत्त्वादि विकार प्राण, बुद्धि इन्द्रिय र देवता तथा यो सम्पूर्ण

लोक-रचना आदि केही पनि रहन्नन् ॥२०॥ जहाँ स्वप्न, जाग्रत् र सुषुप्ति—यी तीन अवस्था रहन्नन् र आकाश, जल, पृथिवी, वायु, अग्नि एवं सूर्यको पनि अभाव रहन्छ र त्यो निद्राको समान शून्य जस्तै तथा अचिन्तनीय छ । विद्वजन त्यही अव्यक्तलाई यस जगत्‌को मूल तत्त्व हो भन्दछन् ॥२१॥ यस प्रकार प्राकृत प्रलय उसै बेला हुन्छ, जब कालद्वारा तिरस्कृत पुरुष तथा प्रकृतिका शक्तिहरू विवश भएर विलीन हुने गर्दछन् ॥२२॥ त्यसपछि मोक्षरूपी आत्यन्तिक प्रलयको वर्णन गर्दै भन्दछन्—बुद्धि, इन्द्रिय र विषयरूपमा तिनको अधिष्ठान ज्ञान नै भासमान भइरहन्छ । जुनसुकै वस्तु पनि अन्त्ययुक्त छ, त्यो सत्य होइन । किनकि त्यो दृश्यमान छ र आफ्नू अधिष्ठानबाट अलग्ग उसको कुनै सत्ता छैन ॥२३॥ जस्तै—बत्ती, नेत्र र रूप तेजबाट पृथक् हुदैनन्, त्यस्तै बुद्धि, इन्द्रिय र तिनका तन्मात्राहरू आफूभन्दा बेग्लै पृथक् अधिष्ठान सत्यस्वरूप ब्रह्मदेखि भिन्न रहन्न ॥२४॥ हे राजन् ! जाग्रत् स्वप्न, सुषुप्ति—यी तीन अवस्था बुद्धिको नै मानिएका छन् । अतः अन्तरात्मामा जुन विश्व, तैजस र प्राज्ञरूपी नानात्व छ, त्यो ब्रह्ममा मायामात्र छ, अरु केही छैन ॥२५॥ जस्तै—आकाशमा

निलोऽग्निरर्कः ॥ संसुप्तवच्छून्यवदप्रतर्क्यं तन्मूलभूतं पदमामनन्ति ॥ २१ ॥ लयः प्राकृतिको ह्येष पुरुषाव्यक्तयोर्यदा ॥ शक्तयः सम्प्रलीयन्ते विवशाः कालविद्रुताः ॥ २२ ॥ बुद्धीन्द्रियार्थरूपेण ज्ञानं भाति तदाश्रयम् ॥ दृश्यत्वाव्यतिरेकाभ्यामाद्यन्तवदवस्तु यत् ॥ २३ ॥ दीपश्चक्षुश्च रूपं च ज्योतिषो म पृथग्भवेत् ॥ एवं धीः खानि मात्राश्च न स्युरन्यतमादृतात् ॥ २४ ॥ बुद्धेर्जागरणं स्वप्नः सुषुप्तिरिति चोच्यते ॥ मायामात्रमिदं राजन्नानात्वं प्रत्यगात्मनि ॥ २५ ॥ यथा जलधरा व्योम्नि भवन्ति न भवन्ति च ॥ ब्रह्मणीदं तथा विश्वमवयव्युदयाप्ययात् ॥ २६ ॥ सत्यं ह्यवयवः प्रोक्तः सर्वावयविनामिह ॥ विनार्थेन प्रतीयेरन्पटस्येवाङ्ग तन्तवः ॥ २७ ॥ यत्सामान्यविशेषाभ्यामुपलभ्येत स भ्रमः ॥ अन्योन्यापाश्रयात्सर्वमाद्यन्तवदवस्तु यत् ॥ २८ ॥ विकारः ख्यायमानोऽपि प्रत्यगात्मानमन्तरा ॥ न निरूप्योऽस्त्यणुरपि स्याच्चेच्चित्सम आत्मवत् ॥ २९ ॥ न हि सत्यस्य नानात्वमविद्वान्यदि मन्यते ॥ नानात्वं छिद्रयोर्यद्वज्ज्योतिषोर्वातयोरिव ॥ ३० ॥ यथा हिरण्यं बहुधा समीयते नृभिः क्रियाभि-

मेघ कहिले रहन्छ र कहिले रहन्न पनि, त्यसै गरी ब्रह्ममा यो सावयव जगत् उत्पत्ति र प्रलयको क्रमले कहिले हुन्छ, कहिले हुँदैन पनि ॥ २६ ॥ हे तात ! यस जगत्‌मा सबै सावयव पदार्थका कारणरूपी अवयवै सत्य मानिएका छन् । किनकि लुगाको कारणभूत तन्तुहरू झैं कार्यरूपी अवयवभन्दा पृथक् पनि कारण अवयव देखापर्दछन् ॥२७॥ सामान्य र विशेषरूपले जुन भेद देखिन्छन्, ती परस्पर यौटा अर्कोमा आश्रित रहनाले भ्रमरूप हुन्छन् । किनकि जुन पदार्थको आदि-अन्त्य हुन्छ, त्यो स्वयं मिथ्या नै हुन्छ ॥२८॥ यद्यपि यो प्रपञ्च विकार प्रतीत हुन्छ, तापनि प्रत्यगात्माबाट भिन्न अणुमात्र पनि यसको सत्ताको प्रतिपादन हुन सक्तैन । यसको सत्ता यदि मानौं भने पनि यो चिद्रूप आत्मा झैं थरि-थरिका सत्य सिद्ध हुन्छ ॥२९॥ तर वस्तुमा अनेकता रहन्न यदि कोही अज्ञ पुरुष उसलाई अनेक मान्दछ भने त्यसको मान्नु घटाकाश, महाकाशमा आकाशस्थित सूर्य एवं जलमा प्रतिबिम्बित सूर्यमा वा आन्तरिक वायु र बाह्य वायुमा नानात्व मान्नु समान नै छ ॥३०॥ जस्तै—व्यवहारमा सुवर्ण भिन्न-भिन्न रचनाको भेदले कुण्डलादि विविधरूपले मनुष्यहरू द्वारा गनिन्छ त्यस्तै मानिन्छ लौकिक

तथा वैदिक वाक्यद्वारा थरि-थरिका व्याख्या गर्ने गर्दछन् ॥ ३१ ॥ जस्तै—सूर्यबाट उत्पन्न र सूर्यबाटै प्रकाशित मेघ सूर्यका अंशभूत नेत्रका निम्ति सूर्यदर्शनमा प्रतिबन्धक भइदिने गर्दछ, त्यस्तै ब्रह्मको कार्य ब्रह्मद्वारा नै प्रकाशित हुने अहङ्कारको अंशभूत आत्माको निम्ति ब्रह्मदर्शनमै प्रतिबन्धक हुन्छ ॥ ३२ ॥ जब सूर्यबाट प्रकट भएको मेघ छिन्न-भिन्न भएर फाट्दछ तब आफ्नू स्वरूपभूत सूर्यलाई देख्दछ । त्यस्तै—जुन बेला आत्माको उपाधिस्वरूप अहङ्कार विचारले नष्ट भएर जान्छ, अनि आफ्नू स्वरूपको स्मृति हुने गर्दछ ॥ ३३ ॥ हे प्रिय ! यसरी जब विवेकरूपी खड्गले यो जीव आफ्नू अहङ्काररूपी मायामय बन्धन काटेर ब्रह्मात्मभावमा स्थित हुन्छ, तब त्यस अवस्थालाई नै मानिस यस प्रपञ्चको आत्यन्तिक प्रलय भन्दछन् ॥३४॥ अनि नित्य प्रलयको वर्णन गर्दै भन्दछन्— हे शत्रुदमन ! केही सूक्ष्म विचारका ज्ञाता मानिस ब्रह्मादि समस्त भूतहरूको सर्वदा उत्पत्ति र प्रलय भइरहने कुरा भन्दछन् ॥ ३५ ॥ जस्तै—नदीको वेग र दीपशिखा आदि परिणामशील पदार्थका क्षण-क्षणमा नाशिने स्थितिहरू उनको पल-पलमा हुने जन्म तथा नाशको कारण

व्यवहारवर्त्मसु ॥ एवं त्रयोभिर्भगवानधोक्षजो व्याख्यायते लौकिकवैदिकैर्जनैः ॥ ३१ ॥ यथा घनोऽर्कप्रभवोऽर्कदर्शितो ह्यर्कांशभूतस्य च चक्षुषस्तमः ॥ एवं त्वहं ब्रह्मगुणस्तदीक्षितो ब्रह्मांशकस्यात्मन आत्मबन्धनः ॥ ३२ ॥ घनो यदार्कप्रभवो विदीर्यते चक्षुःस्वरूपं रविमीक्षते तदा ॥ यदा ह्यहङ्कार उपाधिरात्मनो जिज्ञासया नश्यति तर्ह्यनुस्मरेत् ॥ ३३ ॥ यदैवमेतेन विवेकहेतिना मायामयाहङ्करणात्मबन्धनम् ॥ छित्त्वाच्युतात्मानुभवोऽवतिष्ठते तमाहुरात्यन्तिकमङ्गसम्प्लवम् ॥ ३४ ॥ नित्यदा सर्वभूतानां ब्रह्मादीनां परन्तप ॥ उत्पत्तिप्रलयावेके सूक्ष्मज्ञाः सम्प्रचक्षते ॥ ३५ ॥ कालस्रोतोजवेनाशु ह्रियमाणस्य नित्यदा ॥ परिणामिनामवस्थास्ता जन्मप्रलयहेतवः ॥ ३६ ॥ अनाद्यन्तवतानेन कालेनेश्वरमूर्तिना ॥ अवस्था नैव दृश्यन्ते वियति ज्योतिषामिव ॥ ३७ ॥ नित्यो नैमित्तिकश्चैव तथा प्राकृतिको लयः ॥ आत्यन्तिकश्च कथित कालस्य गतिरीदृशी ॥ ३८ ॥ एताः कुरुश्रेष्ठ जगद्विधातुर्नारायणस्याखिलसत्त्वधाम्नः ॥ लीलाकथास्ते कथिताः समासतः कार्त्स्न्येन नाजोऽप्यभिधातुमीशः ॥ ३९ ॥ संसारसिन्धुमतिदुस्तरमुत्तितीर्षोर्नान्यः प्लवो भगवतः पुरुषोत्तमस्य ॥ लीलाकथारसनिषेवणमन्तरेण पुंसो भवेद्विविधदुःखदवार्दितस्य ॥ ४० ॥ पुराणसंहितामेतामृषिर्नारायणोऽव्ययः ॥ नारदाय पुरा प्राह कृष्णद्वैपायनाय सः ॥ ४१ ॥ स वै मह्यं महाराज भगवान्बादरायणः ॥ इमां भागवतीं

हुन्छन् । त्यसै गरी कालस्रोतको वेगले क्षीण हुने देहादि पनि क्षण-क्षणमा बन्दै र बिग्रन्दै रहन्छन् ॥ ३६ ॥ आकाशमा हिंड्ने ताराहरूको गति समान ती अवस्थाहरू भगवान्का स्वरूपभूत तथा आदि-अन्त्यरहित कालले गर्दा देखिन्दैनन् ॥ ३७ ॥ यसरी मैले तिमीसित नित्य, नैमित्तिक प्राकृत र आत्यन्तिक चारै थरिका प्रलयहरूको वर्णन गरेर सुनाएँ । हे राजन् ! यो कालको गति यस्तै नै छ ॥ ३८ ॥ हे कुरुश्रेष्ठ ! सर्वान्तर्यामी विश्वविधाता श्रीनारायणको यो लीला-कथा मैले संक्षेपमा तिमीलाई सुनाइदिएँ । यसको पूर्णकथा वर्णन गर्न स्वयं ब्रह्माजी पनि समर्थ छैनन् ॥ ३९ ॥ हे राजन् ! अत्यन्त दुस्तर संसार-सागरबाट पारी तर्न इच्छुक र थरि-थरिका दुःखरूप दावानलले सन्तप्त व्यक्तिका लागि भगवान्का लीला-कथासारको सेवन गर्नु बाहेक अरू कुनै उपाय छैन ॥ ४० ॥ यस पुराण-संहितालाई पहिले ऋषिवर नारायणले स्वयं नारदजीसित भने र नारदले श्रीकृष्ण द्वैपायन व्यासलाई

सुनाए ॥५१॥ हे महाराज ! अनि व्यासजीले यो वेदानुकूल संहितालाई अत्यन्त प्रसन्न भएर मनित मने ॥४२॥ हे कुरुश्रेष्ठ ! अब भविष्यमा नैमिषारण्य-क्षेत्रमा दीर्घकालीन यज्ञ‌को अवसरमा ऋषिहरूले सोधेपछि सूतजीले यो शौनकादि ऋषिहरूलाई सुनाउने छन् ॥ ४३ ॥ इति श्रीमद्भागवते द्वादशस्कन्धे नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥ ४ ॥ ( परमार्थको निरावरण ) शुकदेवजी भन्दछन्—यस महापुराणमा बारम्बार विश्वात्मा भगवान् हरिको नै वर्णन गरिएको छ, जसका रजोगुणी-वृत्तिरूपिणी प्रसन्नताले ब्रह्मा र तमोगुणरूपी क्रोधले रुद्रको जन्म भएको छ ॥१॥ हे राजन् ! 'म मर्नेछु' यो पशुबुद्धिलाई त्यागिदेऊ, किनकि देह जस्तै तिमी पहिले थिएनौ र अब उत्पन्न भएका छौ, यो कुरा पनि होइन् । यसै निम्ति तिमी कहिल्यै पनि नाशमा प्राप्त हुँदैनौ ॥२॥ जस्तै बीजबाट अङ्कुर र अङ्कुरबाट बीज उत्पन्न हुन्छ, त्यसै गरी तिमी यस बाबत उत्पन्न भएर अब पुत्र-पुत्रादिको रूपमा फेरि उत्पन्न हुने

प्रीतः संहितां वेदसम्मिताम् ॥ ४२ ॥ एतां वक्ष्यत्यसौ सूत ऋषिभ्यो नैमिषालये ॥ दीर्घसत्रे कुरुश्रेष्ठ सम्पृष्टः शौनकादिभिः ॥ ४३ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ श्रीशुक उवाच ॥ अत्रानुवर्ण्यतेऽभीक्ष्णं विश्वात्मा भगवान् हरिः ॥ यस्य प्रसादजो ब्रह्मा रुद्रः क्रोधसमुद्भवः ॥ १ ॥ त्वं तु राजन्मरिष्येति पशुबुद्धिमिमां जहि ॥ न जातः प्रागभूतोऽद्य देहवत्त्वं न नङ्क्षयसि ॥ २ ॥ न भविष्यसि भूत्वा त्वं पुत्रपौत्रादिरूपवान् ॥ बीजांकुरवद्देहादव्यतिरिक्तो यथानलः ॥ ३ ॥ स्वप्ने यथा शिरश्छेदं पञ्चत्वाद्यात्मनः स्वयम् ॥ यस्मात्पश्यति देहस्य तत आत्मा ह्यजोऽमरः ॥ ४ ॥ घटे भिन्ने यथाकाश आकाशः स्याद्यथा पुरा ॥ एवं देहे मृते जीवो ब्रह्म सम्पद्यते पुनः ॥ ५ ॥ मनः सृजति वै देहान्गुणान्कर्माणि चात्मनः ॥ तन्मनः सृजते माया ततो जीवस्य संसृतिः ॥ ६ ॥ स्नेहाधिष्ठानवर्त्यग्निसंयोगो यावदीयते ॥ ततो

छैनौ ? किनकि देहबाट त देह नै उत्पन्न हुन्छ, आत्मा जन्मन्दैन । तिमी त काठमा व्याप्त अग्निको समान शरीरमा व्याप्त भएर पनि शरीरबाट एकदम भिन्न आत्मा हौ ॥३॥ जस्तै मनुष्य स्वप्नमा आफ्नू टाउको काटिनु र मृत्यु आदि देख्दछ, त्यस्तै यो जाग्रत अवस्थामा पनि यो देहको मरणादि देख्दै रहन्छ । यसैले भनिन्छ—त्यो अजन्मा तथा अमर छ ॥४॥ जस्तै घडा फुटेपछि घटाकाश पहिले जस्तै फेरि महाकाशरूपमा परिणत हुन्छ, त्यस्तै यो देह नष्ट भएपछि जीव ब्रह्मरूप हुने गर्दछ ॥५॥ यस आत्माको निम्ति एकमात्र * मन नै देह, गुण तथा कर्मादि रचना गर्छ र त्यस मनलाई मायाले रच्दछ । त्यस मायारूप उपाधिको कारण नै जीवलाई जन्म-मरणरूपी संसार प्राप्त हुन्छ ॥६॥ जबसम्म तेल, तेलपात्र, बत्ती

* उदाहरण ( मनको मनमै रह्यो )—कोही धनी सेठका चार छोरा थिए । सबै ठूला भएपछि सेठले केही सम्पत्ति सबैलाई समान रूपमा बाँडिदिए । केही अंश दान पुण्य गर्नका लागि आफूसित राखे । उनले विचार गरे—आगामी वर्ष अमुक संस्था खोल्नेछु, यति रुपियाँ अमुक गौशालामा दान दिन्छु, पाठशाला स्थापित गर्दछु र अस्पताल बनाउन लगाउँछु । आफ्ना मित्रहरूसित सेठ यही कुरा गर्ने गर्दथ्यो । उसै बखत सेठ अकस्मात् बिरामी पर्यो । मित्रहरू आएर भने—'सेठ ! अब अन्त्य समय छ । तिमीले धेरै कमाएका छौ । यसबाट अलिकति दान-पुण्य गरेर आफ्नू परलोक सुधार ।' त्यस बखत सेठ बोल्न सक्दैनथे । अतः तिनले [illegible] पुत्रहरूलाई भने—'यसैमा मेरो रुपियाँ गाडेको छ ।' त्यो ठीक पुत्रहरूले बुझे तर आफ्नू स्वार्थको निमित्त सबैसित भने—'बाबा भन्दैछन्—[illegible]' [illegible] पछि कागज र कलम मागे । त्यसमा पुत्रहरूले भने—'बाबालाई विशेष भइरहेको छ ।' यसले सेठको हृदयमा ठूलो धक्का लाग्यो र त्यही विपत्तिमा ऊ मरे । मनको इच्छा मनमै रह्यो ।

1407

तथा अग्निको संयोग रहन्छ तबसम्म मात्र बत्तीको दीपकत्व वर्तमान रहन्छ । त्यसै गरी संसार पनि देहसम्बन्धसम्म नै सीमित रहन्छ र रजोगुण, सत्त्वगुण र तमोगुणका वृत्तिले शरीर क्रमशः उत्पन्न, स्थित र नष्ट हुन्छन् तर यस संसारको नाश हुँदा पनि स्वयंप्रकाशशील आत्माको नाश हुन सक्तैन । त्यो व्यक्त र अव्यक्त भन्दा पर आकाश जस्तै सबैको आधार, निश्चल र अनन्त छ ॥ ७॥ ८ ॥ अतः हे राजन् ! तिमी भगवान् वासुदेवको ध्यान गर्दै द्रष्टा र दृश्य विषयक अन्वय-व्यतिरेकको विचारले पूर्ण आफ्नो बुद्धिद्वारा देहादि उपाधिमा स्थित आफ्नू आत्माको स्वयं चिन्तन गर ॥ ९ ॥ यदि यस्तो गर्न सक्यौ भने ब्राह्मणको वाक्यले प्रेरित तक्षक पनि तिमीलाई दग्ध पार्न सक्ने छैन । किनकि मृत्युका कारणभूत जुन सर्पदंशादि छन्, ती मृत्युका पनि मृत्युरूप ईश्वरको ध्वंस गर्न सक्तैनन् ॥ १० ॥ 'जो म हुँ, उही ब्रह्म हो र जुन परमपद ब्रह्म हो त्यही म हुँ' यस्तो विचार गर्दै आफ्नू आत्मालाई निष्कल परमात्मामा स्थित पारेपछि तिमी आफ्नू खुट्टामा टोकेर जिब्राले चाट्ने तक्षकलाई र आफ्नू देह र सारा विश्वलाई नै आफ्नू आत्माभन्दा भिन्न देख्ने छैनौ ॥११-१२॥

दीपस्य दीपत्वमेवं देहकृतो भवः ॥ रजः सत्त्वतमोवृत्त्या जायतेऽथ विनश्यति ॥७॥ न तत्रात्मा स्वयंज्योतिर्यो व्यक्ताव्यक्तयोः परः ॥ आकाश इव चाधारो ध्रुवोऽनन्तोपमस्ततः ॥ ८ ॥ एवमात्मानमात्मस्थमात्मनैवामृश प्रभो ॥ बुद्ध्यानुमानगर्भिण्या वासुदेवानुचिन्तया ॥ ९ ॥ चोदितो विप्रवाक्येन न त्वां धक्ष्यति तक्षकः ॥ मृत्यवो नोपधक्ष्यन्ति मृत्यूनां मृत्युमीश्वरम् ॥ १० ॥ अहं ब्रह्म परं धाम ब्रह्माहं परमं पदम् ॥ एवं समीक्ष्यात्मानमात्मन्याधाय निष्कले ॥ ११ ॥ दशन्तं तक्षकं पादे लेलिहानं विषाननैः ॥ न द्रक्ष्यसि शरीरं च विश्वं च पृथगात्मनः ॥ १२ ॥ एतत्ते कथितं तात यथात्मा पृष्टवान्नृप ॥ हरेर्विश्वात्मनश्चेष्टां किं भूयः श्रोतुमिच्छसि ॥ १३ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे ब्रह्मोपदेशो नाम पंचमोऽध्यायः ॥ ५ ॥ सूत उवाच ॥ एतन्निशम्य मुनिनाभिहितं परीक्षिद् व्यासात्मजेन निखिलात्मदृशा समेन ॥ तत्पादमूलमुपसृत्य नतेन मूर्ध्ना बद्धांजलिस्तमिदमाह स विष्णुरातः ॥ १ ॥ राजोवाच ॥ सिद्धोऽस्म्यनुगृहीतोऽस्मि भवता करुणात्मना ॥ श्रावितो यच्च मे साक्षादनादिनिधनोहरिः ॥२॥ नात्यद्भुतमहं मन्ये महतामच्युतात्मनाम् ॥ अज्ञेषु तापतप्तेषु भूतेषुयदनुग्रहः ॥ ३ ॥ पुराणसंहितामेतामश्रौष्म भवतो वयम् ॥ यस्यां खलूत्तमश्लोको भगवाननुवर्ण्यते ॥ ४ ॥ भगवंस्तक्षकादिभ्यो मृत्युभ्योनबिभेम्यहम् ॥ प्रविष्टो ब्रह्मनिर्वाणमभयं दर्शितं त्वया ॥ ५ ॥

हे राजन् ! सर्वात्मा श्रीहरिका लीलाहरूको विषयमा तिमीले जस्तो प्रश्न गरेका थियौ, त्यो सबै मैले सुनाएँ । अब के सुन्ने इच्छा छ, त्यो मलाई भन ॥ १३ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायां पञ्चमोऽध्यायः ॥ ५ ॥ ( राजा परीक्षितको देहत्याग, जनमेजयको सर्पयज्ञ र वेदका शाखाहरूको वर्णन ) सूतजी भन्दछन्—हे मुने ! सबै प्राणीलाई आफ्नै स्वरूप ठान्ने समदर्शी व्यास-पुत्र मुनिवर शुकदेवजीको यस्तो कथन सुनेर विष्णुरात महाराज परीक्षित्‌ले उनका चरण कमलमा आफ्नू मस्तक झुकाई प्रणाम गरे र हात जोरेर यसरी भने । राजा परीक्षित भन्दछन्—हे भगवन् ! हजुरले करुणार्द्रचित्तले मलाई आदि-अन्तरहित श्रीहरिको चरित्र सुनाउनु भयो । अतः म कृतकृत्य र अत्यन्त अनुग्रहीत भएको छु ॥ १ ॥ २ ॥ त्रिविध तापले सन्तप्त र अज्ञानी जीवमा भगवत्प्राण महानुभावहरूको जुन स्वभावतः अनुकम्पा हुन्छ, त्यसलाई कोही विस्मयजनक मान्दैनन्

१५/७

॥३॥ मैले हजुरको मुखबाट जुन पुराण संहिता सुनें, जसमा उत्तमश्लोक श्रीहरिको दर्शन पाइन्छ ॥ ४ ॥ हे भगवन् ! हजुरले मलाई निर्भय पारिदिनु भयो, यसले म ब्रह्मनिर्वाणमा प्रविष्ट भइसकें। अतः म तक्षकादि मृत्युमित पनि डराउन्न ॥ ५ ॥ हे ब्रह्मन् ! अब हजुर मलाई आज्ञा दिनोस् । अब म वाणीको संयम गरेर कामनारहित भई आफ्नू चित्त विष्णु भगवान्मा लगाएर प्राण त्यागिदिन्छु ॥ ६ ॥ हजुरले ज्ञान-विज्ञानमा मेरो स्थिति गराएर अज्ञान नष्ट पारिदिनुभयो र भगवान्को मङ्गलमय स्वरूप देखाइदिनु भयो ॥७॥ सूतजी भन्दछन्—राजा परीक्षित्को वचन सुनेर उनलाई आज्ञा दिई राजाद्वारा पूजित भई शुकदेवजी अन्य भिक्षुहरूका साथैं त्यहाँबाट हिंडिदिए ॥ ८ ॥ अनि सबै संशय रहित, आसक्तिहीन ब्रह्मनिष्ठ, महायोगी राजर्षी परीक्षित् पनि गङ्गाको पूर्वतटमा कुशासनमाथि उत्तर फर्कर बसे र आफ्नू चित्तलाई आत्मामा समाहित पारी वृक्षझैं शरणशून्य भएर परमात्माको ध्यानमा मग्न भए ॥ ९ ॥ १० ॥ त्यसपछि कुपित मुनिकुमार अर्थात् शृङ्गी ऋषिले पठाएको तक्षक नाग—राजालाई टोक्न हिंड्यो। उसले बाटोमा विष हरणमा समर्थ कश्यप

अनुजानीहि मां ब्रह्मन्वाचं यच्छाम्यधोक्षजे ॥ मुक्तकामाशयं चेतः प्रवेश्य विसृजाम्यसून् ॥ ६ ॥ अज्ञानं च निरस्तं मे ज्ञानविज्ञाननिष्ठया ॥ भवता दर्शितं क्षेमं परं भगवतः पदम् ॥ ७ ॥ सूत उवाच ॥ इत्युक्तस्तमनुज्ञाप्य भगवान्बादरायणिः ॥ जगाम भिक्षुभिः साकं नरदेवेन पूजितः ॥ ८ ॥ परीक्षिदपि राजर्षिरात्मन्यात्मानमात्मना ॥ समाधाय परं दध्यावस्पन्दासुर्यथा तरुः ॥ ९ ॥ प्राक्कूले बर्हिष्यासीनो गङ्गाकूल उदङ्मुखः ब्रह्मभूतो महायोगी निःसङ्गश्छिन्नसंशयः ॥ १० ॥ तक्षकः प्रहितो विप्राः क्रुद्धेन द्विजसूनुना ॥ हन्तुकामो नृपं गच्छन्ददर्श पथि कश्यपम् ॥११॥ तं तर्पयित्वा द्रविणैर्निवर्त्य विषहारिणम् ॥ द्विजरूपप्रतिच्छन्नः कामरूपोऽदशन्नृपम् ॥ १२ ॥ ब्रह्मभूतस्य राजर्षेर्देहोऽहिगलाग्निना ॥ बभूव भस्मसात्सद्यः पश्यतां सर्वदेहिनाम् ॥ १३ ॥ हाहाकारो महानासीद्भुवि खे दिक्षु सर्वतः ॥ विस्मिता ह्यभवन्सर्वे देवासुरनरादयः ॥ १४ ॥ देवदुन्दुभयो नेदुर्गन्धर्वाप्सरसो जगुः ॥ ववृषुः पुष्पवर्षाणि विबुधाः साधुवादिनः ॥ १५ ॥ जनमेजयः स्वपितरं श्रुत्वा तक्षकभक्षितम् ॥ यथा जुहाव संक्रुद्धो नागान्सत्रे सह द्विजैः ॥१६॥ सर्पसत्रे समिद्धाग्नौ दह्यमानान्महोरगान् ॥ दृष्ट्वेन्द्रं भयसंविग्नस्तक्षकः शरणं ययौ ॥ १७ ॥ अपश्यंस्तक्षकं तत्र राजा पारीक्षितो द्विजान् ॥ उवाच तक्षकः कस्मान्न दह्येतोरगाधमः ॥ १८ ॥ तं गोपायति राजेन्द्र शक्रः शरणमागतम् ॥

नामका ब्राह्मणलाई देख्यो। त्यो स्वेच्छारूपधारी तक्षकले उनलाई धेरै धन दिएर फर्काइदियो र स्वयं ब्राह्मणवेषले राजाकहाँ पुग्यो र मौका पाएर राजालाई डस्यो ॥ ११-१२ ॥ अनि सबैले देख्दा-देख्दै ब्रह्मभूत राजर्षि परीक्षित्को देह विषाग्निले डढेर खरानी भयो ॥ १३ ॥ त्यो अनर्थले, पृथ्वी, आकाश तथा समस्त दिशाहरूमा सर्वत्र ठूलो हाहाकार मच्चियो, देवता, असुर र मनुष्यादि सबै आश्चर्यचकित भए ॥ १४ ॥ त्यस बखत आकाशमा देव-दुन्दुभिहरू बज्न लागे, गन्धर्व र अप्सराहरू नाच-गान गर्नलागे देवता 'साधु-साधु' भन्दै बराबर पुष्प-वर्षा गर्नलागे ॥ १५ ॥ आफ्ना पिता तक्षकद्वारा डसिएको कुरा सुनेर परीक्षित्-नन्दन राजा जनमेजयले सान्है रिसाई ब्राह्मणहरूका साथ विधिपूर्वक सर्प-नाशक यज्ञ आरम्भ गरिदिए ॥ १६ ॥ त्यस यज्ञमा ठूला-ठूला सर्पलाई बल्दो आगोमा भस्म भएका देखेर तक्षक भयभीत भई इन्द्रका शरणमा गया ॥ १७ ॥

राजा जनमेजयले निकै बेरसम्म तक्षक नआएको देखेर ऋत्विग्हरूसित भने–तपाईंहरू त्यो सर्पाधम तक्षकलाई किन पोल्नु हुन्न ? ऋत्विजले भने–महाराज ! त्यसलाई शरणागत जानेर इन्द्र उसको रक्षा गरिरहेछन् । उनले रोकेर नै अहसम्म तक्षक अग्निकुण्डमा परेको छैन । यति सुनेर जनमेजयले भने–'हे विप्र हो ! त्यसो भए तपाईंहरू इन्द्रसमेत तक्षकलाई अग्निमा किन पोलिदिनु हुन्न ?' ॥ १९ ॥ २० ॥ राजाको कथन सुनेर ब्राह्मणहरूले इन्द्रसमेत तक्षकको आवाहन गरे । तिनले भने–'हे तक्षक ! तिमी मरुद्गणका मित्र इन्द्र सहित अग्निमा पर' ॥२१॥ ब्राह्मणका यी आकर्षण वाक्यले इन्द्र आफ्नू ठाउँबाट चलायमान भए र विमान तथा तक्षक सहित आत्तिए ॥ २२ ॥ इन्द्रलाई विमान र तक्षक सहित आकाशबाट झर्न लागेका देखेर अङ्गिरातनय बृहस्पतिले राजासित भने–॥ २३ ॥ हे राजन् ! यो सर्पराजलाई तिमी मार्न सक्तैनौ किनकि यो अमृत पान गरेको छ । अतः अमर छ ॥ २४ ॥

तेन संस्तम्भितः सर्पस्तस्मान्नाग्नौ पतत्यसौ ॥ १९ ॥ पारीक्षित इति श्रुत्वा प्राहर्त्विज उदारधीः ॥ सहेन्द्रस्तक्षको विप्रा नाग्नौ किमिति पात्यते ॥ २० ॥ तच्छ्रुत्वा जुहुवुर्विप्राः सहेन्द्रं तक्षकं मखे ॥ तक्षकाशु पतस्वेह सहेन्द्रेण मरुत्वता ॥ २१ ॥ इति ब्रह्मोदिताक्षेपैः स्थानादिन्द्रः प्रचालितः ॥ बभूव सम्भ्रान्तमतिः सविमानः सतक्षकः ॥ २२ ॥ तं पतन्तं विमानेन सहतक्षकमम्बरात् ॥ विलोक्याङ्गिरसः प्राह राजानं तं बृहस्पतिः ॥२३॥ नैष त्वया मनुष्येन्द्र वधमर्हति सर्पराट् ॥ अनेन पीतममृतमथवा अजरामरः ॥ २४ ॥ जीवितं मरणं जन्तोर्गतिः स्वेनैव कर्मणा ॥ राजंस्ततोऽन्यो नान्यस्य प्रदाता सुखदुःखयोः ॥ २५ ॥ सर्पचौराग्निविद्युद्भ्यः क्षुत्तृड्व्याध्यादिभिर्नृप ॥ पंचत्वमृच्छते जन्तुर्भुङ्क्त आरब्धकर्म तत् ॥ २६ ॥ तस्मात्सत्रमिदं राजन्संस्थीयेताभिचारिकम् ॥ सर्पा अनागसो दग्धा जनैर्दिष्टं हि भुज्यते ॥ २७ ॥ सूत उवाच ॥ इत्युक्तः स तथेत्याह महर्षेर्मानयन् वचः ॥ सर्पसत्रादुपरतः पूजयामास वाक्पतिम् ॥ २८ ॥ सैषा विष्णोर्महामायाबाध्ययालक्षणा यया ॥ मुह्यन्त्यस्यैवात्मभूता भूतेषु गुणवृत्तिभिः ॥२९॥ न यत्र दम्भीत्यभया विराजिता मायात्मवादेऽसकृदात्मवादिभिः ॥ न यद्विवादो विविधस्तदाश्रयो मनश्च सङ्कल्पविकल्पवृत्ति यत् ॥ ३० ॥ न यत्र सृजतोभयोः परं श्रेयश्च जीवस्त्रिभिरन्वितस्त्वहम् ॥ तदेतदुत्सादितबाध्यबाधकं निषिध्य चोर्मीन्विरमेत्स्वयं मुनिः

प्रत्येक जीवको मरण-जीवन र गति आफ्नै कर्मले हुन्छ । अतः कुनै अन्य पुरुष कसैलाई सुख-दुःखको दाता छैन ॥२५॥ हे नृप ! मनुष्य जुन सर्प, चोर, अग्नि, बिजुली, भोक-प्यास र व्याधि आदिको कारण मृत्युमा पुग्दछ, त्यो केवल आफ्नू प्रारब्धकर्म भोग्दछ ॥२६॥ सबै मनुष्य आफाफ्नू प्रारब्ध नै भोग्दछन् । अतः हे राजन् ! तिमी अब यो हिंसामय यज्ञ रोक । हेर, यसमा कति निरपराध सर्प डढे' ॥२७॥ सूतजी भन्दछन्–महर्षि बृहस्पतिले यति भनेपछि उनका कथनको आदर गर्दै 'हुन्छ' भनेर त्यो सर्पसत्रबाट उपरत भए र उनले बृहस्पतिको पूजा गरे ॥२८॥ यो पनि विष्णु भगवानको अलक्षित माया नै हो जुन अबध्य मायाले विष्णु भगवानकै अंशभूत जीव सत्वादि गुणका वृत्तिले यी भौतिक देहादिमा मोहित

हुन्छन् ॥२९॥ 'अमुक पुरुष मायावी छ' यो धारणा भएपछि बुद्धिमा 'माया' स्फुरित हुन्छ* त्यो आत्मवादीद्वारा विचार गर्ने बेलामा जुन विष्णु भगवान्को नजीक निर्भयतापूर्वक-टिक्न सक्तिन र जहाँ मायाका आश्रित थरि-थरिका विवाद र सङ्कल्पमय वृत्ति हुने मन पनि टिक्तैन। जहाँ सृष्टि रच्ने कारण समेत रचिने वस्तु तथा ती दुवैको परम साध्य फल यी मध्ये कुनै पनि छैन र त्यहाँ जीव तथा तीन गुणले युक्त अहङ्कार पनि रहन्न। यसरी बाध्य-बाधक भावले हीन परमात्माको रूपमा मुनिजन अहङ्कार आदि ऊर्मिहरूको बाध गरेर लीन होउन् ॥ ३०॥३१ ॥ जसको परमात्मा बाहेक अरु कसैं प्रति प्रेम रहन्न जो 'नेति-नेति' वाक्य द्वारा अनात्मवस्तुको निषेध गर्न संलग्न रहन्छन्, ती ज्ञानी उसैलाई विष्णु भगवान्को परमपद भन्दछन् र इन्द्रिय सहित अन्तःकरणलाई वशीभूत पार्ने विद्वान्ले अनात्मभाव त्यागेर एकाग्रचित्तले प्रभुको चिन्तन गर्दै उसैलाई ध्येयरूपले

॥ ३१ ॥ परं पदं वैष्णवमामनन्ति तद् यन्नेति नेतीत्यतदुत्सिसृक्षवः ॥ विसृज्य दौरात्म्यमनन्यसौहृदा हृदोपगुह्यावसितं समाहितैः ॥ ३२ ॥ त एतदधिगच्छन्ति विष्णोर्यत्परमं पदम् ॥ अहं ममेति दौर्जन्यं न येषां देहगेहजम् ॥३३॥ अतिवादांस्तितिक्षेत नावमन्येत न ॥ कञ्चन चेमं देह-माश्रित्य वैरं कुर्वीत केनचित् ॥३४॥ नमो भगवते तस्मै कृष्णायाकुण्ठमेधसे ॥ यत्पादाम्बुरुहध्यानात्संहितामध्यगामिमाम् ॥३५॥ शौनक उवाच ॥ पैलादिभिर्व्यासशिष्यैर्वेदाचार्यैर्महात्मभिः ॥ वेदाश्च कतिधा व्यस्ता एतत्सौम्याभिधेहि नः ॥३६॥ सूत उवाच ॥ समाहितात्मनो ब्रह्मन्ब्रह्मणःपरमेष्ठिनः हृद्याकाशादभून्नादो वृत्तिरोधाद्विभाव्यते ॥ ३७ ॥ यदुपासनया ब्रह्मन्योगिनो मलमात्मनः ॥ द्रव्यक्रियाकारकाख्यं धूत्वा यान्त्यपुनर्भवम् ॥३८॥

मान्दछन् ॥ ३२ ॥ जुन व्यक्तिमा देह-गेहादि सम्बन्धिनी अहंता-ममतारूपिणी दुर्जनता रहन्छ उनै विष्णुको परमपद प्राप्त गर्छन् ॥ ३३ ॥ जो यो परमपद पाउने मन गर्छन् ती अर्काको कटुवचन खपून्, कसैको अपमान नगरून् र शरीरले कसैसित वैरभाव नराखुन् ॥ ३४ ॥ जसका चरणको ध्यान गरेर मैले यो पुराण संहिता पाएँ, ती अकुण्ठमेधा व्यासदेवलाई नमस्कार छ ॥ ३५ ॥ यति सुनेर शौनकले सोधे–हे सौम्य! व्यासदेवका शिष्य महात्मा पैल आदि वेदका आचार्यले वेदहरूको कसरी विभाग गरे यो आज्ञा हवस् ॥ ३६ ॥ सूतजी भन्दछन्––हे ब्रह्मन्! एक समय परमेष्ठी ब्रह्मा एकाग्रचित्त भएपछि उनको हृदयाकाशमा एक प्रकारको शब्द ध्वनि भयो, जसको श्रवणेन्द्रियको वृत्ति अवरुद्ध भएपछि हामी सबैलाई पनि भान हुन्छ ॥ ३७ ॥ हे ब्रह्मन्! जुन ब्रह्मको उपासना गरेर योगीजन आफ्नू अन्तःकरणको द्रव्य, क्रिया र कारकरूप मल नष्ट

---

* दृष्टान्त (यो माछी हो)—यौटा गुरु आफ्नू शिष्यसित गइरहेका थिए। बाटोमा यौटा माछी माछा मारिरहेको थियो। गुरु टाढको निहुरापर गइरहेका थिए। शिष्य त्यस माछीलाई 'अहिंसा परमोधर्म!' को उपदेश दिन लाग्यो। माछीले भन्यो–'बाबाजी! आफ्नू बाटो लाग। यहाँ उपदेश दिन तिमीलाई कसले बोलायो!' शिष्यले आफ्नू लट्ठी सम्हाल्यो। विवाद बढ्यो। गुरुजी अगाडि गइसकेका थिए। झगडा सुनेर फर्कर र शिष्यसित भने–'हाम्रो धर्म उपदेश दिनु हो–दण्ड दिने होइन। दण्ड क्षत्रिय दिन्छन्।' शिष्यले भन्यो–'यहाँ क्षत्रिय कोही छैन। क्षत्रिय भए यसलाई गाई किन काटिर्य? अनि यो दुष्टलाई दण्ड कसले दिन्छ? हजुर आज्ञा दिनोस्–म यिनको खप्पर फुटाइदिन्छु।' गुरुले भने––'त्यस्तो होइन। कर्मको गति विचित्र छ। सबैलाई दण्ड दिने ईश्वर छन्। यस संसारमा राम्रा नराम्रा कर्मका फल अवश्य भोग्नु पर्दछ।' केही दिनपछि ती गुरु शिष्य फेरि त्यही बाटो गरेर फर्कन्दा देखे–यौटा मरेको सर्पमाथि हजारौं कमिला चिलाविरहेका थिए। शिष्य त्यो देखेर विस्मय गर्न लाग्यो। गुरुले भने–'यो सर्प उही माछी हो यी माछाहरू हुन् जसलाई यसले मारेको थियो। तो एकन भइर पूर्वजन्मको बाटो फेर्दै छन्। ईश्वरीय न्यायको उल्लङ्घन कोही गर्न सक्तैन। यसैले शुद्ध आचरणले बस्नू।

पारेर अपुनर्जन्मरूपी मोक्षपद पाउँछन् ॥ ३८ ॥ उहाँ नादबाट तीन मात्रायुक्त ओंकार उत्पन्न भयो, जसको उत्पत्ति कसैलाई थाहा छैन, जो स्वयं प्रकाशमय छ र जो परमात्मा ब्रह्म भगवान्‌को लिङ्ग अर्थात् बोधक छ ॥ ३९ ॥ जो श्रवणशक्ति हराएपछि पनि अव्यक्त ओंकारलाई सुन्दछ, जो सुषुप्ति आदि अवस्थामा इन्द्रियहरू नरहे पनि तिनको अभाव स्वीकार गर्दछ, त्यही ओंकार परमात्मा हो। जसद्वारा वैखरी वाणी अभिव्यञ्जित हुन्छ, जुन ओंकार हृदयाकाशमा केवल आत्माले अभिव्यक्त हुन्छ ॥४०॥ त्यो आफ्नू आधारस्वरूप परमात्मा ब्रह्मको साक्षात् वाचक छ र यही मन्त्र, उपनिषद् तथा वेदका सनातन बीज मानिन्छन् ॥ ४१ ॥ हे भार्गव ! त्यस ओंकारमा अ, उ, म–तीन वर्ण छन् जो क्रमशः सत्व, रज, तम–यी तीन गुण; ऋक्, यजुः, साम–यी तीन वेद; भूः, भुवः, स्वः–यी तीन अर्थ र जाग्रत, स्वप्न, सुषुप्ति–यी तीन वृत्तिलाई तीन भावले धारण गर्दछन् ॥४२॥ फेरि भगवान ब्रह्माजीले त्यस ओङ्कारबाट नै अन्तःस्थ अर्थात् य,र,ल, व ऊष्मा अर्थात् श, ष, स, ह स्वर अर्थात् 'अ' देखि 'औ' सम्म, स्पर्श अर्थात् 'क' देखि 'म' देखि 'म' सम्म र ह्रस्व दीर्घादि लक्षणले

ततोऽभूत्त्रिवृदोङ्कारो योऽव्यक्तप्रभवः स्वराट् ॥ यत्तल्लिंगं भगवतो ब्रह्मणः परमात्मनः ॥३९॥ शृणोति य इमं स्फोटं सुप्तश्रोत्रे च शून्यदृक् ॥ येन वाग्व्यज्यते यस्य व्यक्तिराकाश आत्मनः ॥ ४० ॥ स्वधाम्नो ब्रह्मणः साक्षाद्वाचकः परमात्मनः ॥ स सर्वमन्त्रोपनिषद्वेदबीजं सनातनम् ॥ ४१ ॥ तस्य ह्यासंस्त्रयो वर्णा अकाराद्या भृगूद्वह ॥ धार्यन्ते यैस्त्रयो भावा गुणनामार्थवृत्तयः ॥ ४२ ॥ ततोऽक्षरसमाम्नायमसृजद्भगवानजः ॥ अन्तःस्थोष्मस्वरस्पर्शह्रस्वदीर्घादिलक्षणम् ॥ ४३ ॥ तेनासौ चतुरो वेदांश्चतुर्भिर्वदनैर्विभुः ॥ सव्याहृतिकान्सोङ्कारांश्चातुर्होत्रविवक्षया ॥ ४४ ॥ पुत्रानध्यापयत्ताँस्तु ब्रह्मर्षीन्ब्रह्मकोविदान् ॥ ते तु धर्मोपदेष्टारः स्वपुत्रेभ्यः समादिशन् ॥ ४५ ॥ ते परम्परया प्राप्तास्तत्तच्छिष्यैर्धृतव्रतैः ॥ चतुर्युगेष्वथ व्यस्ता द्वापरादौ महर्षिभिः ॥ ५६ ॥ क्षीणायुषः क्षीणसत्त्वान्दुर्मेधान्वीक्ष्य कालतः ॥ वेदान्ब्रह्मर्षयो व्यस्यन्हृदिस्थाच्युतचोदिताः ॥ ४७ ॥ अस्मिन्नप्यन्तरे ब्रह्मन्भगवाँल्लोकभावनः ॥ ब्रह्मेशाद्यैर्लोकपालैर्याचितो धर्मगुप्तये ॥ ४७ ॥ पराशरात्सत्यवत्यामंशांशकलया विभुः ॥ अवतीर्णो महाभाग वेदं चक्रे चतुर्विधम् ॥ ४९ ॥ ऋगथर्वयजुःसाम्नां राशिनुद्धृत्य वर्गशः ॥ चतस्रः संहिताश्चक्रे मन्त्रैर्मणिगणा इव ॥५०॥ तासां स चतुरः

युक्त अक्षर सामान्य अर्थात् सम्पूर्ण वर्णसमूह रचे ॥४३॥ त्यस वर्णमालाद्वारा नै भगवान् ब्रह्माजीले आफ्ना चारमुखबाट होता, अध्वर्यु आदि चार ऋत्विजका कर्म बताउन वेदाध्ययनमा कुशल आफ्ना छोरा ब्रह्मर्षि मरीचि आदिलाई व्याहृति र ओङ्कारसहित सबै वेद पढाए। अनि ती धर्मोपदिष्टा मुनिजनले आफ्‌आफ्ना पुत्रलाई सिकाए ॥४४॥४५॥ अनि ती परम्पराद्वारा नै उनका ब्रह्मचारी शिष्य प्रशिष्यद्वारा प्रवृत्त हुँदै आए र द्वापरको आदिमा महर्षिहरूले तिनलाई बिस्तृत रूप दिए ॥४६॥ हे ब्रह्मन् ! त्यसवेला कालगतिले गर्दा मनुष्यहरूलाई अल्पायु, अल्पवीर्य, मन्दमति देखेर ती ब्रह्मर्षिहरूले आफ्नू हृदयमा स्थित भगवान्‌को प्रेरणाले नै वेदको विभाग गरिदिए ॥ ४७ ॥ यस मन्वन्तरमा पनि ब्रह्मा, शिव आदि लोकपालले प्रार्थना गरेपछि धर्मको रक्षाका निम्ति आफ्नू अंशांशकलाले भगवान् पराशरद्वारा सत्यवतीको उदरबाट वेदव्यासको रूपमा अवतार लिएर हे महाभाग ! उनले यहाँ वेदका चार विभाग पारिदिए ॥४८॥४९॥ उनले मणिसमूहबाट भिन्न-भिन्न जातका मणि संग्रह गरे झैं वैदिक मन्त्रसमूहबाट भिन्न-भिन्न प्रकारका प्रकरणद्वारा ऋगादि मन्त्रका राशि छुट्याएर ती मन्त्रले

ऋग्, यजुः, साम र अथर्व यी चारै संहिता बनाए ॥५०॥ हे ब्रह्मन् ! महाबुद्धिमान् व्यासले आफ्ना चार शिष्यलाई डाकेर तीमध्ये एकेकलाई एक-एक संहिता पढाए ॥५१॥ उनले आफ्नू बह्वृच नामक प्रथम संहिता अर्थात् ऋग्वेद संहिता पैललाई र वैशम्पायनलाई यजुर्वेदसंहिता पढाए ॥ ५२ ॥ उनले सामश्रुतिको छन्दोग नामक संहिता जैमिनी मुनिलाई र आफ्ना सुमन्त नामका शिष्यलाई अथर्वाङ्गिरस संहिता पढाए ।५३॥ तिनमा मुनिवर पैलले आफ्नू संहिता इन्द्रप्रमिति तथा वाष्कललाई सुनाए । ती वाष्कलले आफ्नू संहिता चार भाग गरेर आफ्ना शिष्य बोध्य, याज्ञवल्क्य, पराशर र अग्निमित्रलाई सुनाए । आ मज्ञानी इन्द्रप्रमितिले आफ्नू संहिता बुद्धिमान माण्डूकेय ऋषिलाई पढाए र माण्डूकेयका शिष्य देवमित्रले त्यो सौभरि आदि मुनिलाई सुनाए ॥ ५४-५६ ॥ माण्डूकेयका छोरा शाकल्य ऋषिले आफ्नू संहिताको पाँच भाग गरेर त्यो वात्स्य, मुद्गल, शालीय, गोखल्य र शिशिर-लाई पठाए ॥५७॥ ता शाकल्यका शिष्य जातूकर्ण्यले आफ्नू संहिताको तीन भाग पारेर उनको व्याख्यान स्वरूप निरुक्त समेत आफ्ना शिष्य बलाक, पैज, वैताल र विरजलाई दिए

शिष्यानुपाहूय महामतिः ॥ एकैकां संहितां ब्रह्मन्नेकैकस्मै ददौ विभुः ॥५१॥ पैलाय संहितामाद्यां बाह्वृचाख्यामुवाच ह ॥ वैशम्पायनसंज्ञाय निगदाख्यं यजुर्गणम् ॥ ५२ ॥ साम्नां जैमिनये प्राह तथा छन्दोगसंहिताम् ॥ अथर्वाङ्गिरसो नाम स्वशिष्याय सुमन्तवे ॥ ५३ ॥ पैलः स्वसंहितामूचे इन्द्रिप्रमितये मुनिः ॥ वाष्कलाय च सोऽप्याह शिष्येभ्यः संहितां स्वकाम् ॥ ५४ ॥ चतुर्धा व्यस्य बोध्याय याज्ञवल्क्याय भार्गव ॥ पराशरायाग्निमित्रे इन्द्रप्रमितिरात्मवान् ॥ ५५ ॥ अध्यापयत्संहितां स्वां माण्डूकेयमृषिं कविम् ॥ तस्य शिष्यो देवमित्रः सौभर्यादिभ्य ऊचिवान् ॥ ५६ ॥ शाकल्यस्तत्सुतः स्वां तु पंचधा व्यस्य संहिताम् ॥ वात्स्यमुद्गलशालीयगोखल्यशिशिरेष्वधात् ॥ ५७ ॥ जातूकर्ण्यश्च तच्छिष्यः सनिरुक्तां स्वसंहिताम् ॥ बलाकपैजवैतालविरजेभ्यो ददौ मुनिः ॥ ५८ ॥ वाष्कलिः प्रतिशाखाभ्यो वालखिल्याख्यसंहिताम् ॥ चक्रे बालायनिर्भज्यः कासारश्चैव तां दधुः ॥ ५९ ॥ बह्वृचाः संहिता ह्येता एभिर्ब्रह्मर्षिभिर्धृताः ॥ श्रुत्वैतच्छन्दसां व्यासं सर्वपापैः प्रमुच्यते ॥ ६० ॥ वैशम्पायनशिष्या वै चरकाध्वर्यवोऽभवन् ॥ यच्चेरुर्ब्रह्महत्यांहः क्षपणं स्वगुरोर्व्रतम् ॥ ६१ ॥ याज्ञवल्क्यश्च तच्छिष्य आहाहो भगवन्कियत् ॥ चरितेनाल्पसाराणां चरिष्येऽहं सुदुश्चरम् ॥६२॥ इत्युक्तो गुरुरप्याह कुपितो याह्यलं त्वया ॥ विप्रावमन्त्रा शिष्येण मदधीतं त्यजाश्विति ॥६३॥ देवरातसुतः सोऽपिच्छर्दित्वाय जुषां

॥५८॥ महर्षि वाष्कलका छोरा वाष्कलिले ती सबै शाखामध्ये वालखिल्य नामक यौटा स्वतन्त्र शाखा बनाए र बालायनि, भज्य र कासारले त्यसको अध्ययन गरे ॥ ५९ ॥ यी पूर्वोक्त ऋषिहरूले ऋग्वेदसंहिता धारण गरे । यी वेदहरूको वृत्तान्त सुनेर प्राणी सबै पापबाट मुक्त हुन्छन् ॥ ६० ॥ वैशम्पायनका शिष्य चरकाध्वर्युले आफ्ना गुरुको ब्रह्महत्या निवारणका लागि व्रत गरे ॥ ६१ ॥ अनि उनका शिष्य याज्ञवल्क्यले भने—'हे भगवन् ! यी अल्पसार ब्राह्मणहरूका लागि यस व्रतले के लाभ होला ? म स्वयं कठोर व्रत गर्दछु' ॥ ६२ ॥ याज्ञवल्क्यको यस्तो वचन सुनेर गुरु रिसाई भने—'मलाई विप्र-निन्दक तिमी जस्ता शिष्यको आवश्यकता छैन, तिमी तुरुन्त मैले पढाएको विद्या फर्काइदेऊ र यहाँबाट जाऊ' ॥ ६३ ॥ यति सुनी देवरातका छोरा याज्ञवल्क्यले ती यजुः श्रुतिहरू उकेलिदिए र त्यहाँबाट तुरुन्त हिंडे । त्यतिमै जब अन्य मुनिहरूले ती यजुः श्रुतिहरूलाई

14/5

हरू देखेर लोभले तित्रा भई स्वीकार गरे। अतः त्यो यजुः शाखा तैत्तिरीय शाखा कहियो ॥ ६४ ॥ ६५ ॥ हे ब्रह्मन् ! अनि महर्षि याज्ञवल्क्य जुन स्वयं गुरुजीसित पनि थिएन, त्यस्तो यजुः श्रुतिहरू प्राप्त गर्नको निम्ति सूर्यनारायणको आराधना गर्नलागे ॥ ६६ ॥ याज्ञवल्क्यले भने—भगवन् आदित्यलाई मेरो नमस्कार छ। ती भगवान सूर्य एक्लै ब्रह्मादेखि तृणपर्यन्त जरायुज, अण्डज, स्वेदज र उद्भिज नामक चार थरिका प्राणीहरूको भित्र उनको हृदयमा सम्पूर्ण जगत्का आत्मारूपले र बाहिर लव, क्षण, निमेषादि अवयवले वृद्धिमा प्राप्त संवत्सरसमूह रूप कालस्वरूपले स्थित भएर अनेक घटादि उपाधिका बाहिर र भित्र व्याप्त रहने आकाश झैं अलिप्त रहेर पनि जलको ग्रहण र त्याग गर्दै लोकयात्राको कार्य वहन गर्दछन् ॥ ६७ ॥ हे सूर्य नारायण ! नित्य प्रातः मध्याह्न र सायङ्काल वेदको विधिले उपासना गर्ने पुरुषलाई पापले प्राप्त दुःखका बीजहरूलाई

गणम् ॥ ततो गतेऽथ मुनयो ददृशुस्तान् यजुर्गणान् ॥६४॥ यजूंषि तित्तिरा भूत्वा तल्लोलुपतयाददुः ॥ तैत्तिरीया इति यजुःशाखा आसन्सुपेशलाः ॥६५॥ याज्ञवल्क्यस्ततो ब्रह्मंश्छन्दांस्यधिगवेषयन् ॥ गुरोरविद्यमानानिसूपतस्थेऽर्कमीश्वरम् ॥६६॥ याज्ञवल्क्य उवाच ॥ ॐ नमो भगवते आदित्यायाखिलजगतामात्मस्वरूपेण कालस्वरूपेण चतुर्विधभूतनिकायानां ब्रह्मादिस्तम्बपर्यन्तानामन्तर्हृदयेषु बहिरपि चाकाश इवोपाधिनाव्यवधीयमानो भगवानेक एव क्षणलवनिमेषावयवोपचितसंवत्सरगणेनापामादानविसर्गाभ्यामिमां लोकयात्रामनुवहति ॥६७॥ यदुह वाव विबुधर्षभ सवितरदस्तपत्यनुसवनमहरहराम्नायविधिनोपतिष्ठमानानामखिलदुरितवृजिनबीजावभर्जन भगवतः समभिधीमहि तपनमण्डलम् ॥६८॥ य इह वाव स्थिरचरनिकराणां निजनिकेतनानां मनइन्द्रियासुगणाननात्मनः स्वयमात्मनः स्वयमात्मान्तर्यामी प्रचोदयति ॥ ६९ ॥ य एवेमं लोकमतिकरालवदनान्धकारसंज्ञाजगरग्रहगिलितं मृतकमिव विचेतनमवलोक्यानुकम्पया परमकारुणिक ईक्षयैवोत्थाप्याहरहरनुसवनं श्रेयसि स्वधर्माख्यात्मावस्थाने प्रवर्तयत्यवनिपतिरिवासाधूनां भयमुदीयन्नटति ॥ ७० ॥ परित आशापालैस्तत्र तत्र कमलकोशाञ्जलिभिरुपहृतार्हणः ॥ ७१ ॥ अथ ह भगवंस्तवचरणनलिनयुगलं त्रिभुवनगुरुभिर्वन्दितमहमयातयाममयजुःकाम उपसरामीति ॥ ७२ ॥ सूत उवाच ॥ एवं स्तुतः स भगवान्वाजिरूपधरो हरिः ॥ यजूंष्ययातयामानि मुनयेऽदात्प्रसादितः ॥ ७३ ॥ यजुर्भिरकरोच्छाखा दशपंचशतैर्विभुः ॥ जगृहुर्वाजिमन्यस्ताः काण्वमाध्यन्दिनादयः ॥७४॥ जैमिनेः

भूर्टिने हजुरको बल्दो तेजोमण्डलको हामी ध्यान गर्दछौं ॥६८॥ आफ्ना आश्रित रहने स्थावर-जङ्गम प्राणीहरूको जड मन, बुद्धि, इन्द्रिय र प्राणादि स्वयं सबैका आत्मा तथा अन्तर्यामीरूपले प्रेरित पार्ने हजुरलाई हामी प्रणाम गर्दछौं ॥६९॥ जुन परम करुणामय प्रभु यस लोकको अन्धकार नामक डरलाग्दो मुख हुने अजिङ्गरको मुखमा परेर मृतक झैं चेतनाशून्य देखेर करुणावश आफ्नू हेराइमात्रले उचालेर नित्यप्रति ती कालमा आफ्नू कल्याणकारी र धर्मरूपी आत्मस्थितिमा प्रवृत्त पार्द राजा झैं दुष्ट पुरुषलाई डर दिंदै सर्वत्र सानन्द डुल्नु हुन्छ ॥७०॥ जसलाई सबै दिक्पाल चारैतिरबाट जताततै आफ्नू कमल कोश झैं अंजलिले अर्घ्य दिन्छन् ॥७१॥ हे भगवन् ! उनै हजुरका त्रैलोक्यका गुरुजन द्वारा वन्दित युगल चरण-कमललाई म अयातयाम यजुः श्रुतिहरूलाई प्राप्त गर्ने इच्छाले शरणागत भएको छु ॥७२॥सूतजी भन्दछन्—हे मुनि हो ! यसरी स्तुति गरेपछि

अश्वरूपधारी सूर्यनारायण प्रसन्न भए र उनले ती मुनिश्रेष्ठलाई अयातयाम नामक यजुःश्रुति दिए ॥ ७३ ॥ त्यसपछि भगवान् याज्ञवल्क्यले ती असंख्य यजुः श्रुतिहरूको क्रमश पन्ध्र शाखा बनाए । तीमध्ये वाजसनेयी शाखा कण्वलाई र माध्यन्दिन आदि मुनिहरूले पढे ॥७४॥ सामसंहिता पढ्ने जैमिनिका सुमन्तु नामक एक पुत्र थिए र तिनका पुत्र सुत्वान भए । ती दुईलाई एकेक संहिता पढाए ॥७५॥ उनै जैमिनिका सुकर्मा नामक योटा शिष्य थिए । ती द्विजश्रेष्ठले सामवेदरूपी महावृक्षको भिन्न-भिन्न मन्त्रहरूद्वारा सामश्रुतिहरूको एक सहस्र शाखा तुल्याए ॥७६॥ ती शाखालाई सुकर्माका शिष्य कोशल देशका निवासी हिरण्यनाभ, पौष्यञ्जि र वेदवेत्ताहरूमा श्रेष्ठ आवन्त्यले पढे ॥ ७७ ॥ पौष्यञ्जी तथा आवन्त्यका पाँच सय शिष्य उत्तर दिशामा बसेर सामगान गर्दथे । तिनैलाई सबै प्राच्य सामग पनि भन्दछन ॥७८॥ लौगाक्षि, माङ्गलि, कुल्य कुसीद तथा कुक्षि पौष्यञ्जिका यी शिष्यमध्ये प्रत्येकले सय-सय संहिता पढे ॥ ७९ ॥ हिरण्यनाभका शिष्य महर्षि कृतले आफना शिष्यलाई चौबीस संहिता पढाए र शेष संहिता आवन्त्यले आफना शिष्य-

सामगस्याभोत्सुमन्तुस्तनयो मुनिः ॥ सुत्वांस्तु तत्सुतस्ताभ्यामेकैकां प्राह संहिताम् ॥ ७५ ॥ सुकर्मा चापि तच्छिष्यः सामवेदतरोर्महान् ॥ सहस्रसंहिताभेदं चक्रे साम्नां ततो द्विजः ॥ ७६ ॥ हिरण्यनाभः कौशल्यः पौष्यञ्जिश्च सुकर्मणः ॥ शिष्यौ जगृहतुश्चान्य आवन्त्यो ब्रह्मवित्तमः ॥ ७७ ॥ उदीच्याः सामगाः शिष्या आसन्पंचशतानि वै ॥ पौष्यञ्ज्यावन्त्ययोश्चापितांश्च प्राच्यान्प्रचक्षते ॥ ७८ ॥ लौगाक्षिर्माङ्गलिः कुल्यः कुसीदः कुक्षिरेव च ॥ पौष्यञ्जिशिष्या जगृहुः संहितास्ते शतं शतम् ॥ ७९ ॥ कृतो हिरण्यनाभस्य चतुर्विंशतिसंहिताः ॥ शिष्य ऊचे स्वशिष्येभ्यः शेषा आवन्त्य आत्मवान् ॥ ८० ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे वेदशाखाप्रणयनं नाम षष्ठोऽध्यायः ॥ ६ ॥ सूत उवाच ॥ अथर्ववित्सुमन्तुश्च शिष्यमध्यापयत्स्वकाम् ॥ संहितां सोऽपि पथ्याय वेददर्शाय चोक्तवान् ॥ १ ॥ शौक्लायनिर्ब्रह्मबलिर्मोदोषः पिप्पलायनिः ॥ वेददर्शस्य शिष्यास्ते पथ्यशिष्यानथो शृणु ॥२॥ कुमुदः शुनको ब्रह्मन्जाजलिश्चाप्यथर्ववित् ॥ बभ्रुः शिष्योऽथाङ्गिरसः सैन्धवायन एव च ॥ अधीयतां संहिते द्वे सावर्ण्याद्यास्तथापरे ॥ ३ ॥ नक्षत्रकल्पः शान्तिश्चकश्यपाङ्गिरसादयः ॥ एतः आथर्वणाचार्याः शृणु पौराणिकान्मुने ॥४॥ त्रय्यारुणिः कश्यपश्च सावर्णिरकृतव्रणः ॥ वैशम्पायन हारीतौ षड्वै पौराणिका इमे ॥ ५ ॥ अधीयन्त व्यासशिष्यात्संहितां मत्पितुर्मुखात् ॥ एकैकामहमेतेषां

लाई पढाए ॥८०॥ इति श्री मद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥६॥ ( अथर्ववेदका विविध शाखा र पुराणका लक्षण )—सूतजी भन्दछन्-हे मुनि हो ! अथर्ववेदका अभिज्ञ सुमन्तु ऋषिले आफ्नु संहिता कबन्ध नामक शिष्यलाई पढाए र उनले आफना शिष्य र वेददर्शसित भने ॥१॥ शौक्लायनि, ब्रह्मबलि, मोदोष तथा पिप्पलायनि यी चार वेददर्शका शिष्य थिए । अब पथ्यका शिष्य भन्दछु ॥२॥ हे ब्रह्मन् ! अथर्ववेदका ज्ञाता कुमुद, शुनक र जाजलि थिए । शुनकका बभ्रु र सैन्धवायन नामक दुइ शिष्य थिए । उनले शुनकसित दुइ संहिताहरू पढेका थिए । तिनका शिष्य सावर्ण्यादि भए ॥३॥ त्यसपछि नक्षत्रकल्प, शान्तिकल्प, कश्यप तथा आङ्गिरस आदि उत्पन्न भए । हे मुने ! यी सबै अथर्ववेदका आचार्य मानिन्थे । अब पौराणिकहरूको वृत्तान्त सुन ॥४। त्रय्यारुणि, कश्यप, सावर्णि, अकृतव्रण, वैशम्पायन र हारीत—यी छ पौराणिक मानिएका छन् ॥५॥ पिताका

प्रत्येक मुनिले व्यासजीका शिष्य मेरा पिताबाट एक-एक पुराणसंहिता पढेर ती छ जनाका शिष्य मैले ती संहिताहरू पढेको थिएँ । कश्यप, म (सूत), सावर्णि तथा परशुरामका शिष्य अकृतव्रण–हामी चारै जनाले सँगै व्यासका शिष्यपित चारै मूल संहिता पढ्यौं ॥६॥७॥ हे ब्रह्मन् ! अब वेद तथा शास्त्रानुसार ब्रह्मर्षिहरूले बताएका पुराणका लक्षणहरू तिमी सावधान चित्त पारेर सुन ॥८॥ विश्वको सर्ग, विसर्ग, वृत्ति, रक्षा, मन्वन्तर, वंश, वंशका चरित्र, संस्था अर्थात् प्रलय, हेतु अर्थात् ऊति र अपाश्रय–यी दश लक्षणले युक्त ग्रन्थलाई विद्वानजन पुराण भन्दछन् । हे ब्रह्मन् ! अनेक ऋषि महापुराण र अल्प पुराणको व्यवस्थाले पाँच लक्षण युक्त ग्रन्थलाई पनि पुराण भन्दछन् ॥९॥१०॥ मूल प्रकृतिका गुणहरूले क्षुभित भएपछि

शिष्यः सर्वाः समभ्यगाम् ॥ ६ ॥ कश्यपोऽहं च सावर्णी रामशिष्योऽकृतव्रणः ॥ अधीमहि व्यासशिष्याच्चतस्रो मूलसंहिताः ॥ ७ ॥ पुराणलक्षणं ब्रह्मन्ब्रह्मर्षिभिर्निरूपितम् ॥ शृणुष्व बुद्धिमाश्रित्य वेदशास्त्रानुसारतः ॥ ८ ॥ सर्गोऽस्याथ विसर्गश्च वृत्ती रक्षान्तराणि च ॥ वंशो वंशानुचरितं संस्था हेतुरपाश्रयः ॥ ९ ॥ दशभिर्लक्षणैर्युक्तं पुराणं तद्विदो विदुः ॥ केचित्पंचविधं ब्रह्मन्महदल्पव्यवस्थया ॥ १० ॥ अव्याकृतगुणक्षोभान्महतस्त्रिवृतोऽहमः ॥ भूतमात्रेन्द्रियार्थानां सम्भवः सर्ग उच्यते ॥ ११ ॥ पुरुषानुगृहीतानामेतेषां वासनामयः ॥ विसर्गोऽयं समाहारो बीजाद्बीजं चराचरम् ॥ १२ ॥ वृत्तिर्भूतानि भूतानां चराणामचराणि च ॥ कृता स्वेन नृणां तत्र कामाच्चोदनयापि वा ॥ १३ ॥ रक्षाच्युतावतारेहा विश्वस्यानु युगे युगे ॥ तिर्यङ्मर्त्यर्षिदेवेषु हन्यन्ते यैस्त्रयीद्विषः ॥ १४ ॥ मन्वन्तरं मनुर्देवा मनुपुत्राः सुरेश्वराः ॥ ऋषयोऽशावतारश्च हरेः षड्-

त्ययबाट महत्तत्व, त्रिविध अहङ्कार, भूततन्मात्रा, इन्द्रिय र विषयहरूको उत्पत्ति 'सर्ग' कहिन्छ ॥११॥ जसरी बीजबाट बीज उत्पन्न हुन्छ, त्यसै गरी ईश्वरबाट अनुगृहीत महत्तत्वादिले पूर्वजन्मका वासनाहरूले युक्त जुन अखिल चराचर जीवसमूह उत्पन्न हुन्छ, त्यसैलाई सबै 'विसर्ग' भन्दछन् ॥१२॥ सबै जङ्गम प्राणीहरूको स्वाभाविक जीविका स्थावर भूत मानिन्छ । तीमध्ये मनुष्यका केही जीविका त कामवश स्वयं नै निश्चित छ र केही शास्त्रज्ञ द्वारा नियत गरिएको छ ॥१३॥ जुन भगवान् युग-युगमा तिर्यक्, मनुष्य, ऋषि तथा देवताहरूका रूपमा लीला गर्दछन्, त्यही विश्वको रक्षा कार्य हो, किनकि ती अवतारद्वारा नै वेदविरोधी व्यक्ति मारिन्छन् ॥१४॥ मनु, देवता, मनुपुत्र, इन्द्र, सप्तर्षि र भगवान्का अंशावतार–यी

---

* दृष्टान्त ( भगवान् रक्षा गर्दछन् )—मनु भगवान्को वंशमा नभग राजा थिए । तिनको कान्छो पुत्र नाभाग नामले विख्यात भए । उनलाई पिताको बर्ता सोख थियो । यसै निमित्त गुरुकुलमा बसेर उनले वेद, शास्त्र र पुराणादि पढे । यसरी धेरै दिनसम्म गुरुकुलमा बसेको हुनाले उनका दाजुहरूले सबै राज्य परस्पर बाँडिलिए । केही दिनपछि नाभाग आए र उनले आफ्नु अंश मागे । दाजुहरूले भने–'अंश बण्डा भएका धेरै दिन भइसक्यो, तिम्रो भागमा केवल पिता परेका छन् ।' यस्तो कपटपूर्ण वचन सुनेर विद्वान् नाभाग बाबुकहाँ गएर उनकै सेवा गर्न लागे । पिताले भने—'बाबु ! तिमीलाई उनीहरूले ठगे, यद्यपि तिमी विद्वान् छौ, उनीहरू मूर्ख छन् । तापनि परस्पर लडाई गर्नु उचित छैन । म तिमीलाई जीविकाको उपाय बताउँछु । अमुक स्थानमा यज्ञ भइरहेको छ । त्यहाँ गएर वेदमन्त्रको शुद्ध उच्चारण गर । अनि प्रसन्न भएका ब्राह्मणले यज्ञमा शेष रहेको धन तिमीलाई दिनेछन् ।' पिताको आज्ञानुसार नाभाग त्यहाँ गए र पहिले नसुनेका सूक्त ती ब्राह्मणलाई सुनाए । अनि प्रसन्न भएका ब्राह्मणले यज्ञको अवशिष्ट धन दिए । नाभाग त्यो लिन जानासाथ रुद्र भगवान् प्रकट भएर भने–'तिम्रो यो किन लग्दैछौ ? यो त मेरो धन हो ।' नाभागले भने–'तर यो त ब्राह्मणहरूले मलाई दिएका हुन् ।' रुद्रले भने–'यो द्रव्य कसको हो, यो कुरा आफ्ना पितासित सोध ।' नाभाग बाबुकहाँ पुगे, उनका पिताले भने–'त्यो द्रव्य यज्ञपुरुष रुद्रभगवान्को हो ।' पिताका कुरा नाभागले गएर रुद्र भगवान्लाई सुनाए । त्यसै रुद्र प्रसन्न भएर नाभागलाई त्यो सबै धन दिए । साथै नाभागको विद्वत्ता, सरलता र नम्रतामा प्रसन्न भएर आत्मज्ञान पनि प्रदान गरे ।

1778

छ मिलेर 'मन्वन्तर' कहिन्छन् ।।१५।। ब्रह्माजीबाट उत्पन्न राजा र तिनको भूत, भविष्य तथा वर्तमान कालीन सन्तान 'वंश' कहिन्छन् र तिनको तथा तिनका वंशधरहरूका चरितलाई सबै 'वंशानुचरित' भन्दछन् ।।१६।। यस संसारको नैमित्तिक, प्राकृतिक, नित्य र आत्यन्तिक चार प्रकारका जुन स्वाभाविक प्रलय हुने गर्दछन्, त्यसैलाई विद्वान् जन 'संस्था' को नामले जान्दछन् ।।१७।। जसलाई केही व्यक्ति अनुशयी र कोही अव्याकृत भन्दछन् । अविद्यावश कर्म गर्ने जीव नै यी सर्गादिको 'हेतु' मानिन्छ । जीवको जाग्रत्, स्वप्न तथा सुषुप्ति–मायामयी यी तीन वृत्तिमा जसको अन्वय तथा तुरीय रूपले व्यतिरेक हुन्छ, त्यही ब्रह्म 'अपाश्रय' कहिन्छ ॥ १८ ॥ १९ ॥ जस्तै घटादि नामरूपात्मक पदार्थहरूमा तिनको कारण स्वरूपा मृत्तिका सद्रूपले व्याप्त रहेर पनि पृथक् रहन्छ । त्यस्तै जन्मदेखि मरणपर्यन्त जुन सबै अवस्थाहरूमा अधिष्ठान रूपले व्याप्त र साक्षीरूपले पृथक् रहन्छ,त्यो ब्रह्म नै 'अपाश्रय' कहिन्छ ।।२०।। जब चित्त सत्वादि तीनै गुणका वृत्तिहरू त्यागेर स्वयं शान्त हुन्छ अथवा योगाभ्यासले शान्त हुने गर्दछ, तब त्यो आत्मतत्त्वलाई जान्न सक्दछ र

विधमुच्यते ॥ १५ ॥ राज्ञां ब्रह्मप्रसूतानां वंशस्त्रैकालिकोऽन्वयः ॥ वंशानुचरितं तेषां वृत्तं वंशधराश्च ये ॥ १६ ॥ नैमित्तिकः प्राकृतिको नित्य आत्यन्तिको लयः ॥ संस्थेति कविभिः प्रोक्ता चतुर्धास्य स्वभावतः ॥ १७ ॥ हेतुर्जीवोऽस्य सर्गादेरविद्याकर्मकारकः ॥ यं चानुशयिनं प्राहुरव्याकृतमुतापरे ॥ १८ ॥ व्यतिरेकान्वयो यस्य जाग्रत्स्वप्नसुषुप्तिषु ॥ मायामयेषु तद्ब्रह्मजीववृत्तिष्वपाश्रयः ॥१९॥ पदार्थेषु यथा द्रव्यं सन्मात्रं रूपनामसु ॥ बीजादिपञ्चतान्तासु ह्यवस्थासु युतायुतम् ॥ २० ॥ विरमेत यदा चित्तं हित्वा वृत्तित्रयं स्वयम् ॥ योगेन वा तदात्मानं वेदेहाया निवर्तते ॥ २१ ॥ एवं लक्षण लक्ष्याणि पुराणानि पुराविदः ॥ मुनयोऽष्टादश प्राहुः क्षुल्लकानि महान्ति च ॥ २२ ॥ ब्राह्मं पाद्मं वैष्णवं च शैवं लैङ्गं सगारुडम् ॥ नारदीयं भागवतमाग्नेयं स्कान्दसंज्ञितम् ॥ २३ ॥ भविष्यं ब्रह्मवैवर्तं मार्कण्डेयं सवामनम् ॥ वाराहं मात्स्यं कौर्मं च ब्रह्माण्डाख्यमिति त्रिषट् ॥ २४ ॥ ब्रह्मन्निदं समाख्यातं शाखाप्रणयनं मुनेः ॥ शिष्यशिष्यप्रशिष्याणां ब्रह्मतेजोविवर्धनम् ॥ २५ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे सप्तमोऽध्यायः ॥ ७ ॥ शौनक उवाच ॥ सूत जीव चिरं साधो वद नो वदतां वर ॥ तमस्यपारे भ्रमतां नृणां त्वं पारदर्शनः ॥ १ ॥ आहुश्चिरायुषमृषिं मृकण्डतनयं जनाः ॥ यः कल्पान्ते उर्वरितो येन ग्रस्तमिदं जगत् ।।२।। स वा अस्मत्कुलोत्पन्नः कल्पेऽस्मिन्भार्गवर्षभः ॥

अविद्याजनित कर्म-प्रवृत्तिबाट निवृत्त हुन्छ ।।२१।। हे मुनिजन हो ! पुरातत्त्व जान्नेहरूले यस्ता लक्षण हुने साना-ठूला सबै मिलाएर जम्मा अठार पुराण भनेका छन् ।।२२।। ती अठार पुराणहरूमा ब्राह्म, पाद्म, वैष्णव, शैव, लैङ्ग, गारुड, नारदीय, भागवत, आग्नेय, स्कान्द, भविष्य, ब्रह्मवैवर्त, मार्कण्डेय,वामन,वाराह,मत्स्य,कौर्म र ब्रह्माण्ड नामका छन् ।।२३।। ।।२४।। हे ब्रह्मन् ! व्यासदेवका शिष्यका पनि शिष्य र उनका पनि प्रशिष्यहरू द्वारा निर्मित श्रोताहरूको ब्रह्मतेज बढाउने वैदिकशाखाहरूको विस्तार मैले तिमीलाई सुनाएँ ।।२५।।इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषा-टीकायां सप्तमोऽध्यायः ।।७।। ( महामुनि मार्कण्डेयको तपस्या र वर-प्राप्ति )–शौनकजी भन्दछन्–हे वक्ताहरूमा श्रेष्ठ वक्ता सूतजी! हजुर धेरै दिन बाँचिरहनुस् । हे साधो ! हजुर संसाररूपी घोर अन्धकारमा भौंतारिने व्यक्तिलाई मार्ग देखाउनुहुन्छ । अतः अरु केही भन्नुहवस् ।।१।। सम्पूर्ण संसारलाई ग्रस्ने प्रलयकालमा

पनि बाँचेका ऋषिवर मार्कण्डेयलाई सबै चिरायु भन्दछन् ॥२॥ तर ती भार्गवश्रेष्ठ मुनि यसै कल्पमा र हाम्रो नै कुलमा उत्पन्न भएका थिए । तिनको जन्मदेखि आजसम्म प्राणीहरूको प्रकारको कोही प्रलय भएको छैन ।३॥ अनि तिनले प्रलयकालीन समुद्रमा एक्लै डुल्दा यौटा अतिशय विचित्र बालरूप पुरुषलाई वरको पातमा सुतेका कसरी देखे ! ॥४॥ हे सूतजी ! यो हामीलाई ठूलो संशय छ र ती विषय सुन्नको निम्ति हामीलाई उत्कण्ठा भइरहेछ । हे महायोगिन् । हजुर पुराणवेत्तामा माननीय हुनुहुन्छ । अतएव हाम्रो यो संशयलाई निवारण गरिदिनु हवस् ॥ ५ ॥ सूतजी भन्दछन्–हे महर्षे ! यो तपाईंहरूले सबै लोकको भ्रम हटाउने प्रश्न गर्नुभयो । यसै प्रसङ्गमा नारायणको कलि कल्मषनाशिनी कथाको पनि राम्ररी गान गरिएको छ ॥६॥ जब मार्कण्डेयले आफ्ना पिताबाट अन्य संस्कारहरूको क्रममा यज्ञोपवीत संस्कार पाए अनि ती तथा स्वाध्यायले युक्त भएर संयमपूर्वक नैष्ठिक ब्रह्मचर्य-व्रत लिएर धर्मानुसार वेदाध्ययन गर्दै आफ्नू नियमको पूर्णताका लागि जटा, वल्कल-वसन, कमण्डलु, दण्ड, यज्ञोपवीत, मेखला, कृष्णमृगचर्म, अक्षमाला तथा कुश धारण गरेर दुवै

नैवाधुनापि भूतानां सम्प्लवः कोऽपि जायते ॥३॥ एक एवार्णवे भ्राम्यन्ददर्श पुरुषं किल ॥ वटपत्रपुटे तोकं शयानं त्वेकमद्भुतम् ॥ ४ ॥ एष नः संशयो भूयान्सूत कौतूहलं यतः ॥ तं नश्छिन्धि महायोगिन्पुराणेष्वपि सम्मतः ॥ ५ ॥ सूत उवाच ॥ प्रश्नस्त्वया महर्षेऽयं कृतो लोकभ्रमापहः ॥ नारायणकथा यत्र गीता कलिमलापहा ॥ ६ ॥ प्राप्तद्विजातिसंस्कारो मार्कण्डेयः पितुः क्रमात् ॥ छन्दांस्यधीत्य धर्मेण तपः स्वाध्यायसंयुतः ॥ ७ ॥ बृहद्व्रतधरः शान्तो जटिलो वल्कलाम्बरः ॥ बिभ्रत्कमण्डलुं दण्डमुपवीतं समेखलम् ॥ ८ ॥ कृष्णाजिनं साक्षसूत्रं कुशांश्च नियमर्द्धये ॥ अग्न्य-र्कगुरुविप्रात्मास्वर्चयन्सन्ध्ययोर्हरिम् ॥ ९ ॥ सायंप्रातः स गुरवे भैक्ष्यमाहृत्य वाग्यतः ॥ बुभुजे गुर्वनुज्ञातः सकृन्नोचेदुपोषित ॥ १० ॥ एवं तपः स्वाध्यायपरो वर्षाणामयुतायुतम् ॥ आराधयन्हृषीकेशं जिग्ये मृत्युं सुदुर्जयम् ॥ ११ ॥ ब्रह्मा भृगुर्भवो दक्षो ब्रह्मपुत्राश्च ये परे ॥ नृदेवपितृभूतानि तेनासन्नतिविस्मिताः ॥ १२ ॥ इत्थं बृहद्व्रतधरस्तपःस्वाध्यायसंयमैः ॥ दध्यावधोक्षजं योगी ध्वस्तक्लेशान्तरात्मना ॥ १३ ॥ तस्यैवं युञ्जतश्चित्तं महायोगेन योगिनः ॥ व्यतीयाय महान्कालो मन्वन्तरषडात्मकः ॥ १४ ॥ एतत्पुरन्दरो ज्ञात्वा सप्तमेऽस्मिन्किलान्तरे ॥ तपोविशङ्कितो ब्रह्मन्ना-रेभे तद्विघातनम् ॥ १५ ॥ गन्धर्वाप्सरसः कामं वसन्तमलयानिलौ ॥ मुनये प्रेषयामास रजस्तोकमदौ तथा ॥ १६ ॥ ते वै तदाश्रमं जग्मुर्हिमाद्रेः

सन्ध्यालाई अग्नि, सूर्य, गुरु, ब्राह्मण एवं आफ्नू आत्मामा भगवानको आराधना गर्दै प्रातः र सायङ्कालको वेलामा भिक्षा ल्याएर आफ्ना गुरुदेवलाई अर्पण गर्दथे र उनको आज्ञा प्राप्त गरेर केवल एक छाक मौनभावले भोजन गर्दथे । ती धेरजसो उपवास गरेर नै बसिदिन्थे ॥ ७-१० ॥ हे शौनक ! यसरी तप तथा स्वाध्यायमा संलग्न रहेर हजारौं र लाखौं वर्षसम्म श्रीहृषीकेशको आराधना गर्दै उनले अति दुर्जय मृत्युलाई पनि पछारिदिएका थिए ॥११॥ तिनको मृत्यु-विजयले ब्रह्मा, भृगु, महादेव, दक्ष, ब्रह्माजीका अन्यान्य छोरा तथा मनुष्य, देवता, पितर तथा अन्य सबै प्राणीहरूलाई ठूलो विस्मय भयो ॥ १२ ॥ यसरी नैष्ठिक ब्रह्मचर्यव्रत धारण गर्ने योगिराज मार्कण्डेय तप, स्वाध्याय तथा संयम गरेर रागद्वेषादि मलबाट मुक्त अन्तःकरण द्वारा विष्णु भगवानको ध्यानमा मग्न भए ॥१३॥ ती योगिराजले यसरी महायोग द्वारा चित्तन नियमन गर्दागर्दै छ मन्वन्तरको समय बितेर गयो ॥१४॥

सातौं मन्वन्तरमा जब इन्द्रलाई यो कुरा थाहा भयो तब तिनको तपस्याले सशङ्काकुल भएर ती उनको तप खण्डित पार्ने उद्योग गर्नलागे ॥१५॥ त्यसै अनुसार उनले मार्कण्डेय कहाँ गन्धर्व, अप्सरा, कामदेव, वसन्तऋतु मलय-पवन र रजोगुणको प्रियपुत्र लोभ तथा मदलाई पठाए ॥१६॥ हे भगवन ! ती सबै हिमालयको उत्तर जहाँ पुष्पभद्रा नदी बग्दछिन् र चित्रा नामकी शिला विद्यमान छिन्—मार्कण्डेयको त्यस आश्रममा पुगे ॥७॥ त्यो पुनीत आश्रम पवित्र वृक्ष र लताहरूले सम्पन्न थियो र पवित्र पक्षिसमूहले पूर्ण तथा निर्मल जलाशयहरूले भरिएको थियो ॥ १८ ॥ त्यसमा मस्त भ्रमरा गुञ्जार गर्दै थिए, मदमत्त कोकिलको ध्वनि भइरहेका थियो, मत्त मयूरहरू नट मनोहर नृत्य गर्दै नाचिरहेका थिए, मतवाला पक्षि-हरूको समुदायले त्यो आश्रम भरिएको थियो ॥१९॥ तिनले प्रवेश गर्नासाथ त्यहाँ शीतल छहराका जलकणले युक्त वायु चल्न लाग्यो र त्यो सुगन्धित पुष्पहरूका आलिङ्गन गरेर बर्दै मानिसका मनमा कामोद्दीपन गर्नलागे ॥२०॥ चन्द्रमाको उदयले युक्त प्रदोषकाल उपस्थित भएपछि नयाँ पालुवाको गुच्छा हुने वृक्ष द्रुम र लतासमूहले उपलक्षित वसन्तऋतु

पार्श्वं उत्तरे ॥ पुष्पभद्रा नदी यत्र चित्राख्या च शिला विभो ॥ १७ ॥ तदाश्रमपदं पुण्यं पुण्यद्रुमलताञ्चितम् ॥ पुण्यद्विजकुलाकीर्णं पुण्यामलजलाशयम् ॥ १८ ॥ मत्तभ्रमरसङ्गीतं मत्तकोकिलकूजितम् ॥ मत्तबर्हिनटाटोपं मत्तद्विजकुलाकुलम् ॥ १९ ॥ वायुः प्रविष्ट आदाय हिमनिर्झरशीकरान् ॥ सुमनोभिः परिष्वक्तो ववावुत्तम्भयन्स्मरम् ॥ २० ॥ उद्यच्चन्द्रनिशावक्त्रः प्रवालस्तबकालिभिः ॥ गोपद्रुमलताजालैस्तत्रासीत्कुसुमाकरः ॥ २१ ॥ अन्वीयमानो गन्धर्वैर्गीतवादित्रयूथकैः ॥ अदृश्यतात्तचापेषुः स्वःस्त्रीयूथपतिः स्मरः ॥ २२ ॥ हुत्वाग्निं समुपासीनं ददृशुः शक्रकिंकराः ॥ मीलिताक्षं दुराधर्षं मूर्तिमन्तमिवानलम् ॥ २३ ॥ ननृतुस्तस्य पुरतःस्त्रियोऽथो गायका जगुः ॥ मृदङ्गवीणापणवैर्वाद्यं चक्रुर्मनोरमम् ॥ २४ ॥ सन्दधेऽस्त्रं स्वधनुषि कामः पञ्चमुखं तदा ॥ मधुर्मनो रजस्तोक इन्द्रभृत्या व्यकम्पयन् ॥ २५ ॥ क्रीडन्त्याः पुञ्जिकस्थल्याःकन्दुकैःस्तनगौरवात् ॥ भृशमुद्विग्नमध्यायाः केशविस्रंसितस्रजः ॥ २६ ॥ इतस्ततो भ्रमद्दृष्टेश्चलन्त्या अनुकन्दुकम् ॥ वायुर्जहार तद्वासः सूक्ष्मं त्रुटितमेखलम् ॥२७॥ विससर्ज तदा बाणं मत्वा तं स्वजितं स्मरः ॥ सर्वं तत्राभवन्मोघमनीशस्य यथोद्यमः ॥ २८ ॥ त इत्थमपकुर्वन्तो मुनेस्तत्तेजसा मुने ॥ दह्यमाना

फैलियो ॥२१॥ त्यसपछि गान-बजान गर्ने गन्धर्वसित हातमा धनुष-बाण सम्हारी देवाङ्गनाहरूको अधिनायक कामदेव स्वयं पनि देखापर्‍यो ॥ २२ ॥ एकैछिनपछि इन्द्रका ती किंकरहरूले अग्निले अग्निहोत्र गरेर दुवै नेत्र चिम्ली बसेका मूर्तिमान अग्नि जस्ता दुर्धर्ष मार्कण्डेयलाई देखे ॥२३॥ उनलाई देख्नासाथ अप्सराहरूले उनको सामुन्ने नाच्न, गन्धर्वले गाउन तथा मृदङ्ग, वीणा तथा पणवादि मनोहर बाजा बजाउन आरम्भ गरे ॥२४॥ अनि कामदेवले आफ्नू धनुषमा शोषण, दीपन, सम्मोहन, तापन र उन्मादनात्मक यी पाँच मुखका बाण सन्धान गरिदियो । त्यसै बेला वसन्त र लोभ आदि इन्द्रका अङ्गरक्ष सेवक पनि मार्कण्डेयको मनलाई चञ्चल पार्नलागे ॥२५॥ त्यो सुन्दरी आफ्नू चञ्चल दृष्टिले यता-उता स्तनका भारले लचकने र हिंडदा भण्डी पुञ्जिकस्थलि, अलगको मकुण्डो खेल्दाखेल्दै केशपाशबाट फूलको माला खुस्केको ॥२६॥ त्यो सुन्दरी आफ्ना चञ्चल दृष्टिले यता-उता हेर्दै मकुण्डोको पछि-पछि दगुरिरहेकी थिई । त्यतिमै त्यसको करधनी पनि छिन्यो र वायुले त्यसको साडी उडाइदियो ॥२७॥ अनि कामदेवले मार्कण्डेयलाई आफ्नू अधीन ठानेर ती माथि बाण

प्रभावको के वर्णन गरूँ ? अहो ! हजुरको प्रेरणाले नै त देहधारीहरूको प्राण चेष्टा गर्दछन्। जसले गर्दा, मन र इन्द्रियका चेष्टाहरू हुन्छन्। ब्रह्मा तथा शिवका प्रजापादिकको प्रवृत्ति पनि हजुरकै अधीन रहन्छ। हजुर आफ्नू भजन गर्ने भक्तका आत्माको बन्धु हुनुहुन्छ ॥ ४० ॥ हे प्रभो ! जसरी हजुरले मत्स्य-कूर्मादि विविध अवतार केवल विश्वको रक्षाका लागि नै लिनु भएको थियो, त्यस्तै हजुरका यी दुवै मूर्ति त्रिलोकको कल्याणार्थ तथा उसको कष्ट निवारण र मृत्युलाई जित्नको निम्ति नै हो। सम्पूर्ण विश्वलाईले आफ्नै वरिपरि माकुरा झैं आफूमै लीन गरिलिने गर्नुहुन्छ ॥ ४१ ॥ जसलाई पाउन वेद-मर्मज्ञ मुनिजन सधैं स्तुति, पूजन, वन्दना र ध्यान स्तुति गर्दै रहन्छन्, जसका आश्रित पुरुषहरूलाई कर्म, गुण र कालजनित क्लेश छुन पनि सक्तैनन्, ती अखिल चराचरका नियमन र पालन गर्ने हजुरका चरण-कमलमा म सादर प्रणाम गर्दछु ॥ ४२ ॥ हे ईश ! दुइ परार्द्धपर्यन्त स्थिति हुने ब्रह्मा पनि हजुर द्वारा प्रेरित कराल कालसित डराउँछन् भने उनीद्वारा रचित अन्य भौतिक प्राणीहरूको विषयमा के कुरा गर्ने ? अतः सबैतिरबाट भयभीत भएका

स्पन्दन्ति वै तनुभृतामजशर्वयोश्च स्वस्याप्यथापि भजतामसि भावबन्धुः ॥ ४० ॥ मूर्ती इमे भगवतो भगवंस्त्रिलोक्याः क्षेमाय तापविरमाय च मृत्युजित्यै ॥ नाना बिभर्ष्यवितुमन्यतनूर्यथेदं सृष्ट्वा पुनर्ग्रससि सर्वमिवोर्णनाभिः ॥ ४१ ॥ तस्यावितुः स्थिरचरेशितुरङ्घ्रिमूलं यत्स्थं न कर्मगुणकालरुजः स्पृशन्ति ॥ यद्वै स्तुवन्ति निनमन्ति यजन्त्यभीक्ष्णं ध्यायन्ति वेदहृदया मुनयस्तदाप्त्यै ॥ ४२ ॥ नान्यं तवाङ्घ्र्युपनयादपवर्गमूर्तेः क्षेमं जनस्य परितो भिय ईश विद्मः ॥ ब्रह्मा बिभेत्यलमतो द्विपरार्धधिष्ण्यः कालस्य ते किमुत तत्कृतभौतिकानाम् ॥ ४३ ॥ तद्वै भजाम्यृतधियस्तव पादमूलं हित्वेदमात्मच्छदि चात्मगुरोः परस्य ॥ देहाद्यपार्थमसदन्त्यमभिज्ञमात्रं विन्देत ते तर्हि सर्वमनीषितार्थम् ॥ ४४ ॥ सत्त्वं रजस्तम इतीश तवात्मबन्धो मायामयाः स्थितिलयोदयहेतवोऽस्य ॥ लीला धृता यदपि सत्त्वमयी प्रशान्त्यै नान्ये नृणां व्यसनमोहभियश्च याभ्याम् ॥ ४५ ॥ तस्मात्तवेह भगवन्नथ तावकानां शुक्लां तनुं स्वदयितां कुशला भजन्ति ॥ यत्सात्वताः पुरुषरूपमुशन्ति सत्त्वं लोको यतोऽभयमुतात्मसुखं न चान्यत् ॥ ४६ ॥ तस्मै नमो भगवते पुरुषाय भूम्ने विश्वाय विश्वगुरवे परदैवताय ॥ नारायणाय ऋषये च नरोत्तमाय हंसाय संयतगिरे निगमेश्वराय ॥४७॥

जीवका लागि मोक्षस्वरूप हजुरका चरण-शरणमा गएपछि उत्तम र कल्याणकारी स्थान प्राप्त हुँदैन ॥ ४३ ॥ अतः आत्मस्वरूपलाई आच्छादित पार्ने देहादि निष्फल, असत्य, नाशवान् र प्रतीतिमात्र पदार्थलाई छाडेर म आफ्ना गुरु सत्य-ज्ञानस्वरूप हजुर परमेश्वरको चरण मूलको नै भजन गर्दछु। यदि कोही व्यक्ति हजुरको भजन गर्दछ भने त्यो इच्छित पदार्थ पनि हजुरबाट नै पाउँछ ॥४४॥ हे ईश ! हे आत्मबन्धो ! यद्यपि सत्व, रज, तम—यी तीन गुण हजुरकै मूर्ति हुन् र यिनै द्वारा हजुर जगत्को उत्पत्ति, स्थिति र लयको कारण स्वरूपा मायामयी लीलाहरू गर्नुहुन्छ। तापनि मनुष्य मात्रलाई शान्ति दिने हजुरको सत्वमयी मूर्ति नै हो—जसले दुःख, शोक, मोह र भय प्राप्त हुन्छन्। ती अन्य मूर्ति उनलाई कदापि शान्ति दिँदैनन् ॥४५॥ हे भगवन् ! बाठा व्यक्ति हजुरको नारायण नामको शुद्ध मूर्तिको र हजुरका भक्तलाई परम प्रिय नर नामक शुद्ध मूर्तिको नै भजन गर्ने गर्दछन्, किनकि सबै भक्तलाई जसबाट बैकुण्ठादि लोक पाएर अभय तथा आत्मानन्दको उपलब्धि हुन्छ, त्यो सत्वमय स्वरूप नै पाउन खोज्दछु—अरु रजोगुण र तमोगुणमय

1423

वस्तुको इच्छा छैन ॥ ४६ ॥ अतः जो सर्वान्तरयामी, सर्वव्यापक, सर्वस्वरूप, जगद्गुरु, परमदेव, शुद्धस्वरूप, वाणीका नियामक र वेदमार्गका प्रवर्तक छन्, ती भगवान् नारायण र नरश्रेष्ठ नर ऋषिलाई मेरो नमस्कार छ ॥ ४७ ॥ हजुरकी मायाले मोहित बुद्धि⊛ पुरुष आफ्ना इन्द्रिय, प्राण, हृदय र दृष्टिगोचर हुने पदार्थमा विद्यमान रहेर पनि जसलाई कपट पूर्ण इन्द्रियले विक्षिप्तचित्त हुनाले देख्न पाउन्न, उही हजुरलाई त्यो पुरुष हजुर अखिलगुरु परमेश्वर द्वारा प्रवर्तित वेदको ज्ञान पाएर जान्नसक्छ ॥ ४८ ॥ जसका स्वरूपको रहस्य प्रकट गर्ने ज्ञान वेदमा कहिएको छ। जसको स्वरूपलाई जान्नको निम्ति प्रयत्नशील ब्रह्मा र शिव आदि मनीषीगण पनि मोहित हुन्छन्, सबै मतको अनुकूल रूप तथा स्वभाव युक्त तथा देहादिमा लुकेको विशुद्ध विज्ञानस्वरूप ती महापुरुषको म वन्दना गर्दछु ॥४९॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकामष्टमोऽध्याय, ॥८॥ ( मार्कण्डेयले

यं वै न वेद वितथाक्षपथैर्भ्रमद्धीः सन्तं स्वखेष्वसुषु हृद्यपि दृक्पथेषु ॥ तन्माययावृतमतिः स उ एव साक्षादाद्यस्तवाखिलगुरोरुपसाद्य वेदम् ॥ ४८ ॥ यद्दर्शनं निगम आत्मरहःप्रकाशं मुह्यन्ति यत्र कवयोऽजपरा यतन्तः ॥ तं सर्ववादविषयप्रतिरूपशीलं वन्दे महापुरुषमात्मनि गूढबोधम् ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धेऽष्टमोऽध्यायः ॥ ८ ॥ सूत उवाच ॥ संस्तुतो भगवानित्थं मार्कण्डेयेन धीमता ॥ नारायणो नरसखः प्रीत आह भृगूद्वहम् ॥ १ ॥ श्रीभगवानुवाच ॥ भो भो ब्रह्मर्षिवर्योसि सिद्ध आत्मसमाधिना ॥ मयि भक्त्यानपायिन्या तपः स्वाध्यायसंयमैः ॥२॥ वयं ते परितुष्टाः स्म त्वद्बृहद्व्रतचर्यया ॥ वरं प्रतीच्छ भद्रं ते वरदेशादभीप्सितम् ॥ ३ ॥ ऋषिरुवाच ॥ जितं ते देवदेवेश प्रपन्नार्तिहराच्युत ॥ वरेणैतावतालं नो यद्भवान्समदृश्यत ॥ ४ ॥ गृहीत्वाजादयो यस्य श्रीमत्पादाब्जदर्शनम् ॥ मनसा योगपक्वेन स भवान्मेऽक्षगोचरः ॥ ५ ॥

भगवान्को माया देख्नु ) सूतजी भन्दछन्—हे मुनि हो ! बुद्धिमान् मार्कण्डेय द्वारा यसरी स्तूयमान नरका सखा नारायण प्रसन्न भएर ती भृगुनन्दनसित भन्दछन् ॥ १ ॥ भगवान्ले मार्कण्डेयसित भन्नुभयो—हे ब्रह्मर्षे ! तिमी चित्तको समाधि, ममा हुने अविनाशी भक्ति, तप, स्वाध्याय र संयम नियमद्वारा सिद्धि प्राप्त गरिसकेका छौ ॥ २ ॥ तिम्रो ठूलो ब्रह्मचर्यले म तिमीमाथि प्रसन्न छु। तिम्रो कल्याण होस्। म वरदायकको पनि ईश्वरसित जे इच्छा छ, माग ॥३॥ मार्कण्डेय ऋषिले भने—हे देवदेवेश्वर ! हे शरणागतका कष्ट निवारण गर्ने अच्युत ! हजुरले मलाई जुन वर दिने आज्ञाभयो, त्यो हजुरको महत्ता हो। तर हजुरले स्वयं दर्शन दिएपछि मलाई अरु कुनै वरदानको अब केही पनि आवश्यकता छैन ॥ ४ ॥ ब्रह्मादिक

⊛ उदाहरण ( मायाले मोहित )—बौटा बूढोलाई उसको नातीले डुनै कुरामा दुइ-तीन लात्ति हानिदियो र गर्दन समातेर घरबाट निकालिदियो। त्यो बूढो आफ्नु ढोकामा बसेर रोइरहेको थियो र नातीलाई गाली पनि गरिरहेको थियो। त्यतिमै बौटा महात्मा त्यताबाट आएर बूढोसित भने-'बाबा ! किन रोइरहेका छौ, तिमीलाई के दुःख छ।' बूढोले भन्यो—'मेरो छोरा-नाती सबै नालायक छन्, घरमा मएको खोसेर अब मलाई खान पनि दिन्नन्। केही भन्यो भने कुट्न थाल्दछन्। यही कहले रोइरहेको छु र छोरा नातीलाई गाली पनि गर्दैछु।' महात्माले भने—'बाबा ! छोरा-नाती त सुखका मित्र हुन्। अबसम्म तिमीले उनलाई सुख दियौ तिनले तिमीसित स्नेह देखाए, अब तिमी उनलाई सुख दिने लायक रहेनौ, त्यसैले तिम्रो अनादर गर्नलागे। यी सबै स्वार्थले नै प्रीति देखाउँछन्। यी सबैलाई छाडेर मसित हिंड र भगवानको भजन गर ! यति सुन्नासाथ बूढो रिसाएर भन्न थाल्यो-'तपाईंलाई पञ्चा (चौधरी) कसले बनायो ! मेरो घर र सम्बन्धीहरू छाड्ने उपदेश दिदै छौ ! त्यो मेरो नाती हो, म उसका हजुरबा हुँ, बीचमा तिमी उपदेश दिने को हौ ? मेरो नाती [illegible] जति कुटे पनि म खपिरहन्छु। बालकले मार्छन् भनेर कोही आफ्नु घर त्याग्नसक्दछ। तिमी नाताको निम्ति हरि-भजन छ, मेरो त ईश्वरले दिएको सबै थोक छ।' महात्माले भने—'अहो ! हेर यो मोह ममता। यति धेरै दुर्दशा हुँदा पनि मूर्खको मनमा वैराग्य आउँदैन।'

१४२५

देखा पनि आफ्नू श्रीमत्त्व भनेर बनेका चरण-कमलको दर्शन गरेर कृतकृत्य भइसकेका छन्, उनै हजुर साक्षात् ईश्वर मेरा नेत्रको गाड्ड उपस्थित भए । ॥ ५ ॥ तैपनि पवित्र कीर्ति हुनेहरूका शिरोमणि हे कमलदलनिभलोचन ! म हजुरकी त्यो माया हेर्दछु, जसले मोहित भएर लोकपालसहित सारा संसार सत्य वस्तु अर्थात् ब्रह्ममा स्पष्ट भेद देख्दछ ॥ ६ ॥ सूतजी भन्दछन्—हे मुने ! मार्कण्डेयजी द्वारा यसरी स्तुति र पूजित भएर भगवान् 'तथास्तु' भनी मुसुक्क हाँसेर बदरिकाश्रम जानुभयो ॥ ७ ॥ ऋषि श्रेष्ठ मार्कण्डेय आफ्नू आश्रममै बस्तथे र भगवान्को चिन्तन गर्दै सूर्य, चन्द्रमा, जल, पृथ्वी, वायु आकाश तथा चित्तमा सर्वत्र उनै प्रभुको ध्यान गर्दागर्दै भावनामय पदार्थहरूमा उनको मानसिक पूजा गर्नलागे । कहिले काहीं [illegible] प्रेमको बाढमा बहेर भगवान्को पूजा पनि बिर्सन्थे ॥ ८ ॥ ९ ॥ हे भृगुश्रेष्ठ ! एक दिन ती साँझमा पुष्पभद्रा नदीको तटमा उपासना गर्न बसे । हे ब्रह्मन् ! त्यसै बेला ठूलो आँधी चल्न लाग्यो ॥ १० ॥ त्यो प्रचण्ड ध्वनियुक्त वायुसाथै डरलाग्दा मेघ आकाशमा देखिए र बिजुलीको चम्काइका साथै खुब गर्जेर कुनै [illegible]।

अथाप्यम्बुजपत्राक्ष पुण्यश्लोकशिखामणे ॥ द्रक्ष्ये मायां यया लोकः सपालो वेद सद्भिदाम् ॥ ६ ॥ सूत उवाच ॥ इतीडितोऽर्चितः काममृषिणा भगवान्मुने ॥ तथेति स स्मयन्प्रागाद्बदर्याश्रममीश्वरः ॥ ७ ॥ तमेव चिन्तयन्नर्थमृषिः स्वाश्रम एव सः ॥ वसन्नग्न्यर्कसोमाम्बुभूवायुवियदात्मसु ॥ ८ ॥ ध्यायन्सर्वत्र च हरिं भावद्रव्यैरपूजयत् ॥ क्वचित्पूजां विसस्मार प्रेमप्रसरसम्प्लुतः ॥ ९ ॥ तस्यैकदा भृगुश्रेष्ठ पुष्पभद्रातटे मुनेः ॥ उपासीनस्य सन्ध्यायां ब्रह्मन्वायुरभून्महान् ॥१०॥ तं चण्डशब्दं समुदीरयन्तं बलाहका अन्वभवन्करालाः ॥ अक्षस्थविष्ठा मुमुचुस्तडिद्भिः स्वनन्त उच्चैरभिवर्षधाराः ॥ ११ ॥ ततो व्यदृश्यन्त चतुःसमुद्राः समन्ततः क्ष्मातलमाग्रसन्तः ॥ समीरवेगोर्मिभिरुग्रनक्रमहाभयावर्तगभीरघोषाः ॥ १२ ॥ अन्तर्बहिश्चाद्भिरतिद्युभिः खरैः शतह्रदाभीरुपतापितं जगत् ॥ चतुर्विधं वीक्ष्य महात्मना मुनिर्जलाप्लुतां क्ष्मां विमनाः समत्रसत् ॥ १३ ॥ तस्यैवमुद्वीक्षत ऊर्मिभीषणः प्रभञ्जनाघूर्णितवार्महार्णवः ॥ आपूर्यमाणो वरषद्भिरम्बुदैः क्ष्मामप्यधाद्द्वीपवर्षाद्रिभिः समम् ॥ १४ ॥ सक्ष्मान्तरिक्षं सदिवं सभागणं त्रैलोक्यमासीत्सह दिग्भिराप्लुतम् ॥ स एक एवोर्वरितो महामुनिर्बभ्राम विक्षिप्य जटा जडान्धवत् ॥१५॥ क्षुत्तृट्परीतो मकर-

धारा ( मुसा ) को मोटो-मोटो धाराले पानी पर्न थाल्यो ॥ ११ ॥ फेरि उग्र मेघ र डरलाग्दो भुमरी तथा गम्भीर निनाद हुने चारै समुद्रहरू वायुको वेगले उठ्ने तरङ्गहरूले चारैतिरबाट पृथ्वीलाई ग्रस्त भएको देखिन लाग्यो ॥ १२ ॥ भित्र बाहिर-भित्रबाट सबैलाई पनि डुबाउने जलले प्रचण्ड पवन र बिजुलीले आफूले आफू समेत सारै थाकेका जीवले युक्त जगत् भएको र पृथ्वी जलमा डुबन लागेको देखेर मार्कण्डेय खिन्न तथा भयभीत भए ॥ १३ ॥ उनले हेर्दा हेर्दै भयंकर तरंगले भयानक र आँधीले उर्लने भएको [illegible] बढेर—मेघ द्वारा भइ वर्षा उर्लेर द्वीप, वर्ष, पर्वत सहित सबै भूमण्डललाई चारैतिरबाट डाक्दियो ॥ १४ ॥ यसरी एक क्षणमै पृथिवी, अन्तरिक्ष, स्वर्ग, ग्रहगण, र दिशाहरू सहित तीनै लोक जलमा डुब्यो । केवल एकलै महामुनि मार्कण्डेय मात्र शेष रहे । जब ती आफ्ना जटा फिंजाएर जड र अन्धा झैं यता उता भौंतारिन लागे ॥ १५ ॥ भुत्किएर मार्कण्डेय भोक-प्यासले व्याकुल तथा मकर र तिमिङ्गलहरूले पीडित हुँदै तरङ्ग आँधीका थपेडाले व्याकुल भई घोर

झैं तिनको पेटमा गए । त्यहाँ गएर उनले सारा संसार उसै गरी देखे जसरी प्रलय भन्दा अगाडि देखेका थिए । त्यसले ती विस्मित हुनका साथै मोहित पनि भए ॥ २६ ॥ ॥२७॥ आकाश, स्वर्ग, पृथ्वी, ग्रह, पर्वत, द्वीप, वर्ष, दिशाहरू, देवता, असुर, वन, देश, नदी, आकार अर्थात् खानी, खेत अर्थात् कृषकहरूका ग्राम, घोष, पशुशाला, आश्रम, वर्ण, र तिनका वृत्ति ॥२८॥ पञ्चमहाभूत, भौतिक पदार्थ, अनेक युग र कल्पका कल्पनासहित काल र अन्य-जुन व्यवहारका कारण हुन्छन्, ती सहित सारा उनले त्यहाँ परमार्थ अर्थात् सत्य झैं आलोकित देखे ॥ २९ ॥ त्यसै गरी उनले त्यहाँ हिमालय पर्वत, पुष्पभद्रा नदी, आफ्नू आश्रम र त्यहाँ बस्ने सबै ऋषिगणलाई पनि देखे । यस प्रकार समस्त विश्वलाई देखेर ती बालकले श्वास छाडनासाथ ती बाहिर निस्किए र प्रलय-समुद्रमा पछारिए ॥३०॥ त्यो पृथ्वीको टुक्रामा विद्यमान त्यो बटवृक्ष र त्यसका पातको दुनामा सुतेका ती बालक पनि उनले देखे । अनि ती बालकद्वारा प्रेमामृत पूर्ण मुसकान सहित कटाक्ष-दृष्टि द्वारा देखेपछि आफ्ना नेत्रबाट हृदयमा बसेका ती बालकलाई देखेर ती अधोक्षज भगवान्‌को

र्षान्ककुभः सुरासुरान् ॥ वनानि देशान्सरितः पुराकरान् खेटान्व्रजानाश्रमवर्णवृत्तयः ॥ २८ ॥ महान्ति भूतान्यथ भौतिकान्यसौ कालं च नाना-युगकल्पकल्पनम् ॥ यत्किञ्चिदन्यद्व्यवहारकारणं ददर्श विश्वं सदिवावभासितम् ॥ २९ ॥ हिमालयं पुष्पवहां च तां नदीं निजाश्रमं तत्र ऋषीन-पश्यत् ॥ विश्वं विपश्यञ्छ्वसिताच्छिशोर्वै बहिर्निरस्तो न्यपतल्लयाब्धौ ॥ ३० ॥ तस्मिन्पृथिव्याः ककुदि प्ररूढं वटं च तत्पर्णपुटे शयानम् ॥ तोकं च तत्प्रेमसुधास्मितेन निरीक्षितोऽपाङ्गनिरीक्षणेन ॥ ३१ ॥ अथ तं बालकं वीक्ष्य नेत्राभ्यां धिष्ठितं हृदि ॥ अभ्ययादतिसंक्लिष्टः परिष्वक्तु-मधोक्षजम् ॥ ३२ ॥ तावत्स भगवान्साक्षाद्योगाधीशो गुहाशयः ॥ अन्तर्दध ऋषेः सद्यो यथेहानीशनिर्मिता ॥ ३३ ॥ तमन्वथ वटो ब्रह्मन्सलिलं लोकसम्प्लवः ॥ तिरोधायि क्षणादस्य स्वाश्रमे पूर्ववत्स्थितः ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धेमायादर्शनं नाम नवमोऽध्यायः ॥ ९ ॥ सूत उवाच ॥ स एवमनुभूयेदं नारायणविनिर्मितम् ॥ वैभवं योगमायायास्तमेव शरणं ययौ ॥ १ ॥ मार्कण्डेय उवाच ॥ प्रपन्नोऽस्म्यंघ्रि-मूलं ते प्रपन्नाभयदं हरे ॥ यन्माययापि विबुधा मुह्यन्ति ज्ञानकाशया ॥ २ ॥ सूत उवाच ॥ तमेवं निभृतात्मानं वृषेण दिवि पर्यटन् ॥ रुद्राण्या भगवान् रुद्रो ददर्श स्वगणैर्वृतः ॥ ३ ॥ अथोमा तमृषिं वीक्ष्य गिरिशं समभाषत ॥ पश्येमं भगवन्विप्रं निभृतात्मेन्द्रियाशयम् ॥ ४ ॥ निभृतोद-

आलिङ्गन गर्न कष्टसाथ अगाडिसरे ॥३१॥३२॥ त्यतिमै जसरी भाग्यहीनले गरेको सबै कल्पना व्यर्थ हुन्छन्, त्यस्तै ती सर्वान्तर्यामी साक्षात् भगवान् योगेश्वर ती ऋषिश्रेष्ठका अगाडिबाट अन्तर्धान भए ॥३३॥ हे ब्रह्मन् ! उनका साथै त्यो बटवृक्ष तथा लोकलाई डुबाउने जल पनि उसै बेला विलीन भयो र मार्कण्डेय फेरि पहिले जस्तै आफ्नू आश्रममा आएर बसे ॥३४॥ इति श्रीमद्भागवत महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकाया नवमोऽध्यायः ॥ ९ ॥ ( मार्कण्डेयलाई भगवान शङ्करले वरदान दिनु )— सूतजी भन्दछन्—हे मुने ! नारायण द्वारा रचित योगमायाको वैभव देखेर मार्कण्डेय उनैको शरण परे ॥ १ ॥ मार्कण्डेयले भने—हे हरे ! ठूला-ठूला ज्ञानी पनि ज्ञान झैं प्रकाशित हुने जसकी मायाले मोहित हुने गर्दछन्, ती हजुरका शरणागतलाई अभयदायक चरण-कमलको म शरणमा छु ॥२॥ सूतजी भन्दछन्—यसरी एकाग्रचित्त भएका ती मुनिवरलाई पार्वती

सहित नन्दीमा चढेर आफ्ना गणहरूले घेरिई स्वर्गलोकमा डुलिरहेका शिवले देखे ॥ ३ ॥ ती मुनिराजलाई देखेर पार्वतीले शिवजीसित भनिन्—हे प्रभो ! वायु नमएपछि तथा मत्स्य-समूह शान्त भएपछि जसरी समुद्र शान्त हुन्छ, त्यस्तै उनको देह, इन्द्रिय र अन्तःकरण वशमा भएका छन्, यस्ता यी ब्राह्मणलाई हेर्नुहवस् र इनको तपको प्रत्यक्ष फल सिद्ध पारि दिनोस्, किनकि हजुर सबै सिद्धिका दाता हुनुहुन्छ । शिवजी भन्नुहुन्छ—यी ब्रह्मर्षि कहिल्यै योग वा मोक्ष खोज्दैनन्, किनकि यी अविनाशी पुरुषोत्तमको पराभक्ति पाइसकेका छन् ॥ ४-६ ॥ हे भवानी ! तैपनि म यी सज्जनसित केही कुरा गर्दछु, किनकि साधु-समागम पुरुषका निम्ति ठूलो लाभ मानिएको छ ॥ ७ ॥ सूतजी भन्दछन्—यसरी भनेर सबै विद्याका प्रवर्तक सबै जीवका प्रभु र साधु जनका एक मात्र आश्रय शङ्करजी उनको नजीकै आए ॥८॥ तर आफ्नू अन्तःकरणका वृत्तिलाई रोकिराख्ने मार्कण्डेयलाई आफ्नू देह र संसारको केही ज्ञान रहेन ! अतः उनलाई जगत्का आत्मास्वरूप साक्षात् ईश्वर ती शिव पार्वती आएको पनि थाहा भएन ॥९॥ सर्वसमर्थ शङ्कर भगवान यो रहस्य जानेर वायु जसरी प्वालमा

झषव्रातं वातापाये यथार्णवम् ॥ कुर्वस्य तपसः साक्षात्संसिद्धिं सिद्धिदो भवान् ॥ ५ ॥ श्रीभगवानुवाच ॥ नैवेच्छत्याशिषः क्वापि ब्रह्मर्षिर्मोक्षमप्युत ॥ भक्तिं परां भगवति लब्धवान्पुरुषेऽव्यये ॥ ६ ॥ अथापि संवदिष्यामो भवान्येतेन साधुना ॥ अयं हि परमो लाभो नृणां साधुसमागमः ॥ ७ ॥ सूत उवाच ॥ इत्युक्त्वा तमुपेयाय भगवान्स सतां गतिः ॥ ईशानः सर्वविद्यानामीश्वरः सर्वदेहिनाम् ॥ ८ ॥ तयोरागमनं साक्षादीशयोर्जगदात्मनोः ॥ न वेद रुद्धधीवृत्तिरात्मानं विश्वमेव च ॥ ९ ॥ भगवांस्तदभिज्ञाय गिरिशो योगमायया ॥ आविशत्तद्गुहाकाशं वायुश्छिद्रमिवेश्वरः ॥१०॥ आत्मन्यपि शिवं प्राप्तं तडित्पिङ्गजटाधरम् ॥ त्र्यक्षं दशभुजं प्रांशुमुद्यन्तमिव भास्करम् ॥ ११ ॥ व्याघ्रचर्माम्बरं शूलधनुरिष्वसिचर्मभिः ॥ अक्षमालाडमरुककपालासिधनुः सह ॥ १२ ॥ बिभ्राणं सहसा भातं विचक्ष्य हृदि विस्मितः ॥ किमिदं कुत एवेति समाधेर्विरतो मुनिः ॥ १३ ॥ नेत्रे उन्मील्य ददृशे सगणं सोमयागतम् ॥ रुद्रं त्रिलोकैकगुरुं ननाम शिरसा मुनिः ॥ १४ ॥ तस्मै सपर्यां व्यदधात्सगणाय सहोमया ॥ स्वागतासनपाद्यार्घ्यगन्धस्रग्धूपदीपकैः ॥ १५ ॥ आह त्वात्मानुभावेन पूर्णकामस्य ते विभो ॥ करवाम किमीशान येनेदं निर्वृतं जगत् ॥ १६ ॥

पस्तछ, त्यसै गरी योगमाया द्वारा उनको हृदयाकाशमा प्रविष्ट भए ॥ १० ॥ अनि बिजुली झैं पिङ्गल वर्ण-जटाधारी, तीन नेत्र र भुजा हुने उदीयमान सूर्य जस्तै तेजस्वी, अग्लो देह व्याघ्रचर्म धारी, त्रिशूल, धनुष बाण, खड्ग ढाल, अक्षमाला, डमरू, कपाल एवं परशुधारी शङ्करजीलाई आफ्नू अन्तःकरणमा सहसा प्रकट भएका देखेर मार्कण्डेयजी निकै छक्क परे र 'यो को हो ? यो कहाँबाट आयो ? यस्तो विचार गरी समाधिबाट उपरत भए ॥ ११-१३ ॥ आँखा खोल्नासाथ त्रिलोकका एकमात्र गुरु शंकरजीलाई पार्वती र आफ्ना गणसमेत आएका देखे । अनि मार्कण्डेयले उनलाई शिर निहुराए नमस्कार गरे ॥१४॥ अनि उनले स्वागत, आसन, पाद्य, अर्घ्य, गन्ध, माला, धूप तथा दीपादिद्वारा पार्वती र गणसहित शिवको पूजा गरे ॥१५॥ अनि भन्नलागे—'हे विभो ! हे ईश ! जनद्वारा सम्पूर्ण जगत्लाई सुख मिल्दछ र जो आफ्नू प्रभावले सर्वथा पूर्णकाम छन्, यस्ता हजुरको म के प्रिय गर्न सक्छु ? ॥ १६ ॥ निर्गुण, शान्त, सबैका सुखदायक सत्त्वस्वरूप तथा रजोत्तमगुणले युक्त भएर पनि जो अघोर छन् ती हजुर, महादेवलाई म नमस्कार गर्दछु ।' सूतजी भन्दछन्—

15/28

यसरी मार्कण्डेयले स्तुति गरेपछि साधुजना एकमात्र आश्रय र आदिदेव शङ्कर प्रसन्न भएर हर्षित चित्तले मुसुमुसु हाँस्तै भन्नुहुन्छ ॥१७॥१८॥ शिवजीले भन्नुभयो—हे मुने ! जसको अमोघ दर्शन कहिल्यै व्यर्थ जाँदैन र जसद्वारा मनुष्यलाई अमरपद प्राप्त हुन्छ, यस्ता हामी तीनै ( ब्रह्मा विष्णु र महादेव ) सर्वत्र वरदातामा प्रधान छौं। अतः तिमी मसित इच्छितवर माग ॥१९॥ जो जो ब्राह्मण, साधुस्वभाव, शान्त, निःसंग, सबै जीवमा कृपालु, मेरा अनन्य भक्त, वैरहीन र समदर्शी हुन्छन् ॥२०॥ सबै लोक सहित लोकपाल उनको वन्दना, पूजा तथा उपासना गर्दछन्। तीमात्र होइन—म, भगवान् ब्रह्मा र विष्णु भगवान् पनि उनको भजन गर्दै रहन्छन् ॥ २१ ॥ किनकि ती ममा, विष्णुमा र ब्रह्माजीमा तथा आफ्नूमा र साधारण जनसमुदायमा केही भेद देख्दैनन्। यसैले म हजुरहरूको भजन गर्दछु ॥ २२ ॥ जलमय तीर्थ नै तीर्थ हुन्नन् र केवल चेतनाशून्य देवता अर्थात् देवमूर्तिहरू नै देवता

नमः शिवाय शान्ताय सत्त्वाय प्रमृडाय च ॥ रजोजुषेऽप्यघोराय नमस्तुभ्यं तमोजुषे ॥ १७ ॥ सूत उवाच ॥ एवं स्तुतः स भगवानादिदेवः सतां गतिः ॥ परितुष्टः प्रसन्नात्मा प्रसहंस्तमभाषत ॥ १८ ॥ श्रीभगवानुवाच ॥ वरं वृणीष्व नः कामं वरदेशा वयं त्रयः ॥ अमोघं दर्शनं येषां मर्त्यो यद्विन्दतेऽमृतम् ॥१९॥ ब्राह्मणाः साधवः शान्ता निःसङ्गा भूतवत्सलाः ॥ एकान्तभक्ता अस्मासु निर्वैराः समदर्शिनः ॥ २० ॥ सलोका लोकपालास्तान्वन्दत्यर्चन्त्युपासते ॥ अहं च भगवान्ब्रह्मा स्वयं च हरिरीश्वरः ॥ २१ ॥ न ते मय्यच्युतेऽजे च भिदामण्वपि चक्षते ॥ नात्मनश्च जनस्यापि तद्युष्मान्वयमीमहि ॥ २२ ॥ ह्यम्मयानि तीर्थानि न देवाश्चेतनोज्झिताः ते पुनन्त्युरुकालेन यूयं दर्शनमात्रतः ॥ २३ ॥ ब्राह्मणेभ्यो नमस्यामो येऽस्मद्रूपं त्रयीमयम् ॥ बिभ्रत्यात्मसमाधानतपःस्वध्यायसंयमैः ॥ २४ ॥ श्रवणाद्दर्शनाद्वापि महापकिनोऽपि वः शुध्येरन्नन्त्यजाश्चापि किमु सम्भाषणादिभिः ॥२५॥ सूत उवाच ॥ इति चन्द्रललामस्य धर्मगुह्योपबृंहितम् ॥ वचोऽमृतायनमृषिर्नातृप्यत्कर्णयोः पिबन् ॥ २६ ॥ स चिरं मायया विष्णोर्भ्रामितः कर्शितो भृशम् ॥ शिववागमृतध्वस्तक्लेशपुञ्जस्तमब्रवीत् ॥ १७ ॥ ऋषिरुवाच ॥ अहो ईश्वरलीलेयं दुर्विभाव्या शरीरिणाम् ॥ यन्नमन्तीशितव्यानि स्तुवन्ति जगदीश्वराः ॥ २८ ॥ धर्मं ग्राहयितुं प्रायः प्रवक्तारश्च देहिनाम् ॥ आचरन्त्यनुमोदन्ते क्रियमाणं

हुन्नन्, किनकि ती धेरै दिनसम्म आराधना गरेर प्राणीलाई पवित्र पार्दछन्, तर हजुर आफ्नू दर्शन मात्रले सबैलाई पवित्र पारिदिन्छन् ॥२३॥ जो चित्तको एकाग्रता तप, स्वाध्याय र संयमादिले हाम्रो वेदत्रयीमय शरीर धारण गर्दछन्, ती ब्राह्मणलाई हाम्रो नमस्कार छ ॥ २४ ॥ हजुर जस्ता साधुजनको नाम श्रवण र दर्शनले नै महापापी चाण्डाल पनि पवित्र हुन्छन् भने हजुरसित सम्भाषण गर्नेको विषयमा के कुरा गर्ने ? ॥ २५ ॥ सूतजी भन्दछन्—हे शौनक ! चन्द्रभूषण शंकरको धर्मले परिपूर्ण एवं अमृत जस्ता वचन श्रवण पुट द्वारा बारम्बार पिउँदा पनि मुनिवर मार्कण्डेयलाई सन्तोष भएन ॥ २६ ॥ ती धेरै दिनदेखि विष्णु भगवान्को मायाले भ्रान्तचित्त रहनाले बर्ता थाके झैं भएका थिए। अतः अब शङ्करजीका वचनामृतले क्लेशपुञ्ज क्षीण भएपछि ती बोले ॥ २७ ॥ मार्कण्डेयले भने—अहो ! ईश्वरको लीला पनि देहधारीहरूका लागि जानि-बुझीनसक्नु हुन्छ।

यसैले हजुर नै जगदीश्वर पनि शासन गर्न योग्य म जस्ता जीवको स्तुति वन्दना गरिरहनु भएको छ। धर्मका उपदेशाहरू सबै धर्मको तत्त्व ग्रहण गर्नका लागि नै धर्मको आचरण र अनुमोदन गर्दछन्, आचरणमा आउने धर्मको प्रशंसा गर्दछन् ॥ २८॥२९ ॥ हे भगवन् ! आफ्नो मायामयी वृत्तिहरू स्वीकार गरेर नमस्कारादि गर्नाले हजुरको प्रभाव उसै गरी दूषित हुँदैन, जसरी मायावीको मायाले उसको प्रभावमा कुनै फरक पर्दैन ॥ ३० ॥ जो *स्वप्नद्रष्टा जस्तै सम्पूर्ण विश्वलाई आफ्नू मनले रचेर त्यसैमा अनुप्रविष्ट भई तथा ती गुणहरूले गरेका कार्यको स्वयं कर्ता समान ज्ञात हुन्छन्, ती त्रिगुणात्मक भएर पनि गुणका नियन्ता, केवल, अद्वितीय र ब्रह्मस्वरूप जगद्गुरु विष्णु भगवान्लाई नमस्कार छ ॥ ३१ ॥ ३२ ॥ हे भूमन् ! जसको केवल दर्शनले पुरुष सर्वानन्दमय र आप्तकाम बन्दछ, ती प्रियदर्शन हजुरसित म अरु के वरदान माग्नसक्छु र माग्ने पनि कसरी ? ॥ ३३ ॥

स्तुवन्ति च ॥ २६ ॥ नैतावता भगवतः स्वमायावृत्तिभिः ॥ न दुष्यैतानुभावस्तैर्मायिनः कुहकं यथा ॥ ३० ॥ सृष्ट्वेदं मनसा विश्वमात्मनानुप्रविश्य यः ॥ गुणैः कुर्वद्भिराभाति कर्तेव स्वप्नदृग्यथा ॥ ३१ ॥ तस्मै नमो भगवते त्रिगुणाय गुणात्मने ॥ केवलायाद्वितीयाय गुरवे ब्रह्ममूर्तये ॥ ३२ ॥ कं वृणे नु परं भूमन् वरं त्वद्वरदर्शनात् ॥ यद्दर्शनात्पूर्णकामः सत्यकामः पुमान् भवेत् ॥ ३३ ॥ वरमेकं वृणेऽथापि पूर्णात्कामाभिवर्षणात् ॥ भगवत्यच्युतां भक्तिं तत्परेषु तथा त्वयि ॥ ३४ ॥ सूत उवाच ॥ इत्यर्चितोऽभिष्टुतश्च मुनिना सूक्तया गिरा ॥ तमाह भगवाञ्छर्वः शर्वया चाभिनन्दितः ॥ ३५ ॥ कामो महर्षे सर्वोऽयं भक्तिमांस्त्वमधोक्षजे ॥ कामल्पान्तायशः पुण्यमजरामरता तथा ॥ ३६ ॥ ज्ञानं त्रैकालिकं ब्रह्मन्विज्ञानं च विरक्तिमत् ॥ ब्रह्मवर्चस्विनो भूयात्पुराणाचार्यतास्तु ते ॥ ३७ ॥ सूत उवाच ॥ एवं वरान्स मुनये दत्त्वागात्त्र्यक्ष ईश्वरः ॥

तैपनि कामनाको वर्षा गर्ने पूर्ण प्रभुसित म यौटा यही वर माग्दछु—भगवान्मा, उनका भक्तमा र हजुरमा मेरो अविचल भक्ति सदासर्वदा बनिरहोस् ॥ ३४ ॥ सूतजी भन्दछन्—हे शौनक ! मार्कण्डेय द्वारा यसरी मधुर वाणीले पूजित र स्तूयमान भई भगवान शङ्करजीले पार्वतीको सम्मतिले भने—॥ ३५ ॥ हे महर्षे ! भगवान् अधोक्षजमा तिम्रो भक्ति छ, अतः तिम्रा सबै कामना पूर्ण हुनेछन् र कल्पान्तसम्मको निम्ति स्थिर यश, पुण्य र अजरामरता प्राप्त हुनेछ ॥ ३६ ॥ हे ब्रह्मन् ! तिमी ब्रह्मतेजले सम्पन्न होऊ, तिमीलाई भूत, भविष्य तथा वर्तमान तीनै कालका वैराग्ययुक्त विज्ञान तथा पुराणको आचार्यत्व पनि प्राप्त हुनेछ ॥३७॥ सूतजी भन्दछन्—हे मुने ! यसरी मार्कण्डेयलाई वर दिई शंकरजी पार्वतीलाई उनका

---

* दृष्टान्त ( संसार स्वप्नवत् छ ) यौटा मानिस ठाकै थियो । उसकी स्वास्नी नित्य कुर्को लाउँथी—'केही काम गर्दैनौ भने गएर नोकरी खोज । यसरी बसिरहेर काम चल्न सक्तैन । एक दिन त्यो ठाकको छोरो निकै बिरामी थियो, तर त्यो नोकरी खोज्न हिंड्यो । त्यतिमै उसको छोरो मर्यो । मालिकहरू उस व्यक्तिलाई खोज्नलागे तर उसको पत्ता लागेन । साँझ परेपछि जब पत्नीले भनी-'तिमी कस्ता कठोर मानिस छौ, मर्न आँटेको छोरो छाडेर परबाट हिड्यौ, तिमीलाई छोरो मरेको केही पनि शोक छैन ?' त्यो मानिसले उत्तर दियो-'मैले एक दिन सपना देखें-मेरा सात भाई छोरा छन्, म उनीसित आनन्दले बसेको छु, तर जब म उठें तब ज्ञात भयो- त्यो त केवल सपना थियो । अब सात भाई पुत्रहरूसित छुट्टिंदा मलाई शोक भएन भने यौटा छोरोको निम्ति के रोइरहनु !'

1430

कर्म तथा जे जति ज्ञान उनले अनुभव गरेका थिए, त्यो सबै सुनाउँदै त्यहाँबाट हिँडिदिए ॥ ३८ ॥ भृगुवंशमा श्रेष्ठ मार्कण्डेय महान् योग-सम्पत्ति पाएर आज पनि भगवानका अनन्य भाइले अनुरक्त भएर डुलिरहन्छन् ॥ ३९ ॥ बुद्धिमान मार्कण्डेयले यस प्रकार जो भगवानको मायाको अतिशय अद्भुत वैभवको अनुभव गरेका थिए, त्यो सबै मैले सुनाएँ ॥ ४० ॥ हे मुनिराज ! यो भगवानको विचित्र माया थियो, तर यो रहस्य नजान्ने धेरै व्यक्ति भगवान् द्वारा कुनै समय मार्कण्डेयलाई देखाउनको निम्ति रचेको मायिक लीलालाई अनादि कालसम्म क्रमशः सातपल्ट भइसकेको प्रलय भन्दछन् ॥ ४१ ॥ हे भृगुश्रेष्ठ ! यसरी वर्णन गरेको भगवान्को प्रभावले प्रभावित यो चरित्र जो सुन्छ या सुनाउँछ, ती दुवै चारेलाई कर्मवासना द्वारा जन्म-मरणरूपी संसारचक्र प्राप्त हुँदैन ॥४२॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥१०॥ ( भगवान्का अंग उपाङ्ग,आयुध तथा प्रत्येक महीनामा रहने सूर्यका गण )–यति सुनेर शौनक भन्दछन्–हे महाभाग सूतजी ! हजुर सर्व शास्त्रका सिद्धान्तविषयक गूढतत्त्व जान्नु हुन्छ । अतः बहुज्ञहरूमा श्रेष्ठ

देव्यैः तत्कर्म कथयन्ननुभूतं पुरामुना ॥ ३८ ॥ सोऽप्यवाप्तमहायोगमहिमा भार्गवोत्तमः ॥ विचरत्यधुनाप्यद्धा हरावेकान्ततां गतः ॥ ३९ ॥ अनुवर्णितमेतत्ते मार्कण्डेयस्य धीमतः ॥ अनुभूतं भगवतो मायावैभवमद्भुतम् ॥ ४० ॥ एकत्केचिदविद्वांसो मायासंसृतिमात्मनः ॥ अनाद्यावर्तितं नृणां कदाचित्कं प्रचक्षते ॥ ४१ ॥ य एवमेतद्भृगुवर्य वर्णितं रथाङ्गपाणेरनुभावभावितम् ॥ संश्रावयेत्संशृणुयादुतावुभौ तयोर्न कर्माशयसंसृतिर्भवेत् ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे दशमोऽध्यायः ॥ १० ॥ शौनक उवाच ॥ अथेममर्थं पृच्छामो भवन्तं बहुवित्तमम् ॥ समस्ततन्त्रराद्धान्ते भवान्भागवततत्त्ववित् ॥ १ ॥ तान्त्रिकाः परिचर्यायां केवलस्य श्रियः पतेः ॥ अङ्गोपाङ्गायुधाकल्पं कल्पयन्ति यथा च यैः ॥२॥ तन्नो वर्णय भद्रं ते क्रियायोगं बुभुत्सताम् ॥ येन क्रियानैपुणेन मर्त्यो यायादमर्त्यताम् ॥ ३ ॥ सूत उवाच ॥ नमस्कृत्य गुरून्वक्ष्ये विभूतीर्वैष्णवीरपि ॥ याः प्रोक्ता वेदतन्त्राभ्यामाचार्यैः पद्मजादिभिः ॥ ४ ॥ मायाद्यैर्नवभिस्तत्त्वैः स विकारमयो विराट् ॥ निर्मितो दृश्यते यत्र सचित्के भुवनत्रयम् ॥ ५ ॥ एतद्वै पौरुषं रूपं भूः पादौ द्यौः शिरो नभः ॥ नाभिः सूर्योऽक्षिणी नासे वायुः कर्णौ दिशः प्रभोः ॥ ६ ॥ प्रजापतिः प्रजननमपानो मृत्युरीशितुः ॥ तद्बाहवो लोकपाला मनश्चन्द्रो भ्रुवौ यमः ॥ ७ ॥ लज्जोत्तरोऽधरो लोभो दन्ता ज्योत्स्ना स्मयो भ्रमः ॥ रोमाणि भूरुहा

हजुरसित म यो जान्न खोज्दैछु ॥ १ ॥ हे सूत ! हजुरको कल्याण होस् । पाञ्चरात्रतन्त्र शास्त्रका ज्ञानी जन केवल लक्ष्मीपतिको आराधना गर्नमा जुन-जुन तत्त्वले र जसरी-जसरी उनका चरणादि अङ्ग, गरुड आदि उपाङ्ग, सुदर्शनादि आयुध र कौस्तुभादि आभूषणहरूको कल्पना गर्दछन् । त्यो सबै हामी यसनिम्ति गर्दछन् कि क्रियायोगको कुशलता द्वारा मरणधर्मा मनुष्य अमरपद पाउन सकून् ॥ २॥३ ॥ सूतजी भन्दछन्–हे मुने ! अब म आफ्ना गुरुदेवलाई नमस्कार गरेर जसको ब्रह्मादि आचार्यहरूले वेद र शास्त्रहरू द्वारा निरूपण गरेको छ, ती विष्णु भगवानका विभूतिहरूको वर्णन गर्दछु ॥ ४ ॥ भगवान्को जुन चेतनाधिष्ठित विश्वरूपमा यो सारा त्रिलोक देखिन्छ । सोह्र विकारहरूले संयुक्त ती विराट पुरुष प्रकृति आदि नौ तत्त्वहरूले बनेको छ ॥ ५ ॥ अतः यो सारा ब्रह्माण्ड ती विराट् पुरुषको स्वरूप हो । ती महाप्रभुको पृथिवी चरण, स्वर्ग शिर, आकाश नाभि, सूर्य नयन,

1431

वायु नासिका, दिशाहरू कान हुन् ॥६॥ त्यस्तै ती ईश्वरका प्रजापति उपस्थ, मृत्यु गदा, सबै लोकपाल भुजाहरू, मन चन्द्रमा तथा यमराज आँखीभौँ हुन् ॥ ७ ॥ ती प्रभुका माथिल्लो ओठ लज्जा, चन्द्रमाको ज्योत्स्ना दाँत, भ्रम हाँसो, सबै वृक्ष रोमावली र मेघ केशकलाप हुन् ॥८॥ हे शौनक ! जस्तै त्यो व्यष्टि पुरुष आफ्नू परिमाणले सात कुरेतको हुन्छ, त्यस्तै त्यो महापुरुष पनि लोकस्थिति अनुसार आफ्नू नापले सात कुरेतकै छ ॥९॥ ती अजन्मा अनन्त महाप्रभु आफ्नी विशुद्ध आत्मज्योतिलाई कौस्तुभरूपले तथा उनको सर्वव्यापिनी प्रभा श्रीवत्सरूपले सर्वदा आफ्नू वक्षास्थलमा धारण गरिराख्दछन् ॥१०॥ उनले आफ्नी विविध गुणमयी माया वनमालाको रूपमा धारण गरेका छन् । छन्दोमय आच्छादनवस्त्र र त्रिवृत्स्वर अर्थात् ओंकाररूपी जनै लगाउँछन् ॥११॥ ती देवाधिदेव सांख्य र योगरूपी मकराकृति कुण्डल एवं सबै लोकलाई अभय दिने ब्रह्मपदरूपी मुकुट धारण गरेका छन् ॥१२॥ अव्याकृत वा मूलप्रकृति नै उनको अनन्त शेषनागको शय्या छ, जसमा ती बस्तछन् । धर्म ज्ञानादि युक्त सत्वगुण नै ती भगवान्‌को पद्म कहिन्छ ॥१३॥ ती

भूम्नो मेघाः पुरुषमूर्धजाः ॥ ८ ॥ यावानयं वै पुरुषो यावत्या संस्थया मितः ॥ तावानसावपि महापुरुषो लोकसंस्थया ॥ ९ ॥ कौस्तुभव्यपदेशेन स्वात्मज्योतिर्बिभर्त्यजः ॥ तत्प्रभा व्यापिनी साक्षाच्छ्रीवत्समुरसा विभुः ॥ १० ॥ स्वमायां वनमालाख्यां नानागुणमयीं दधत् ॥ वासश्छन्दोमयं पीतं ब्रह्मसूत्रं त्रिवृत्स्वरम् ॥ ११ ॥ बिभर्ति सांख्यं योगं च देवो मकरकुण्डले ॥ मौलिं पदं पारमेष्ठ्यं सर्वलोकभयङ्करम् ॥ १२ ॥ अव्याकृतमनन्ताख्यमासनं यदधिष्ठितः ॥ धर्मज्ञानादिभिर्युक्तं सत्त्वं पद्ममिहोच्यते ॥ १३ ॥ ओजःसहोबलयुतं मुख्यतत्त्वं गदां दधत् ॥ अपांतत्त्वं दरवरं तेजस्तत्त्वं सुदर्शनम् ॥ १४ ॥ नभोनिभं नभस्तत्त्वमसिं चर्म तमोमयम् ॥ कालरूपं धनुः शार्ङ्गं तथा कर्ममयेषुधिम् ॥ १५ ॥ इन्द्रियाणि शरानाहुराकूतीरस्य स्यन्दनम् ॥ तन्मात्राण्यस्याभिव्यक्तिं मुद्रयार्थक्रियात्मताम् ॥ १६ ॥ मण्डलं देवयजनं दीक्षासंस्कार आत्मनः ॥ परिचर्या भगवत आत्मनो दुरितक्षयः ॥ १७ ॥ भगवान्भगशब्दार्थं लीलाकमलमुद्वहन् ॥ धर्मं यशश्च भगवांश्चामरव्यजनेऽभजत् ॥ १८ ॥ आतपत्रं तु वैकुण्ठं द्विजा धामाकुतोभयम् ॥ त्रिवृद्वेदः सुपर्णाख्यो यज्ञं वहति पूरुषम् ॥ १९ ॥ अनपायिनी भगवती श्रीः साक्षादात्मनो हरेः ॥ विष्वक्सेनस्तन्त्रमूर्तिर्विदितः पार्षदाधिपः ॥ नन्दादयोऽष्टौ द्वाःस्थाश्च तेऽणिमाद्या हरेर्गुणाः ॥२०॥ वासुदेवः सङ्कर्षणः प्रद्युम्नः पुरुषः स्वयम् ॥ अनिरुद्ध

मानसिक, ऐन्द्रियिक र शारीरिक शक्ति-युक्त प्राणतत्त्वरूपी गदा, जल तत्त्वरूपी शङ्ख, तेजस्तत्त्वरूपी सुदर्शन चक्र, आकाश झैं नीलवर्ण हुने आकाशतत्त्वरूपी खड्ग, अन्धकाररूपी चर्म अर्थात् ढाल, कालरूपी शार्ङ्ग धनुष एवं कर्मरूपी ठोक्रो धारण गरेका छन् ॥१४॥१५॥ त्यसै गरी इन्द्रियहरू उनका बाण, क्रियाशक्तियुक्त मन उनको रथ, तन्मात्राहरूलाई उनको रथको बाहिर देखिने भाग भन्दछन् । अभय आदि मुद्राहरू द्वारा उनको तदनुकूल क्रियाशीलताको वर्णन गर्ने गर्दछन् ॥१६॥ सूर्य अथवा अग्निमण्डललाई भगवान्‌को पूजनस्थान, चित्तको शुद्धिलाई मन्त्रदीक्षा र आफ्ना पापको नाश गर्नका लागि भगवान्‌को सेवा ठानोस् ॥१७॥ हे द्विज हो ! भगवान्‌ले 'भग' शब्दको अर्थलाई नै आफ्नू क्रीडा कमल बनाएका छन् । धर्म र यशको चमर र व्यजनरूपले तथा आफ्नू निर्भय धाम वैकुण्ठलाई उनले छत्ररूपले धारण गरिराखेका छन् । वेदत्रयरूपी गरुड ती यज्ञपुरुषलाई बोक्तछ ॥ १९ ॥

1432

॥१९॥ चिद्रूपी परमात्मा श्रीहरिको अविचलित शक्ति नै भगवती लक्ष्मी हुन् । भगवान्का पार्षदहरूको नाइके सर्वत्र विख्यात विष्वक्सेन, पाञ्चरात्र आगमरूप हुन् र अणिमादि आठ द्वारपाल कहिन्छन् ॥२०॥ हे ब्रह्मन् ! वासुदेव, संकर्षण, प्रद्युम्न, र अनिरुद्ध–यी चार मूर्तिले भगवान् स्वयं स्थित रहन्छन् । अतः ती चारव्यूहका रूपमा उपासना गरिनेयोग्य कहिएका छन् ॥ २१ ॥ तिनै विश्व, तैजस, प्राज्ञ र तुरीय–यी चार वृत्तिहरूद्वारा क्रमशः अर्थ अर्थात् बाह्य विषय, इन्द्रिय, आशय तथा ज्ञानरूपले ध्यानगम्य गरिन्छन् ॥ २२ ॥ यस प्रकार अङ्ग, उपाङ्ग, आयुध र आभूषणले युक्त चतुर्व्यूहरूपी षडैश्वर्य सम्पन्न भगवान् श्रीहरि चार स्वरूप धारण गर्दछन् ॥ २३ ॥ हे द्विजवरः ! ती भगवान् वेदका उत्पत्तिस्थान, स्वयं-प्रकाशशील र आफ्नु महिमाले परिपूर्ण रहन्छन् । ती आफ्नी मायाले ब्रह्मा, विष्णु र शिव—यी नामहरू धारण गरेर यस संसारको रचना, पालन र संहार गर्दछन् । कहिल्यै पनि

इति ब्रह्मन्मूर्तिव्यूहोऽभिधीयते ॥ २१ ॥ स विश्वस्तैजसः प्राज्ञस्तुरीय इति वृत्तिभिः ॥ अर्थेन्द्रियाशयज्ञानैर्भगवान्परिभाव्यते ॥२२॥ अङ्गोपाङ्गायुधाकल्पैर्भगवांस्तच्चतुष्टयम् ॥ बिभर्ति स्म चतुर्मूर्तिर्भगवान्हरिरीश्वरः ॥ २३ ॥ द्विजऋषभ स एष ब्रह्मयोनिः स्वयंदृक् स्वमहिमपरिपूर्णो मायया च स्वयैतत् ॥ सृजति हरति पातीत्याख्ययानावृताक्षो विवृत इव निरुक्तस्तत्परैरात्मलभ्यः ॥ २४ ॥ श्रीकृष्ण कृष्णसख वृष्ण्यृषभावनिध्रुग्राजन्यवंशदहनानपवर्गवीर्य ॥ गोविन्द गोपवनिताव्रजभृत्यगीततीर्थश्रवः श्रवणमङ्गल पाहि भृत्यान् ॥ २५ ॥ य इदं कल्य उत्थाय महापुरुषलक्षणम् ॥ तच्चित्तः प्रयतो जप्त्वा ब्रह्म वेद गुहाशयम् ॥ २६ ॥ शौनक उवाच ॥ शुको यदाह भगवान्विष्णुराताय शृण्वते ॥ सौरो गणो मासि मासि नाना वसति सप्तकः ॥ २७ ॥ तेषां नामानि कर्माणि संयुक्तानामधीश्वरैः ॥ ब्रूहि नः श्रद्दधानानां व्यूहं सूर्यात्मनो हरेः ॥ २८ ॥ सूत उवाच ॥ अनाद्य-

उनको ज्ञान आवृत्त हुन सक्तैन । यस्तो भएर पनि शास्त्रहरूमा भिन्न झैं उनका वर्णन गरिएको छ, तर सत्य यो हो–आफ्ना भक्तलाई ती आत्मस्वरूपले नै प्राप्त हुन्छन् ॥२४॥ हे श्रीकृष्ण ! हे अर्जुनका सखा ! हे वृष्णिश्रेष्ठ ! हे पृथिवीका भारस्वरूप भूपालहरूका समस्त वंश भस्म पार्ने ! हे अक्षुण्ण-पराक्रमी ! हे गोविन्द ! हे गोपाङ्गनाका समूह तथा नारदादि भक्तगणद्वारा कीर्तित उज्ज्वल यश हुने गोपाल ! हे श्रवणमङ्गल ! हजुर हामी सेवकका रक्षा गर्नोस् ॥२५॥ हे शौनक ! प्रातः उठेर जो व्यक्ति स्नानादिले पवित्र भई प्रभुमा चित्त लगाएर परमपुरुष परमात्माका यो स्वरूपको वर्णन तथा जप गर्छ, त्यो सहजे आफ्नु अन्तःकरणमा विराजमान परब्रह्मको ज्ञान प्राप्त गर्नेछ ॥ २६ ॥ यति सुनिसकेर शौनकजी भन्नलागे–हे सूतजी ! राजा परीक्षितलाई कथा सुनाउँदा र उनले सुन्दा श्रीशुकदेवले जुन पंचम स्कन्धमा प्रत्येक महिनामा बदलिने सूर्यनारायण, ऋषि, गन्धर्व, नाग, अप्सरा, यक्ष,

---

* दृष्टान्त ( प्रभुले जोगाए ) राँका कुम्हालेको भगवान्मा बलियो विश्वास थियो । एकपल्ट उसले काँचा भाँडा पकाउन भट्टी तयार पार्‍यो । राती बिरालाले त्यसैमा बच्चा जन्माई र बच्चा त्यहीं छाडेर हिंडी । राँकालाई त्यो कुरा थाहा थिएन । उसले भट्टीमा आगो लगाइदियो । भाँडा पाकेर भट्ठी सेलाएपछि बिराली आई र भट्ठीको चारैतिर घुम्दै रुन लागी । राँकाले विचार गर्‍यो—'बिरालीका बच्चा दढिसके होलान् !' त्यो निर्के पछिलो गर्न थाल्यो । यदि उसको घरै डढेको भए पनि त्यति धेरै पछिलो नगर्दो हो । उसले भगवान्लाई स्मरण गर्‍यो र भन्यो–'हे भगवन् ! तिमी नै मेरा सर्वस्व हौ । मलाई यसबाट जोगाऊ !'–यति भनेर ऊ भगवानको ध्यान गरेर बसिरह्यो । भोलि पल्ट पाकेका भाँडा झिक्न लाग्दा उसले प्रत्यक्ष देख्यो—थोरै भाँडो काँचै रहेको छ र त्यसमा बिरालाका बच्चा म्याउँ म्याउँ गरिरहेका थिए । त्यो देखेर त्यो गद्‌गद् भयो र त्यसै बेलादेखि भगवान्को अनन्य भक्त बन्यो ।

1433

राक्षस तथा देवताका सात-सातका गण कहिएका थिए, अतः कालाध्ना स्वामी अर्थात् सूर्यसहित ती सबैका नाम र कर्म हामीलाई भन्नुहवस् किनकि हामीलाई सूर्यको स्वरूप तथा श्री हरिको व्यूहको वर्णन सुन्ने उत्कट अभिलाषा छ ॥२७॥२८॥ अनि सूतजी भन्दछन्—सबै देहधारीहरूका आत्मा भगवान् विष्णुकी अनादि अविद्याद्वारा रचित लोकहरूको व्यवहारमा प्रवृत्त पार्न सूर्य सबै लोकमा घुमिरहन्छन् ॥२९॥ सबै लोकका आत्मा तथा आदिकर्ता एकमात्र श्रीहरि नै सूर्य हुन् । समस्त वैदिक क्रियाका मूल हुनाले ऋषिहरूले उनको नै गुण अनेक प्रकारबाट गान गरेका छन् ॥ ३० ॥ हे ब्रह्मन् ! ती प्रभुको उपाधिले गर्दा नै काल, देश, क्रिया अर्थात् यज्ञादिको अनुष्ठान कर्ता, कारण, स्रगादि धर्म, योगादि वेदमन्त्र, द्रव्य र व्रीहि आदि फलरूपले नौ थरिका वर्णन गरिसकेका छन् ।।३१॥ ती कालरूपधारी सूर्यनारायण लोकयात्राको प्रवृत्तिका निम्ति चैत्रादि बाह्र महीनामा आफ्ना भिन्न-भिन्न बाह्र गणसित घुम्दछन् ॥ ३२ ॥ हे शौनक ! धाता नामका सूर्य, कृतस्थली नामकी अप्सरा, हेति नामकराक्षस, वासुकि नामक सर्प,रथकृत् नामक यक्ष, पुलस्त्य ऋषि र तुम्बुरु नामका

विद्यया विष्णोरात्मनः सर्वदेहिनाम् ॥ निर्मितो लोकतन्त्रोऽयं लोकेषु परिवर्तते ॥ २९ ॥ एक एव हि लोकानां सूर्य आत्मादिकृद्धरिः ॥ सर्व
वेदक्रियामूलमृषिभिर्बहुधोदितः ॥ ३० ॥ कालो देशः क्रिया कर्ता करणं कार्यमागमः ॥ द्रव्यं फलमिति ब्रह्मन्नवधोक्तोऽजया हरिः ॥ ३१ ॥
मध्वादिषु द्वादशसु भगवान्कालरूपधृक् ॥ लोकतन्त्राय चरति पृथग्द्वादशभिर्गणैः ॥ ३२ ॥ धाता कृतस्थली हेतिर्वासुकी रथकृन्मुने ॥ पुलस्त्य
स्तुम्बुरुरिति मधुमासं नयन्त्यमी ॥३३॥ अर्यमा पुलहोथौजाः प्रहेतिः प्रहेतिः पुञ्जिकस्थली ॥ नारदः कच्छनीरश्च नयन्त्येते स्म माधवम् ॥ ३४ ॥
मित्रोऽत्रिः पौरुषेयोऽथ तक्षको मेनका हहाः ॥ रथस्वन इति ह्येते शुक्रमासं नयन्त्यमी ॥ ३५ ॥ वसिष्ठो वरुणो रम्भा सहजन्यस्तथा हुहूः ॥ शुक्र-
श्चित्रस्वनश्चैव शुचिमासं नयन्त्यमी ॥ ३६ ॥ इन्द्रो विश्वावसुः श्रोता एलापत्रस्तथाङ्गिराः ॥ प्रम्लोचा राक्षसो वर्यो नभो मासं नयन्त्यमी ॥ ३७ ॥
विवस्वानुग्रसेनश्च व्याघ्र आसारणो भृगुः ॥ अनुम्लोचा शङ्खपालो नभस्याख्यं नयन्त्यमी ॥ ३८ ॥ पूषा धनञ्जयो वातः सुषेणः सुरुचिस्तथा ॥
घृताची गौतमश्चेति तमोमासं नयन्त्यमी ॥ ३९ ॥ ऋतुर्वर्चा भरद्वाजः पर्जन्यः सेनजित्तथा ॥ विश्व ऐरावतश्चैव तपस्याख्यं नयन्त्यमी ॥ ४० ॥

गन्धर्व—यी आफ्ना काम गर्दै चैत्रमहीना बिताउँछन् ।।३३॥ यसै गरी अर्यमा सूर्य, पुलह ऋषि, अथौजा यक्ष, प्रहेति राक्षस, पुञ्जिकस्थली अप्सरा, नारद गन्धर्व र कच्छनीर सर्प—यी आफ्ना-आफ्ना काममा तत्पर रहँदै वैशाख महीना बिताउँदछन् ।।३४॥ मित्र नामका सूर्य, अत्रि ऋषि, पौरुषेय राक्षस, तक्षक सर्प, मेनका नाम्नी अप्सरा, हाहा गन्धर्व र रथस्वन नामका यक्ष ज्येष्ठ महीना बिताउँछन् ॥३५॥ वसिष्ठ ऋषि, वरुण नामका सूर्य, रम्भा अप्सरा, सहजन्य यक्ष, हूहू गन्धर्व, शुक्र नाग तथा चित्रस्वन राक्षस—यी सबै आषाढ महीना व्यतीत गर्दछन् ॥३६॥ इन्द्र नामका सूर्य, विश्वावसु गन्धर्व, श्रोता यक्ष, एलापत्र नाग, अङ्गिरा ऋषि अनुम्लोचा अप्सरा र वर्य राक्षस—यी श्रावण महीना बिताउँछन्॥३७॥ यसै गरी विवस्वान् नामका सूर्य, उग्रसेन गन्धर्व, व्याघ्र राक्षस, असारण यक्ष, भृगु ऋषि, प्रम्लोचा अप्सरा र शङ्खपाल नाग भाद्रपद महीना व्यतीत गर्दछन् ॥३८॥ त्यसै गरी पूषा नामका सूर्य, धनञ्जय नाग वात राक्षस सुषेण गन्धर्व, सुरुचि यक्ष, घृताची अप्सरा, र गौतम ऋषि माघ महीना व्यतीत गर्दछन् ॥३९॥ ऋतु नामक यक्ष, वर्चा राक्षस, भरद्वाज ऋषि, पर्जन्य सूर्य र सेनजित्

1434

नामकी अप्सरा, विश्व गन्धर्व र ऐरावत नाग—यी फाल्गुन महीना व्यतीत गर्दछन् ॥ ४० ॥ अंशु नामका सूर्य, कश्यप ऋषि, तार्क्ष्य यक्ष, ऋतसेन गन्धर्व, उर्वशी अप्सरा, विद्युच्छत्रु राक्षस र महाशङ्ख नाग मार्गशीर्ष महीनाको निर्वाह गर्दछन् ॥४१॥ भग नामका सूर्य, स्फूर्ज राक्षस, अरिष्टनेमि गन्धर्व, ऊर्ण यक्ष, आयु ऋषि, कर्कोटक नाग र पूर्वचित्ति अप्सरा-यी पौष महीना बिताउँछन् ॥ ४२ ॥ त्यसै गरी त्वष्टा नामका सूर्य, जमदग्नि ऋषि, कम्बल नाग, तिलोत्तमा अप्सरा, ब्रह्मापेत राक्षस, शतजित् यक्ष र धृतराष्ट्र गन्धर्व आश्विन मासको अन्त्य पार्दछन् ॥ ४३ ॥ विष्णु नामका सूर्य, अश्वतर नाग, रम्भा अप्सरा, सूर्यवर्चा गन्धर्व, सत्यजित् यक्ष, विश्वामित्र ऋषि र मखापेत राक्षस—यी कार्तिक महीना व्यतीत गर्दछन्

अथांशुः कश्यपस्तार्क्ष्य ऋतसेनस्तथोर्वशी ॥ विद्युच्छत्रुर्महाशङ्खः सहोमासं नयन्त्यमी ॥ ४१ ॥ भगः स्फूर्जोऽरिष्टनेमिरूर्ण आयुश्च पञ्चमः ॥ कर्कोटकः पूर्वचित्तिः पुष्यमासं नयन्त्यमी ॥ ४२ ॥ त्वष्टा ऋचीकतनयः कम्बलश्च तिलोत्तमा ॥ ब्रह्मापेतोऽथ शतजिद्धृतराष्ट्र इषम्भराः ॥ ४३॥ विष्णुरश्वतरो रम्भा सूर्यवर्चाश्च सत्यजित् ॥ विश्वामित्रो मखापेत ऊर्जमासं नयन्त्यमी ॥ ४४ ॥ एता भगवतो विष्णोरादित्यस्य विभूतयः ॥ स्मरतां सन्ध्ययोर्नृणां हरन्त्यंहो दिने दिने ॥ ४५ ॥ द्वादशस्वपि मासेषु देवोऽसौ षड्भिरस्य वै ॥ चरन्समन्तात्तनुते परत्रेह च सन्मतिम् ॥४६॥ सामर्ग्यजुर्भिस्तल्लिङ्गैर्ऋषयः संस्तुवन्त्यमुम् ॥ गन्धर्वास्तं प्रगायन्ति नृत्यन्त्यप्सरसोऽग्रतः ॥ ४७ ॥ उन्नह्यन्ति रथं नागा ग्रामण्यो रथयोजकाः ॥ चोदयन्ति रथं पृष्ठे नैर्ऋताः बलशालिनः ॥ ४८ ॥ बालखिल्याः सहस्राणि षष्टिर्ब्रह्मर्षयोऽमलाः ॥ पुरतोऽभिमुखं यान्ति स्तुवन्ति स्तुतिभि·

॥४४॥ हे मुने ! यी सूर्यरूपी भगवान् विष्णुका विभूति कहिएका छन् । यी प्रतिदिन दुवै सन्ध्याका वेला आफ्नू स्मरण गर्ने पुरुषहरूलाई सबै पाप नष्ट पारेर मुक्तिदिन्छन् ॥४५॥ यी सूर्यदेव आफ्ना छ गणका साथै बान्है महीनामा सधैं डुल्दै यो लोक र परलोकमा सुमतिको विस्तार गर्दछन् ॥४६॥ सबै ऋषि,सूर्यको प्रतिपादिका साम,ऋक् र यजुर्वेदका श्रुतिहरूद्वारा यिनको स्तुति गर्दछन् । गन्धर्व तिनका सुयश गान र अप्सरागण उनका सामुन्ने नाच्दछन् ॥४७॥ नागगण रथलाई बेसरी बाँद्छन्, यक्ष रथमा साज लगाउँछन् र बलशाली राक्षस रथलाई पछाडिबाट घुचेट्छन् ॥४८॥ बालखिल्य नामक साठी हजार स्वच्छ स्वभाव हुने ब्रह्मर्षि सूर्यका अभिमुख भएर उनका अघि-अघि हिंड्दछन् । र स्तोत्रद्वारा *सर्वद्रष्टाको स्तुति

* दृष्टान्त ( ईश्वरलाई सर्वद्रष्टा जानेर व्यक्तिले पापबाट जोगिनु-थोरा गुरुकहाँ तीन जना गए र प्रार्थना गरे-महाराज ! हामीलाई धर्मको उपदेश दिनुहवस् । गुरुले तीनै जनालाई मारेले भने।ो एक एक चरा दिएर भने—जाओ, यो चरा कसैले पनि नदेख्ने स्थानमा मारेर आओ, अनि तिमीहरूलाई धर्मको उपदेश दिनेछु ।' तीनैजना आफ्नू आफ्नू चरा लिएर त्यहाँबाट हिंडे। पहिलो मानिस फर्कर आयो । गुरुले सोधे-तिमीले आफ्नू चरा कहाँ फुटायौ ? उसले भन्यो-'महाराज ! म हजुरको कुटी पछाडि गएँ, त्यहाँ यता उता कोही पनि देखिएन । अतः मैले त्यहीं चरा फुटाइदिएँ ।' त्यतिमै अर्को मानिस पनि आइपुग्यो । त्योसित गुरुले सोधे-'तिमीले आफ्नू चरा कहाँ फुटायौ ?' त्यसले उत्तर दियो—म यहाँबाट थोरा जङ्गलमा गएँ । थोरा कुममनि बसेर यता उता हेरें, मनुष्यको के कुरा, त्यहाँ कुनै जीव-जन्तु पनि देखिएन, अतः मैले त्यहीं आफ्नू चरा फुटालें ।' तिनै बेरपछि तेस्रो मानिस पनि फर्कर आयो तर त्यो आफ्नू चरा हातमा लिएर आएको थियो । गुरुले सोधे—'तिमीले आफ्नू चरा किन फोरेनौ ?' उसले भन्यो-'महाराज ! गहन वनमा, निर्जन जङ्गलमा, गहीरो घाटीमा जता तर्ता म भौंतारिंदैरहें तर मैले कहीं पनि यस्तो स्थान पाइन, जहाँ ईश्वर नहोउन्हुँदैको होस् । त्यसैले आफ्नू चरा फोर्न सकिन ।' गुरुले भने-'सत्य हो। यस्तो कुनै स्थान छैन जहाँ ईश्वर नहोस् । मनुष्य पाप गर्ने वेलामा विचार गर्दछ मैले यो काम गरेको कसैले पनि देखिरहेको छैन, तर यो उसको भूल हो यो सबैको पाप पुण्यका फलदाता छन् ती ईश्वर सबै कुरा देखदछन्, अबले नदेखेर के काम ? ' गुरुले तेस्रो व्यक्तिलाई रोजेर अब दुबैलाई धपाइदिए-र भने अहिले तिमी दुबै धर्मका अधिकारी छैनौ ।' ईश्वर सर्वव्यापक छ भनेर पाप कहिल्यै नगर्नु ।

1435

गर्दछन् ॥४९॥ यसरी आदि-अन्त्य विहीन र अजन्मा भगवान् कल्प-कल्पमा स्वयं आफ्नू विभाग गरेर लोकको पालन गर्दछन्॥५०॥इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायामेकादशोऽध्यायः ॥११॥ (श्रीमद्भागवतोक्त विषयको संक्षिप्त अनुक्रमणिका )—सूतजी भन्दछन्–हरिभक्तिरूपी महामहिम धर्मलाई नमस्कार छ। ती जगत् कर्ता भगवान् लाई पनि नमस्कार छ। अब म ब्राह्मणहरूलाई नमस्कार गरेर सनातन धर्म भन्दछु ॥१॥ हे विप्र हो ! तपाईहरूले मसित जति सोध्नु भएको थियो, तदनुसार मैले भगवान्‌कोम नुष्यका पुरुषार्थ साधनस्वरूप यो अद्भुत चरित्र सुनाएँ ॥२॥ यसमा सबै पाप निवारण गर्ने, इन्द्रियहरूका रचयिता, भक्त प्रतिपालक, साक्षात् भगवान् नारायण हरिको संकीर्तन गरिएको छ ॥३॥ अब प्रथम स्कन्धको विषयमा विस्तार गर्दै भन्दछन्–यस स्कन्धमा संसारको उत्पत्ति र प्रलयको स्थान निर्गुण परब्रह्म तथा इनको साक्षात्कार गराउने अपरोक्ष ज्ञानसहित तत्त्व-ज्ञानको निरूपण वर्णन गरिएको छ। उसको आश्रित वैराग्य र परीक्षितको कथा एवं नारदाख्यानको वर्णन गरिएको छ ॥४॥५॥ त्यसपछि ब्राह्मणको श्रापले गर्दा राजर्षि परीक्षित् र

विभुम् ॥ ४९ ॥ एवं ह्यनादिनिधनो भगवान्हरिरीश्वरः ॥ कल्पे कल्पे स्वमात्मानं व्यूह्य लोकानवत्यजः ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे आदित्यव्यूहविवरणं नामैकादशोऽध्यायः ॥ ११ ॥ सूत उवाच ॥ नमो धर्माय महते नमः कृष्णाय वेधसे ॥ ब्राह्मणेभ्यो नमस्कृत्य धर्मान्वक्ष्ये सनातनान् ॥ १ ॥ एतद्वः कथितं विप्रा विष्णोश्चरितमद्भुतम् ॥ भवद्भिर्यदहं पृष्टो नराणां पुरुषोचितम् ॥ २ ॥ अत्र सङ्कीर्तितः साक्षात्सर्वपापहरो हरिः ॥ नारायणो हृषीकेशो भगवान् सात्वतां पतिः ॥ ३ ॥ अत्र ब्रह्म परं गुह्यं जगतः प्रभवाप्ययम् ॥ ज्ञानं च तदुपाख्यानं प्रोक्तं विज्ञानसंयुतम् ॥ ४ ॥ भक्तियोगः समाख्यातो वैराग्यं धनदाश्रयम् ॥ पारीक्षितमुपाख्यानं नारदाख्यानमेव च ॥ ५ ॥ प्रायोपवेशो राजर्षेर्विप्रशापात्परीक्षितः ॥ शुकस्य ब्रह्मर्षभस्य संवादश्च परीक्षितः ॥ ६ ॥ योगधारणयोत्क्रान्तिः संवादो नारदाजयोः ॥ अवतारानुगीतं च सर्गः प्राधानिकोऽग्रतः ॥ ७ ॥ विदुरोद्धवसंवादः क्षत्तृमैत्रेययोस्ततः ॥ पुराणसंहिताप्रश्नो महापुरुषसंस्थितिः ॥ ८ ॥ ततः प्राकृतिकः सर्गः सप्त वैकृतिकाश्च ये ॥ ततो ब्रह्माण्डसम्भूतिर्वैराजः पुरुषो यतः ॥ ९ ॥ कालस्य स्थूलसूक्ष्मस्य गतिः पद्मसमुद्भवः ॥ भुवः उद्धरणेऽम्भोधेर्हिरण्याक्षवधो

ब्रह्मर्षि-श्रेष्ठ शुकदेवजीको संवाद वर्णित छ ॥६॥ दोस्रो स्कन्धमा योगधारण द्वारा ऊर्ध्वलोकहरूको प्राप्ति, नारद तथा ब्रह्माजीको संवाद, अवतारका चरित्र र महदादि क्रमको अनुसार प्रधानबाट उत्पन्न सृष्टिको वर्णन गरिएको छ॥७॥तृतीय स्कन्धमा विदुर र उद्धवको संवाद, फेरि विदुर र मैत्रेयको संवाद, पुराण-संहिताको विषयमा प्रश्न, प्रलयकालमा परमात्माको स्थिति ॥८॥ गुणक्षोभरूपी प्राकृत सर्ग, महत्तत्त्वादि सात विकृति, तीबाट उत्पन्न सृष्टि र जसमा विराट्पुरुष व्याप्त छ, त्यो ब्रह्माण्डको उत्पत्तिको विषयमा वर्णन छ ॥९॥ स्थूल-सूक्ष्म कालको रूप, पद्मको उत्पत्ति, पृथ्वीलाई समुद्रबाट निकाल्दा जसरी हिरण्याक्षको वध गरिएको थियो, त्यो वृत्तान्त, ऊर्ध्व अर्थात् देवता, तिर्यक् अर्थात् पशु-पक्षी आदि र अवाक्-स्रोत अर्थात् मनुष्यहरूको उत्पत्ति, रुद्रगण र जसद्वारा स्वायम्भुव मनु र स्त्रीहरूकी अत्युत्तम आद्या प्रकृति शतरूपाको जन्म भएको थियो–त्यो अर्धनारीश्वरको उत्पत्ति, कर्दम प्रजापतिको चरित्र, उनीद्वारा मुनिहरूका धर्मपत्नी आदिको जन्म, महात्मा कपिलको अवतार, मतिमान् कपिल तथा देवहूतिको संवाद र मरीचि आदि प्रजापतिहरूको उत्पत्ति, दक्षप्रजापतिको

यज्ञ विध्वंस, ध्रुव-चरित्र, पृथु र प्राचीनबर्हिषको कथा र नारदको संवाद, यो विषय चतुर्थस्कन्धमा कहिएका छन् । प्रियव्रतको उपाख्यान, नाभि, ऋषभ र भरतको चरित्र, द्वीप, वर्ष, समुद्र, पर्वत तथा नदीहरूको वर्णन, ज्योतिश्चक्रको विस्तार र पाताल तथा नरको स्थिति–यी सबै विषय पंचम स्कन्धका हुन् ॥१०-१६॥ हे विप्र हो ! षष्ठस्कन्धमा प्रचेताहरूद्वारा दक्षको जन्म, तिनका छोरीका सन्तति, तीबाट देवता, असुर, मनुष्य, तिर्यक्, पर्वत र पक्षी आदिको जन्म, वृत्रासुरको जन्म र निधनको वृत्तान्त वर्णित छ । सप्तमस्कन्धमा दितिका पुत्र हिरण्यकशिपु र हिरण्याक्ष तथा दैत्यराज महात्मा प्रह्लादको चरित्र वर्णित छ ॥१७॥१८॥ अष्टम स्कन्धमा चौद्ध मन्वन्तरको कथा, गजेन्द्रको मुक्ति, विभिन्न मन्वन्तरहरूमा हुने उनै

यथा ॥ १० ॥ ऊर्ध्वतिर्यगवाक्सर्गो रुद्रसर्गस्तथैव च ॥ अर्धनारीनरस्याथ यतः स्वायम्भुवो मनुः ॥ ११ ॥ शतरूपा च या स्त्रीणामाद्या प्रकृतिरुत्तमा ॥ सन्तानो धर्मपत्नीनां कर्दमस्य प्रजापतेः ॥१२॥ अवतारो भगवतः कपिलस्य महात्मनः ॥ देवहूत्याश्च संवादः कपिलेन च धीमता ॥१३॥ नवब्रह्मसमुत्पत्तिर्दक्षयज्ञविनाशनम् ॥ ध्रुवस्य चरितं पश्चात्पृथोः प्राचीनबर्हिषः ॥ १४ ॥ नारदस्य च संवादस्ततः प्रैयव्रतं द्विजाः ॥ नाभेस्ततोऽनुचरितमृषभस्य भरतस्य च ॥ १५ ॥ द्वीपवर्षसमुद्राणां गिरिनद्युपवर्णनम् ॥ ज्योतिश्चक्रस्य संस्थानं पातालनरकस्थितिः ॥ १६ ॥ दक्षजन्म प्रचेतोभ्यस्तत्पुत्रीणां च सन्ततिः ॥ यतो देवासुरनरास्तिर्यङ्नगखगादयः ॥ १७ ॥ त्वाष्ट्रस्य जन्म निधनं पुत्रयोश्चादितेर्द्विजाः ॥ दैत्येश्वरस्य चरितं प्रह्लादस्य महात्मनः ॥ १८ ॥ मन्वन्तरानुकथनं गजेन्द्रस्य विमोक्षणम् ॥ मन्वन्तरावताराश्च विष्णोर्हयशिरादयः ॥ १९ ॥ कौर्मं धान्वन्तरं मात्स्यं वामनं च जगत्पतेः ॥ क्षीरोदमथनं तद्वदमृतार्थे दिवौकसाम् ॥ २० ॥ देवासुरमहायुद्धं राजवंशानुकीर्तनम् ॥ इक्ष्वाकुजन्म तद्वंशः सुद्युम्नस्य महात्मनः ॥ २१ ॥ इलोपाख्यानमत्रोक्तं तारोपाख्यानमेव च ॥ सूर्यवंशानुकथनं शशादाद्या नृगादयः ॥ २२ ॥ सौकन्यं चाथ शर्यातेः ककुत्स्थस्य च धीमतः ॥ खट्वाङ्गस्य च मान्धातुः सौभरेः सगरस्य च ॥ २३ ॥ रामस्य कोसलेन्द्रस्य चरितं किल्बिषापहम् ॥ निमेरङ्गपरित्यागो जनकानां च सम्भवः ॥ २४ ॥ रामस्य भार्गवेन्द्रस्य निःक्षत्रकरणं भुवः ॥ ऐलस्य सोमवंशस्य ययातेर्नहुषस्य च ॥ २५ ॥ दौष्यन्तेर्भरतस्यापि शन्तनोस्तत्सुतस्य च ॥ ययातेर्ज्येष्ठपुत्रस्य यदोर्वंशोऽनुकीर्तितः ॥ २६ ॥ यत्रावतीर्णो भगवान्कृष्णाख्यो जगदीश्वरः ॥ वसुदेवगृहे जन्म ततो

जगत्पति भगवान् विष्णुको कूर्म,मत्स्य, नृसिंह, वामन तथा हयग्रीव आदि अवतार,अमृत पानका लागि देवताहरू र दैत्यद्वारा समुद्र-मन्थन तथा देवासुर संग्राम वर्णितछ । नवमस्कन्धमा राजवंशको वर्णन, इक्ष्वाकुको जन्म, उनको वंश, महात्मा सुद्युम्नको चरित्र र इला तथा ताराको चरित्र कहिएको छ । यसैमा सूर्यवंशको वृत्तान्त, शशाद र नृगादिराजाहरूको वर्णन, सुकन्याको चरित्र, शर्याति, ककुत्स्थ, खट्वाङ्ग, मान्धाता, सौभरि, सगर र कोसलेन्द्र भगवान् रामको चरित्र वर्णित छ । त्यसपछि निमिको देहत्याग, जनकहरूको उत्पत्ति ॥१९-२४। परशुरामको पृथ्वीलाई क्षत्रिय विहीन पार्नु, चन्द्रवंशमा उत्पन्न पुरुरवा, ययाति, नहुष, भरत, शन्तनु तथा उनका छोरा भीष्मको वृत्तान्त वर्णन गरिएको छ । यसैमा ययातिका पुत्र

यदुका वंशको पनि वृत्तान्त वर्णित छ । जसमा भगवान् जगदीश्वर 'कृष्ण' नामले अवतीर्ण भएर वसुदेवको घरमा जन्म लिई गोकुलमा बढेका थिए॥२५-२७॥दशौंस्कन्धमा असुरहरूका वैरी भगवान् कृष्णका अपार कर्म वर्णित छन् । पूतनाको प्राणरूपी दूध पिउनु, शैशवकालमैं गाडा पल्टाउनु ॥२८॥ तृणावर्तलाई धूलो पार्नु, बकासुर, वत्सासुर तथा सबै बन्धुहरू समेत धेनुकासुर, प्रलम्बासुरलाई मार्नु ॥२९॥ चारैतिरबाट छोप्दै आएको दावानलबाट गोपको रक्षा गर्नु, कालियनागको दमन गर्नु,नन्दलाई अजिङ्गरको मुखबाट छुटाउनु ॥३०॥ गोपकन्याहरूको कात्यायनी व्रत, तिनको यम-नियमादि देखेर अच्युत प्रसन्न हुनु, यज्ञपत्नीहरूमा भगवान्को कृपा हुनु र ब्राह्मणहरूको पश्चात्ताप वर्णित छ ॥३१॥ गोवर्धनोद्धार, इन्द्र र कामधेनुद्वारा गरिएको श्रीकृष्णको पूजन, अभिषेक तथा रात्रिमा गोपाङ्गनाहरूसित रासक्रीडाको वर्णन छ ॥३२॥ फेरि दुर्बुद्धि शङ्खचूड, अरिष्टासुर, केशीको वध, अक्रूरको व्रजमा आगमन,

वृद्धिश्च गोकुले ॥ २७ ॥ तस्य कर्माण्यपाराणि कीर्तितान्यसुरद्विषः ॥ पूतनासुपयःपानं शकटोच्चाटनं शिशोः ॥ २८ ॥ तृणावर्तस्य निष्पेषस्तथैव बकवत्सयोः ॥ धेनुकस्य सहभ्रातुः प्रलम्बस्य च संक्षयः ॥ २९ ॥ गोपानां च परित्राणं दावाग्नेः परिसर्पतः ॥ दमनं कालियस्याहेर्महाहेर्नन्दमोक्षणम् ॥ ३० ॥ व्रतचर्या तु कन्यानां यत्र तुष्टोऽच्युतो व्रतैः ॥ प्रसादो यज्ञपत्नीभ्यो विप्राणां चानुतापनम् ॥ ३१ ॥ गोवर्धनोद्धरणं च शक्रस्य सुरभेरथ ॥ यज्ञाभिषेकं कृष्णस्य स्त्रीभिः क्रीडा च रात्रिषु ॥ ३२ ॥ शङ्खचूडस्य दुर्बुद्धेर्वधोऽरिष्टस्य केशिनः ॥ अक्रूरागमनं पश्चात्प्रस्थानं रामकृष्णयोः ॥ ३३ ॥ व्रजस्त्रीणां विलापश्च मथुरालोकनं ततः ॥ गजमुष्टिकचाणूरकंसादीनां च यो वधः ॥ ३४ ॥ मृतस्यानयनं सूनोः पुनः सान्दीपनेर्गुरोः ॥ मथुरायां निवसता यदुचक्रस्य यत्प्रियम् ॥ कृतमुद्धवरामाभ्यां युतेन हरिणा द्विजाः ॥ ३५ ॥ जरासन्धसमानीतसैन्यस्य बहुशो वधः ॥ घातनं यवनेन्द्रस्य कुशस्थल्या निवेशनम् ॥ ३६ ॥ आदानं पारिजातस्य सुधर्मायाः सुरालयात् ॥ रुक्मिण्या हरणं युद्धे प्रमथ्य द्विषतो हरेः ॥ ३७ ॥ हरस्य जृम्भणं युद्धे बाणस्य भुजकृन्तनम् ॥ प्राग्ज्योतिषपतिं हत्वा कन्यानां हरणं च यत् ॥ ३८ ॥ चैद्यपौण्ड्रकशाल्वानां दन्तवक्त्रस्य दुर्मतेः ॥ शम्बरो द्विविदः पीठो मुरः पञ्चजनादयः ॥ ३९ ॥ माहात्म्यं च वधस्तेषां वाराणस्याश्च दाहनम् ॥ भारावतरणं भूमेर्निमित्तीकृत्य पाण्डवान् ॥ ४० ॥ विप्रशापापदेशेन संहारः स्वकुलस्य च ॥ उद्धवस्य च संवादो वासुदेवस्य चाद्भुतः ॥ ४१ । यत्रात्मविद्या ह्यखिला

बलराम र श्रीकृष्णको मथुरा प्रस्थान ॥३३॥ व्रजका गोपिनीहरूको विलाप, भगवान् द्वारा मथुरा नगरीको अवलोकन कुवलयापीड हात्ती, मुष्टिक र चाणूरादि मल्ल तथा कंसको संहार र गुरु सान्दीपिनिका मृत-पुत्रलाई यमलोकबाट लिएर आएको वृत्तान्त वर्णित छ ॥ ३४ ॥ हे द्विजगण हो ! मथुरामा बस्ता उद्धव र बलरामसित भगवान्ले यदुवंशको जुन-जुन प्रिय कार्य गरेका थिए, त्यो सबै वर्णित छ ॥३५॥ अनि जरासन्धका सेनाको अनेक पल्ट संहार, कालयवनलाई मार्न लाउनु, द्वारकापुरीको निर्माण ॥३६॥ स्वर्गबाट कल्पवृक्ष र सुधर्मासभा ल्याउनु, युद्धमा शत्रुहरूलाई मारेर श्रीकृष्णले रुक्मिणीलाई हर्नु ॥३७॥ उषाहरणको अवसरमा संग्राममा महादेवले 'हाई' गर्नलाउनु र बाणासुरका भुजाहरू वृक्षका हांगाझैं छिमलिदिनु, प्राग्ज्योतिषपुरको स्वामी भौमासुरलाई मारेर सोह्र हजार कन्याहरू हरेर ल्याउनु ।३८॥ शिशुपाल, पौण्ड्रक, शाल्व तथा दुर्बुद्धि दन्तवक्त्र, शम्बरासुर, द्विविद, पीठ, मुर तथा पञ्चजन

आदि असुरहरूको प्रभाव र तिनको संहार, काशीलाई पोल्नु र पाण्डवलाई निमित्त बनाएर पृथ्वीको भारी टार्नु—यी विषय दशमस्कन्धमा वर्णित छन् ॥३९॥४०॥ एकादशस्कन्धमा विप्रशापको निहुँले आफ्नू कुलको संहार गराउनु, भगवान् कृष्ण र उद्धवको अत्यन्त अद्भुत संवाद वर्णित छ ॥४१॥ यसमा सारा आत्मविद्या र धर्मका निर्णयको निरूपण गरिएको छ। फेरि आफ्नू योगबलले भगवान्ले यो मर्त्यलोक त्यागेको वर्णन छ ॥४२॥ द्वादश स्कन्धमा युगका लक्षण, तिनको अनुसार कलियुगमा मानिसको विपरीत गति, चारथरिको प्रलय, प्राकृतिकी, नैमित्तिकी तथा नित्या—यी तीन थरिको उत्पत्ति हुन्छ ॥४३॥ राजर्षि परीक्षित्‌को देहत्याग, व्यासजी द्वारा गरिएको वैदिक शाखाहरूको विस्तार, मार्कण्डेयजीको प्रलय-दर्शनसम्बन्धी कथा, परमात्माका अङ्गोपाङ्गको कल्पना तथा जगदात्मा सूर्यनारायणको व्यूह आदिको वर्णन छ ॥ ४४ ॥ हे द्विजश्रेष्ठ ! हजुरहरूले मसित जे सोध्नुभयो, त्यो सबै मैले सुनाएँ। यस प्रश्नोत्तरमा भगवान्का सबै लीलावतारमा गरिएका कर्मको नै कीर्तन गरिएको छ ॥४५॥ कुनै पनि मनुष्य लड्दा, ठक्कर खाँदा, कष्टले पीडित हुँदा अथवा हाई गर्दा

प्रोक्ता धर्मविनिर्णयः ॥ ततो मर्त्यपरित्याग आत्मयोगानुभावतः ॥ ४२ ॥ युगलक्षणवृत्तिश्च कलौ नृणामुपप्लवः ॥ चतुर्विधश्च प्रलय उत्पत्तिस्त्रिविधा तथा ॥ ४३ ॥ देहत्यागश्च राजर्षेर्विष्णुरातस्य धीमतः ॥ शाखाप्रणयनमृषेर्मार्कण्डेयस्य सत्कथा ॥ महापुरुषविन्यासः सूर्यस्य जगदात्मनः ॥ ४४ ॥ इति चोक्तं द्विजश्रेष्ठा यत्पृष्टोऽहमिहास्मि वः ॥ लीलावतारकर्माणि कीर्तितानीह सर्वशः ॥ ४५ ॥ पतितः स्खलितश्चार्तः क्षुत्वा वा विवशो ब्रुवन् ॥ हरये नम इत्युच्चैर्मुच्यते सर्वपातकात् ॥ ४६ ॥ सङ्कीर्त्यमानो भगवाननन्तः श्रुतानुभावो व्यसनं हि पुंसाम् ॥ प्रविश्य चित्तं विधुनोत्यशेषं यथा तमोऽर्कोऽभ्रमिवातिवातः ॥ ४७ ॥ मृषा गिरस्ता ह्यसतीरसत्कथा न कथ्यते यद्भगवानधोक्षजः ॥ तदेव सत्यं तदुहैव मङ्गलं तदेव पुण्यं भगवद्गुणोदयम् ॥४८॥ तदेव रम्यं रुचिरं नवं नवं तदेव शश्वन्मनसो महोत्सवम् ॥ तदेव शोकार्णवशोषणं नृणां यदुत्तमश्लोकयशोऽनुगीयते ॥ ४९ ॥ न तद्वचश्चित्रपदं हरेर्यशो जगत्पवित्रं प्रगृणीत कर्हिचित् ॥ तद्ध्वाङ्क्षतीर्थं न तु हंससेवितं यत्राच्युतस्तत्र हि साधवोऽमलाः ॥ ५० ॥ स वाग्विसर्गो जनताघसम्प्लवो यस्मिन्प्रतिश्लोकमबद्धवत्यपि ॥ नामान्यनन्तस्ययशोऽङ्कितानि यच्छृण्वन्ति गायन्ति गृणन्ति साधवः

पनि विवशभावले उच्चस्वरमा 'हरये नमः' भन्दछ भने त्यो सबै पापबाट मुक्त हुन्छ ॥ ४६ ॥ जस्तै सूर्य अन्धकारलाई तथा प्रचण्डवायु मेघमालालाई छिन्न-भिन्न पार्दछ, त्यस्तै नै भगवान् अनन्तको कीर्तन तथा उनका प्रभाव सुन्नाले ती श्रीहरि उनीहरूको हृदयमा प्रविष्ट भएर उनको कष्ट निवारण गरिदिन्छन् ॥४७॥ जुन वाणीले भगवान् अधोक्षजको गुण-गान नगरियोस्, त्यो वाणी मिथ्या नै हो। जुन वचनले भगवान् श्रीकृष्णका गुणको उदय हुन्छ, त्यही वाणी सत्य, परम मङ्गलमयी तथा परम पवित्र मानिन्छ ॥ ४८ ॥ जसमा भगवान् उत्तम श्लोकका सुयश गान गरियोस्, त्यही वचन राम्रो, मनोहर, नित्य नवीन, मनलाई निरन्तर आनन्दित पार्ने तथा मनुष्यको शोक-समुद्रको शोषक हुन्छ॥४९॥जसमा संसारलाई पवित्र पार्ने श्रीहरिका सुयश अलिकति पनि गान गरिएको होस्, त्यो वचन कति नै विचित्र पदहरूले विभूषित भए पनि त्यो केवल काकरूपी नीच पुरुषद्वारा सेवित तीर्थ नै छ। हंसरूपी ज्ञानी पुरुष त्यसको सेवन गर्दैनन्। निर्मल स्वभावका साधुजन त्यहीं बसिरहन्छन्, जहाँ श्री अच्युतको गुण वर्णन भइरहन्छ ॥५०॥ जसको प्रत्येक श्लोक त्यो उरतो-

1437

असम्बद्ध भए पनि अनन्तको सुयशले युक्त छ भने, त्यो शब्द-रचना व्यक्तिका पाप-पुञ्ज नष्ट पार्ने खालका हुने गर्दछन् र साधु पुरुष त्यसैलाई सुन्ने, गान गर्ने र भन्ने गर्दछन् ॥५१॥ सर्वथा निष्काम र पूर्ण आत्मज्ञान पनि यदि भगवद्भक्तिले हीन छ भने त्यो प्राणी शोभा पाउन्न । जसको फल भगवान्‌लाई अर्पण गरिन्न त्यो कर्म जतिसुकै उत्तम खालको भए पनि शोभा पाउन सक्तैन । किनकि त्यो सदैव दुःखमय नै हुने गर्दछ ॥ ५२ ॥ वर्णाश्रम धर्मको पालन! तप तथा शास्त्रश्रवणादिमा जुन घोर परिश्रम गरिन्छ त्यसले केवल यश र लक्ष्मी नै प्राप्त हुन्छ, तर श्रीधरका चरण-कमलको सतत स्मृति त भगवान्‌का गुणानुवादको श्रवण-कीर्तनादिले नै रहन सक्छ—अन्यथा रहछ सक्तैन ॥५३॥ त्यो भगवान् श्रीकृष्णका चरणारविन्दको सर्वदा रहिरहने सम्झना सबै अमङ्गलहरू नाश गरिदिन्छ । त्यो शान्तिको विस्तार गर्दै तथा चित्तको शुद्धि, ईश्वर भक्ति र अनुभवज्ञान तथा वैराग्य सहित ज्ञान प्राप्त

॥५१॥ नैष्कर्म्यमप्यच्युतभाववर्जितं न शोभते ज्ञानमलं निरञ्जनम् ॥ कुतः पुनःशश्वदभद्रमीश्वरे न ह्यर्पितं कर्म यदप्यनुत्तमम् ॥५२॥ यशः श्रियामेव परिश्रमः परो वर्णाश्रमाचारतपःश्रुतादिषु ॥ अविस्मृतिः श्रीधरपादपद्मयोर्गुणानुवादश्रवणादिभिर्हरेः ॥ ५३ ॥ अविस्मृतिः कृष्णपदारविन्दयोः क्षिणोत्यभद्राणि शमं तनोति च ॥ सत्त्वस्य शुद्धिं परमात्मभक्तिं ज्ञानं च विज्ञानविरागयुक्तम् ॥ ५४ ॥ यूयं द्विजाग्र्या बतभूरिभागायच्छश्वदात्मन्यखिलात्मभूतम् ॥ नारायणं देवमदेवमीशमजस्रभावा भजताविवेश्य ॥ ५५ ॥ अहं च संस्मारित आत्मतत्त्वं श्रुतं पुरा मे परमर्षिवक्त्रात् ॥ प्रायोपवेशे नृपतेः परीक्षितः सदस्यृषीणां महतां च शृण्वताम् ॥ ५६ ॥ एतद्वः कथितं विप्राः कथनीयोरुकर्मणः ॥ माहात्म्यं वासुदेवस्य सर्वाशुभविनाशनम् ॥५७॥ य एवं श्रावयेन्नित्यं यामं क्षणमनन्यधीः ॥ श्रद्धावान्योऽनुशृणुयात्पुनात्यात्मानमेव सः ॥ ५८ ॥ द्वादश्यामेकादश्यां वा

गराइदिन्छ ॥ ५४ ॥ हे विप्रवर ! हजुर ठूला भाग्यमानी हुनुहुन्छ किनकि हजुर सबै देवतालाई त्यागेर केवल ती सर्वनियन्ता, सर्वात्मा, नारायणलाई बलियोसित आफ्नू अन्तःकरणमा स्थापित गरेर भक्तिभावले उनको सधैं भजन गरिरहनु हुन्छ ॥५५॥ फेरि हजुरले मलाई पनि त्यस आत्मतत्त्वको स्मरण गराइदिनु भयो, जुन मैले पूर्वकालमा अनशन गरिरहेका राजा परीक्षितको सभामा सुनिरहेका महर्षिहरूको सामुन्ने श्रीशुकदेवजीको मुखबाट सुनेको थिएँ ॥५६॥ हे विप्र हो ! जसका उदार कर्म अतिशय कथनीय छन् ती भगवान् वासुदेवको सबै अशुभहरू नष्ट पारिदिने राम्रो माहात्म्य मैले तिमीसित भनें ॥५७॥ जो पुरुष यसलाई एक प्रहर वा एक क्षण पनि अनन्य चित्तले सुनाउँछ र *श्रद्धा सहित सुन्दछ, त्यो अवश्य नै

* दृष्टान्त ( श्रद्धा ) गौटा कुलीन महात्माले ठूला ठूला धनीहरूको वास्ता नगरेर आफ्नी कन्या गौटा निर्धन व्यक्तिसित विवाह गरिदियो ! जब छोरी बिदा भएर पतिको घर पुगी तब त्यहाँ देखी—रोटीको आधा टुका र एक गिलास पानी राखेको छ । उसले पतिसित सोधी—यो किन राखेको हो ?' पतिले उत्तर दियो—'हिजो मैले आधा रोटी र आधा गिलास पानी खर्च गरेको थिएँ र आधा आजको निम्ति राखेको हो, त्यही हो !' यति सुनेर पत्नीले तत्काल माइत फर्कने आफ्नो विचार प्रकट गरी । पतिले भन्यो—'म पहिले नै जान्दथें-सम्पन्न घरकी कन्या गौटा निर्धनको घरमा निर्वाह गर्न सक्तिन !' पत्नीले भनी—'यो कुरा होइन, मत आफ्नो पिताप्रति मन्न गइरहेकी छु कि उनले मलाई यस्तन दिएका थिए—मेरो विवाह कुनै श्रद्धालु साधुसित गरिदिन्छु । के पतिको नाम श्रद्धा हो ! भगवान् प्रति यति निश्चय नहोस् कि त्यो भोलीदिन खानेकुरा अवश्य दिन्छ र तपाईं स्वयं खानेकुरा संचय गर्ने आवश्यकता ठान्नु होस् ।' भनाईको तात्पर्य के हो भने—जसले पेट दिएको छ, उसले खाने कुरा पनि अवश्य दिन्छ । तर यो अर्थ नसिक्नु कि मालिकले दिएका हात खुट्टा थोत्रो अकर्मण्य भई बस्नु र हठ गर्नु—मालिक स्वयं खाने कुरा पुन्याउँछ' मालिकलाई आफ्नू नोकर बनाई बेइज्जत पार्नु हो ।

आफ्नू चित्तवित्त पार्न समर्थ हुन्छ ॥४८॥ द्वादशी र एकादशीको दिन यो सुन्नाले दीर्घायु हुन्छ र पाठ गरे उसका सबै पाप नष्ट भएर जान्छन् ॥५९॥ यस संहिताको पुष्कर मथुरा र द्वारकापुरीमा जितेन्द्रिय भई उपवास गरेर पाठ गर्ने मनुष्य सबै प्रकारका भयबाट मुक्त हुन्छ ॥ ६० ॥ यसको संकीर्तन गर्नाले देवता, मुनि, सिद्ध, पितर, मनुष्य तथा सबै राजाहरू यस ग्रन्थको श्रवण तथा कथन गर्ने पुरुषलाई उसको इच्छित पदार्थ दिन्छन् ॥ ६१ ॥ वेद पढेपछि ब्राह्मणले क्रमशः मधुकुल्या अर्थात् महको नदी, घृतकुल्या र पयः कुल्याको कुरा कहिएको छ । यी सबै फल यसको अध्ययनले पनि प्राप्त हुन्छ ॥६२॥ हे विप्र हो ! यस पुराण-संहितालाई एकाग्र चित्तले पढेर पुरुष त्यो परमपद पाउँदछ, जसको साक्षात् भगवानले वर्णन गर्नुभएको छ ॥ ६३ ॥ यसको अध्ययन गर्ने ब्राह्मणलाई बुद्धिको, क्षत्रियलाई समुद्र पर्यन्त पृथिवीको र वैश्यलाई कोषाधिपत्यको प्राप्ति हुन्छ । शूद्र सबै पापबाट मुक्त हुन्छ । यस श्रीमद्भागवत बाहेक अन्य ग्रन्थमा कलिकलुष समूहलाई नष्ट पार्ने श्रीकृष्णको बारम्बार गुणगान गरिएको छैन । तर यसमा भने पद-पदमा प्रत्येक कथाका

शृण्वन्नायुष्यवान्भवेत् ॥ पठत्यनश्नन् प्रयतस्ततो भवत्यपातकी ॥ ५९ ॥ पुष्करे मथुरायां च द्वारवत्यां यतात्मवान् ॥ उपोष्य संहितामेतां पठित्वा मुच्यते भयात् ॥ ६० ॥ देवता मुनयः सिद्धाः पितरो मनवो नृपाः ॥ यच्छन्ति कामान्गृणतः शृण्वतो यस्य कीर्तनात् ॥ ६१ ॥ ऋचो यजूंषि सामानि द्विजोऽधीत्यानुविन्दते ॥ मधुकुल्या घृतकुल्याः पयःकुल्याश्च तत्फलम् ॥ ६२ ॥ पुराणसंहितामेतामधीत्य प्रयतो द्विजः ॥ प्रोक्तं भगवता यत्तु तत्पदं परमं व्रजेत् ॥६३॥ विप्रोऽधीत्याप्नुयात्प्रज्ञां राजन्योदधिमेखलाम् ॥ वैश्यो निधिपतित्वं च शूद्रः शुद्ध्येत पातकात् ॥ ६४ ॥ कलिमलसंहतिकालनोऽखिलेशो हरिरितरत्र न गीयते ह्यभीक्ष्णम् ॥ इह तु पुनर्भगवानशेषमूर्तिः परिपठितोऽनुपदं कथाप्रसङ्गैः ॥ ६५ ॥ तमहमजमनन्तमात्मतत्त्वं जगदुदयस्थितिसंयमात्मशक्तिम् ॥ द्युपतिभिरजशक्रशङ्कराद्यैर्दुरवसितस्तवमच्युतं नतोऽस्मि ॥ ६६ ॥ उपचितनवशक्तिभिः स्व आत्मन्युपरचितस्थिरजङ्गमालयाय ॥ भगवत उपलब्धिमात्रधाम्ने सुरऋषभाय नमः सनातनाय ॥ ६७ ॥ स्वसुखनिभृतचेतास्तद्व्युदस्तान्यभावोऽप्यजितरुचिरलीलाकृष्टसारस्तदीयम् ॥ व्यतनुत कृपया यस्तत्त्वदीपं पुराणं तमखिलवृजिनघ्नं व्याससूनुं नतोऽस्मि ॥ ६८ ॥ इति श्रीमद्भागवते

प्रसङ्गमा भगवान् विश्वमूर्तिको नै वर्णन छ ॥ ६४ ॥ ६५ ॥ जगत्को उत्पत्ति, स्थिति र प्रलयकारी रजोगुण आदि जसका शक्ति छन्, ब्रह्मा, इन्द्र एवं महादेव आदि देवलोकाधिपति पनि जसको माहात्म्य पूर्णरूपले जान्दैनन्, ती अजन्मा तथा अनन्त आत्मतत्त्वरूपी श्रीअच्युतलाई मेरो नमस्कार छ ॥ ६६ ॥ जुन भगवानले आफूमै बुद्धिमा प्राप्त प्रकृति आदिमा नौ शक्ति द्वारा स्थावर-जङ्गमका आश्रयरूप यो जगत्को रचना गरे ती एकमात्र ज्ञानस्वरूप देवप्रवर सनातन पुरुषलाई नमस्कार छ ॥ ६७ ॥ जसले आफ्नू चित्तद्वारा सुखमा डुबेर सबै भेदभाव सर्वथा त्यागिदिएका थिए, भगवानको सुन्दर लीलाहरूसित जसको स्थिरता आकृष्ट भएको थियो र जन-जनमा कृपा गरेर जगले यस परमार्थ प्रकाशक भागवत महापुराण प्रकाशित गरे, ती व्यासनन्दन शुकदेवलाई नमस्कार छ । ६८ ॥ इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥

१५४१

( श्रीमद्भागवतादि अनेक पुराणहरूको श्लोकसंख्या र श्रीमद्भागवत महिमा )—सूतजी भन्दछन्–ब्रह्मा, वरुण, इन्द्र तथा मरुद्गण दिव्य स्तोत्रले जसको स्तुति गर्दछन् र सामगान गर्ने ऋषि अङ्ग, पद, क्रम, तथा उपनिषद् सहित वेदले जसको गुणगान गर्दछन्, योगीजन ध्यान द्वारा चित्त स्थिर गरेर उसैमा लगाएको मनले जसलाई हेर्दछन्, देवता र असुर पनि जसको अन्त्य पाउँदैनन्, ती देवाधिदेवलाई प्रणाम छ ॥१॥ जसको पिठिउँ अमन्द अर्थात् गह्रौं मन्दराचलका शिलाहरूको टुप्पाले कन्याइएको थियो । जो केही निदाए झैं भएका थिए, ती कच्छरूपधारी भगवान्‌को श्वासवायु तिम्रो रक्षा गरोस् । उनको कलिकति संस्कारको अनुवर्तन गर्नाले जलका तरङ्ग वा ज्वार-भाटाको रूपमा समुद्र उर्लेको आजसम्म बन्द भएको छैन ॥२॥ सूतजी भन्दछन्–हे शौनक ! अब म पुराणहरूको संख्या, तिनको सम्भूतिसमूह, श्रीमद्भागवतको प्रतिपाद्यविषय, प्रयोजन, दान, पाठादि गर्ने विधि,

महापुराणे द्वादशस्कन्धार्थनिरूपणं नाम द्वादशोऽध्यायः ॥१२॥ सूत उवाच ॥ यं ब्रह्मा वरुणेन्द्ररुद्रमरुतः स्तुन्वन्ति दिव्यैः स्तवैर्वेदैः साङ्गपदक्रमोपनिषदैर्गायन्ति यं सामगाः ॥ ध्यानावस्थिततद्गतेन मनसा पश्यन्ति यं योगिनो यस्यान्तं न विदुः सुरासुरगणा देवाय तस्मै नमः ॥ १ ॥ पृष्ठे भ्राम्यदमन्दमन्दरगिरिग्रावाग्रकण्डूयनान्निद्रालोः कमठाकृतेर्भगवतः श्वासानिलाः पान्तु वः ॥ यत्संस्कारकलानुवर्तनवशाद्वेलानिभेनाम्भसां यातायातमतन्द्रितं जलनिधेर्नाद्यापि विश्राम्यति ॥ २ ॥ पुराणसंख्यासम्भूतिमस्य वाच्यप्रयोजने ॥ दानं दानस्य माहात्म्यं पाठादेश्च निबोधत ॥ ३ ॥ ब्राह्मं दशसहस्राणि पाद्मं पञ्चोनषष्टि च ॥ श्रीवैष्णवं त्रयोविंशच्चतुर्विंशति शैवकम् ॥ ४ ॥ दशाष्टौ श्रीभागवतं नारदं पञ्चविंशतिः ॥ मार्कण्डं नव वाह्नं च दशपञ्च चतुःशतम् ॥ ५ ॥ चतुर्दश भविष्यं स्यात्तथा पञ्चशतानि च ॥ दशाष्टौ ब्रह्मवैवर्तं लिङ्गमेकादशैव तु ॥ ६ ॥ चतुर्विंशति वाराहमेकाशीतिसहस्रकम् ॥ स्कान्दं शतं तथा चैकं वामनं दशकीर्तितम् ॥ ७ ॥ कौर्मं सप्तदशाख्यातं मात्स्यं तत्तु चतुर्दश ॥ एकोनविंशत्सौपर्णं ब्रह्माण्डं द्वादशैव तु ॥ ८ ॥ एवं पुराणसंदोहश्चतुर्लक्ष उदाहृतः ॥ तत्राष्टदशसाहस्रं श्रीभागवतमिष्यते ॥ ९ ॥ इदं भगवता पूर्वं ब्रह्मणे नाभिपङ्कजे ॥ स्थिताय भवभीताय कारुण्यात्सम्प्रकाशितम् ॥ १० ॥ आदिमध्यावसानेषु वैराग्याख्यानसंयुतम् ॥ हरिलीलाकथाव्रातामृतानन्दितसत्सु-

माहात्म्य भन्दछु, सुन ॥३॥ ब्रह्मपुराणमा दस हजार श्लोक छन् । उसै गरी पद्मपुराणमा चौबीस हजार श्लोक छन् ॥४॥ श्रीमद्भागवत अठार हजार, नारदपुराणमा पचीस हजार श्लोक मार्कण्डेयपुराणमा नौ हजार, अग्निपुराणमा पन्ध्र हजार चार सय ॥५॥ भविष्य पुराणमा चौध हजार पाँच सय, ब्रह्मवैवर्तपुराणमा अठार हजार, लिङ्गपुराणमा एघार हजार श्लोक॥६॥ वाराह पुराणमा चौबीस हजार, स्कन्दपुराणमा एकासी हजार एक सय र वामनपुराणमा दस हजार श्लोक छन् ॥ ७ ॥ कूर्मपुराणमा सत्र हजार श्लोक, मत्स्य पुराणमा चौध हजार, गरुडपुराणमा उन्नाइस हजार र ब्रह्माण्ड पुराणमा बाह्र हजार श्लोक छन् ॥८॥ यसरी पुराणसमूह सबै मिलाएर चार लाख श्लोकका छन् । तीमध्ये श्रीमद्भागवत अठार हजार श्लोकको नै छ ॥९॥ सर्वप्रथम भगवान् विष्णुले आफ्नु नाभिकमलमा बसेका संसारबाट डराएका ब्रह्मालाई अति करुणापूर्वक यो भागवत भन्नुभएको थियो ॥१०॥ यो आदि, अन्त्य र मध्यमा

वैराग्यपूर्ण कथाहरूले युक्त तथा हरिका लीला र कथामृतले पूर्ण हुनाले साधु एवं समस्त देवसमुदायलाई आनन्दित पार्दछ ॥११॥ सबै वेदान्तहरूको सार जुन ब्रह्म तथा आत्माको एकरूपता अद्वितीय वस्तु ( परब्रह्म ) हो, त्यही यसको विषय हो र उसको सहायताले प्राप्त हुने कैवल्य मोक्षपदलाभ नै यसको हेतु हो ॥१२॥ कुनै पनि पुरुष भाद्रपद महीनाको पूर्णिमा तिथिमा श्रीमद्भागवत सुनको सिंहासनमा राखेर दान गर्दछ, त्यसले परमगति प्राप्त गर्दछ ॥१३॥ जबसम्म अमृतको सागरस्वरूप श्रीमद्भागवतको श्रवण गरिन्न, तबसम्म सज्जन पुरुषको सभामा अन्यान्य पुराणको शोभा हुन्छ ॥१४॥ यो श्रीमद्भागवत सबै वेदान्त अर्थात् उपनिषद्हरूको सार मानिन्छ। जो पुरुष यसको रसामृतले आवृत छ, त्यस प्राणीको कहीं अन्यत्र कदापि प्रीति हुन सक्तैन ॥१५॥ जस्तै नदीहरूमा गङ्गा, देवताहरूमा विष्णु तथा वैष्णवहरूमा शङ्कर भगवान् सर्वश्रेष्ठ छन्, त्यस्तै पुराणहरूमा यो सर्वश्रेष्ठ छ॥१६॥ हे विप्र हो !

रम् ॥ ११ ॥ सर्ववेदान्तसारं यद्ब्रह्मात्मैकत्वलक्षणम् ॥ वस्त्वद्वितीयं तन्निष्ठं कैवल्यैकप्रयोजनम् ॥ १२ ॥ प्रौष्ठपद्यां पौर्णमास्यां हेमसिंहसमन्वितम् ॥ ददाति यो भागवतं स याति परमां गतिम् ॥ १३ ॥ राजन्ते तावदन्यानि पुराणानि सतां गणे ॥ यावन्न दृश्यते साक्षाच्छ्रीमद्भागवतं तम् ॥ १४ ॥ सर्ववेदान्तसारं हि श्रीभागवतमिष्यते ॥ तद्रसामृततृप्तस्य नान्यत्र स्याद्रतिः क्वचित् ॥ १५ ॥ निम्नगानां यथा गङ्गा देवानामच्युतो यथा ॥ वैष्णवानां यथा शम्भुः पुराणानामिदं तथा ॥ १६ ॥ क्षेत्राणां चैव सर्वेषां यथा काशी ह्यनुत्तमा ॥ तथा पुराणव्रातानां श्रीमद्भागवतं द्विजाः ॥ १७ ॥ श्रीमद्भागवतं पुराणममलं यद्वैष्णवानां प्रियं यस्मिन्पारमहंस्यमेकममलं ज्ञानं परं गीयते ॥ तत्र ज्ञानविरागभक्तिसहितं नैष्कर्म्यमाविष्कृतं तच्छृण्वन्विपठन्विचारणपरो भक्त्या विमुच्येन्नरः ॥ १८ ॥ कस्मै येन विभासितोऽयमतुलो ज्ञानप्रदीपः पुरा तद्रूपेण च नारदाय मुनये कृष्णाय तद्रूपिणा ॥ योगीन्द्राय तदात्मनाथ भगवद्राताय कारुण्यतस्तच्छुद्धं विमलं विशोकममृतं सत्यं परं धीमहि ॥ १९ ॥ नमस्तस्मै भगवते वासुदेवाय साक्षिणे ॥ य इदं कृपया कस्मै व्याचचक्षे मुमुक्षवे ॥ २० ॥ योगीन्द्राय नमस्तस्मै शुकाय ब्रह्मरूपिणे ॥ संसारसर्पदष्टं यो विष्णुरातममूमुचत् ॥ २१ ॥ भवे भवे यथा भक्तिः पादयोस्तव जायते ॥ तथा कुरुष्व देवेश नाथस्त्वं नो यतः प्रभो ॥ २२ ॥ नाम·

जस्तै सबै क्षेत्रहरूमा काशी अत्युत्तम छ, त्यस्तै सबै पुराणहरूमा भागवतको पद सबभन्दा उच्च मानिएको छ॥१७॥ यो श्रीमद्भागवत पुराण अत्यन्त निर्मल छ। यो वैष्णवहरूलाई सार्है प्रिय छ। यसमा परमहंसलाई प्राप्य अति विशुद्ध परम ज्ञानको वर्णन गरिएको छ। यसमा ज्ञान, वैराग्य र भक्ति सहित कर्मत्यागको निरूपण छ। भक्तिभावले यसको श्रवण, पाठ र मनन गर्ने पुरुष मोक्षपद पाउँदछ ॥१८॥ सबभन्दा पहिले जसले यस अतुलित ज्ञानप्रदीपलाई ब्रह्माजीको समक्ष प्रकट गरे, फेरि ब्रह्माको रूपबाट नारदजी तथा नारदरूपबाट मुनिवर श्रीव्यासलाई उपदेश दिए र व्यास-रूपले योगिराज शुकदेवलाई तथा शुकदेवरूपले अत्यन्त कृपालु भएर राजा परीक्षित्लाई सुनाए, त्यस शुद्ध, निर्मल, शोक-नाशक तथा अमृतस्वरूप परमसत्य श्रीहरिको हामी सबै ध्यान गर्दछौं ॥१९॥ जुन महापुरुषले ठूलो कृपा गरेर मोक्षका इच्छुक ब्रह्मालाई यो महापुराण सुनाएका थिए, ती जगत्का साक्षीस्वरू वासुदेव भगवान्

श्रीकृष्णचन्द्रलाई प्रणाम छ ॥ २० ॥ जसले संसाररूपी सर्पले डसेका राजा परीक्षितलाई मुक्ति दिलाए, ती ब्रह्मस्वरूप योगिराज श्रीशुकदेवजीलाई पनि नमस्कार छ ॥ २१ ॥ हे

सङ्कीर्तनं यस्य सर्वपापप्रणाशनम् ॥ प्रणामो दुःखशमनस्तं नमामि हरिं परम् ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे वैयासिक्यामष्टादशसाहस्र्यां पारमहंस्यां संहितायां द्वादशस्कन्धे त्रयोदशोऽध्यायः ॥ १३ ॥

## समाप्तमिदं 'वासिष्ठी' भाटीकासहितं श्रीमद्भागवतम् ॥

देवेशः ! हे प्रभो ! हजुर हाम्रा स्वामी हुनुहुन्छ । अतएव यस्तो कुनै उपाय गर्नु हवस् जसले मलाई जन्म-जन्ममा हजुरका श्रीचरणको भक्ति प्राप्त भइरहोस् ॥ २२ ॥ जसको नाम संकीर्तन सबै पापहरूलाई नष्ट पारिदिन्छ र जसलाई गरेको प्रणाम सबै दुःख शमन गरिदिन्छ, ती श्रीहरिलाई म नमस्कार गर्दछु ॥ २३ ॥

इति श्रीमद्भागवते महापुराणे द्वादशस्कन्धे पं० गौरीशंकर वशिष्ठकृत नेपाली भाषाटीकायां त्रयोदशोऽध्यायः ॥ १३ ॥

श्रीकृष्णार्पणमस्तु ।

यदक्षरं पदभ्रष्टं मात्राहीनं च यद्भवेत् । तत्सर्वं क्षम्यतां देव प्रसीद परमेश्वर ॥

